# अवधारणा र ऐतिहासिक मोडहरू

**विषय प्रवेश :**

मानवीय अभिज्ञान र अनुभूतिको सम्प्रेषण माध्यम नै भाषा हो । यसको प्रयोजनमा वक्ता, श्रोता, विषय, माध्यम र अवस्थाले प्रभाव पार्छन् । सामाजिक सञ्चारलाई मूल्यपूर्ण भाषिक अध्ययन क्षेत्र मानिएको छ । समाज भाषाविज्ञानका कोणबाट महिला, पुरुष र अन्य व्यक्तिले प्रयोग गर्ने भाषालाई बोलीको स्वरूपभित्र ठम्याउन सजिलो पर्छ । बोलीको औपचारिक स्वरूपलाई रेडियो माध्यमले विभिन्न कार्यक्रमको ढाँचाअन्तर्गत सार्वजनिक गर्ने गरेको पाइन्छ । अन्तर्वार्ता ती सबैमध्ये जीवन्त भाषा प्रयोग हुनसक्ने कार्यक्रम ढाँचा हो ।

सामाजिक संरचनाका दृष्टिले विभिन्न जाति, धर्म, उमेर, लिंग, दर्जा, वर्ग, शैक्षिकस्तर, संस्कृति, भौगोलिक स्थिति आदिको फरक पृष्ठभूमि भएका भाषिक समुदायले आ-आफ्नै रूपमा विचारको आदान-प्रदान गरी सामाजिक व्यवहार सञ्चालन गरिरहेका हुन्छन् । यसैले भाषा, संवाद र लैङ्गिक शैलीको अध्ययनका क्रममा विभिन्न पृष्ठभूमिका मानिसका अभिव्यक्तिमा विभिन्न स्वरूप फेला पार्न सकिन्छ । नेपाली भाषामा पनि महिला र पुरुषले एकआपसमा प्रयोग गर्ने भाषा, संवाद र लैङ्गिक शैलीमा सोच तथा संरचनागत मौलिकता पाइन सक्छ । यसको परीक्षण गर्न सकिने अन्तर्क्रियात्मक र लैङ्गिक सूत्र वा आधारहरू समाज भाषाविज्ञानमा तयार भइसकेका छन् । ती सूत्रलाई अन्तरविषयक अनुशासनमा ढालेर रेडियो अन्तर्वार्ताको पनि चिरफार गर्न सकिन्छ ।

महिला र पुरुषले बोल्ने नेपाली भाषाको वाक्यविन्यास, शब्दचयन र त्यसको प्रयोग तथा प्रस्तुतीकरण शैलीमा छुट्टै विशेषता भेटिने गरे पनि यस विषयमा पूर्णरूपमा लैङ्गिक अध्ययन, विश्लेषण, सर्वेक्षण र मूल्यांकनको अभाव छ। पश्चिमी समाजमा महिलाजन्य भाषिक अभिव्यक्तिमा शिष्टता, सजीवता र कोमलताजस्ता प्रवृत्ति झल्किने गरेको पाइन्छ (कोट्स सन् १९८६ : विविध)। पूर्वको जापानमा महिलाले शिष्ट भाषा प्रयोग गर्नुपर्छ भनेर औपचारिक शिक्षा नै दिइन्छ। अहिलेका जापानी नवयुवतीले भने समाजमा समतामूलक भाषा प्रयोग गर्न थालेका छन् (उएनो सन् २००६)। नेपाली समाजमा भने अझै पनि समाज भाषाविज्ञानका आधारमा भाषा, संवाद र लैङ्गिक शैलीको वैज्ञानिक अध्ययन अघि बढ्न सकेको छैन। सञ्चारमाध्यमबाट सार्वजनिक भएका नेपाली अन्तर्वार्ताको भाषा, संवाद र लैङ्गिक अध्ययनको पाटो पनि खासै गहकिलो र फराकिलो देखिएको छैन। नेपाली भाषी महिला र पुरुषले प्रयोग गर्ने कुनै पनि विषय, क्षेत्र, माध्यम र ढाँचाको अन्तरविषयक भाषिक अध्ययन परम्पराको विकास र विस्तारको खाँचो छ। सामुदायिक रेडियोबाट प्रसारण हुने अन्तर्वार्ताको भाषा पनि यस प्रसंगबाट पर छैन। यस पुस्तकले आधारभूत रूपमा यही अभावलाई पूर्ति गर्ने प्रयास गरेको छ।

बोल्ने र सुन्ने कुरामा बुझ्ने पनि जोडिएर आउँछ। भाषा सम्प्रेषण र ग्रहणलाई सामाजिक संरचनाले प्रभाव पार्छ। एउटी निम्नवर्गीय महिला मजदुरको बोलीलाई सोही स्तरका समवर्गीय महिलाले जति बढी बुझ्न र अनुभव गर्न सक्छन्, त्यति त्यही स्थानमा काम गर्ने फरक वर्गीय पृष्ठभूमिबाट आएकी अधिकृत महिलाले नबुझ्ने सम्भावना पनि रहन्छ। महिला-महिलाबीचको अवस्था त यस्तो हुनसक्छ भने हजारौँ वर्षदेखि सामाजिक लिंगभेदले जरा गाडेको समाजमा पुरुषसितको भाषिक सम्प्रेषण र ग्रहणको पाटो झनै फरक हुनसक्छ। एउटै छाना, खाना र आँगन प्रयोग गरेर हुर्किए पनि महिला र पुरुषले बुझ्ने र व्यवहार गर्ने तरिका फरक हुनसक्छ। त्यो कुरा उनीहरूको बोली र बोल्ने तरिकाबाट ठम्याउन सकिन्छ। त्यस्तै, एउटै ठाउँमा पढेका व्यक्ति भए पनि दुई भिन्न जातीय संस्कृतिको पृष्ठभूमिबाट आएका छन् भने तिनीहरू बीचको बोलाइमा वाक्य र शब्दस्तरमा त्यति फरक नदेखिए पनि ध्वनि र भावका स्तरमा टड्कारो भेद पाउन सकिन्छ। भाषा र संवादबाट झल्किने लैङ्गिक भावका अनेकौँ सूक्ष्म भेदहरू समाज भाषाविज्ञानका माध्यमबाट पत्ता लगाउन र पर्गेल्न सकिने कुरा

हुन् । यस पुस्तकमा समाज भाषिक सूत्रका आधारमा समेत रेडियो अन्तर्वार्ताको नेपाली भाषालाई व्याकरण, अन्तर्क्रिया र लैङ्गिक सूत्रहरूका आधारमा अध्ययन गरी माध्यम र समाजका विभिन्न कोणबाट व्याख्या र विश्लेषण गरिएको छ ।

भाषामा लैङ्गिक अध्ययनको परम्परा समाज भाषाविज्ञानको सैद्धान्तिक जगबाट विकसित भएको हो । महिला, पुरुष र बाल बोलीमा केही आफ्नै खालका स्वरूप र विशेषता भेटिन्छन् । महिला बोलीलाई भाषिक र भाषेतर क्षेत्रको प्रयोग बाहुल्य, विशेष स्वरूप र प्रवृत्तिका आधारमा पुरुष बोलीबाट अलग्याएर निचो देखाउने चलन पुरानो भइसकेको छ । समाज भाषाविज्ञानले महिला र पुरुषका बोलीमा पाइने समतामूलक विशेषता र विभेदकारी स्वरूप पहिल्याउन मद्दत गर्छ । समतातिर उन्मुख समाजमा सञ्चारमाध्यमबाट प्रचार-प्रसार भइरहेका भेदभावपूर्ण भाषिक र भाषेतर अवशेषलाई पहिल्याएर पर्गेल्न पनि यसले सघाउँछ ।

यस पुस्तकमा क्रमशः भाषा, संवाद र लैङ्गिक खण्डमा प्रवेश गर्नुअघि समाज भाषाविज्ञानको लैङ्गिक अवधारणा, अन्तर्क्रियात्मक सूत्रहरू र संक्षिप्त इतिहासका अतिरिक्त सामुदायिक रेडियोको अवधारणा, विश्व इतिहास, समता, शैली, संहिता र रेडियो सगरमाथाका बारेमा आधारभूत जानकारी प्रस्तुत गरिएको छ ।

## समाज भाषाविज्ञानको लैङ्गिक अवधारणा

समाज भाषाविज्ञानमा महिला बोलीका विशेषता र लिंगभेदी अवशेष पहिल्याउन भाषिक र भाषेतर कोणबाट विश्लेषण गर्ने दस लैङ्गिक सूत्रहरू[१] छन् । विभिन्न समयमा एक लैङ्गिक समूह र मिश्रित लैङ्गिक समूहमा भएका विभिन्न अन्तर्वार्ता र अन्तर्क्रियाको अध्ययन गरी स्थापना गरिएका यी सूत्र वर्तमान समाजभाषिक अध्ययनका लागि पनि उपयुक्त हुने देखिएका छन् । ती सूत्रहरू यसप्रकार छन् :

१. विकिपेडिया फाउन्डेसन, इङ्क (सन् ?) , **सोसियोलिङ्गिवस्टिक्स,**
विकिपेडिया द फ्रि इन्साइक्लोपेडिया, उपलब्ध :
en.wikipedia.org/wiki/Interactional_sociolinguistics.
हेरिएको मिति : 6 August 2008.

- **अल्पतम प्रत्युत्तर**

अँ, हँ, ए~~ जस्ता अर्धभाषिक स्वरूप प्रयोग गरेर सहयोगात्मक भाषिक शैली प्रयोग गर्नमा महिला अगाडि देखिएका छन्। सन् १९७७ मा डन जिम्मरम्यान र क्यान्डास् वेस्टले गरेको अध्ययनमा पुरुषले अल्पतम प्रत्युत्तरको प्रयोग सामान्यत: पालो स्वीकृतिका लागि गरेको पाइएको छ। सन् १९९० मा एल.एल. कारिलले पनि अल्पतम प्रत्युत्तरमा महिला अगाडि भएको पत्ता लगाएको देखिन्छ।

- **प्रश्नात्मक अभिव्यक्ति**

कुराकानीका क्रममा 'हो र ?', 'ए~~ हो ?', 'हैन त ?', 'है ?' जस्ता प्रश्नात्मक अभिव्यक्ति महिलाले बढी गर्ने गरेको पाइएको छ। महिलाले सामान्यत: उत्तरको अपेक्षा नै नगरीकन प्रयोग गर्ने यस्ता अभिव्यक्तिले लाक्षणिक महत्त्व पनि राख्छन्। यसले सहयोगात्मक धारणामा भाषाको प्रयोग गर्ने महिलाको प्रवृत्तिलाई उजागर गरेको छ। यस खालको अध्ययन सन् १९७१ मा डगलस वार्नेसले, सन् १९८३ मा अलेक्सान्ड्रा डुन्डास टोडले र सन् १९९५ मा एम.ए. फिट्जप्याट्रिक र साथीहरूले गरेको पाइन्छ।

- **पालो लिने दिने प्रवृत्ति**

महिलाले कुराकानीका क्रममा पालो लिने र दिने प्रवृत्ति देखाउने गरेको पाइन्छ। सन् १९७४ मा स्याक्स र साथीहरूले र सन् १९९१ मा भिक्टोरिया डिफ्रान्सिस्कोले गरेको अध्ययनबाट यस्तो पुष्टि भएको छ।

- **कुराकानीको विषय बदल्ने बानी**

कुराकानीको विषय बदल्ने प्रवृत्ति महिलामा कम पाइन्छ। सन् १९९० मा ब्रुस डोर्भालले गरेको अध्ययनअनुसार, एकै खालका लैङ्गिक साथीहरूबीच अन्तर्क्रिया हुँदा पुरुषले बढी विषय बदल्ने गरेको पाइन्छ।

- **आत्म प्रकाशन**

महिलामा आफ्ना समस्या, अनुभव सुनाउन र अरूलाई सहानुभूति प्रकट गर्न अघि सर्ने प्रवृत्ति देखिन्छ। सन् १९९१ मा डेबोरा टानेन र सन् १९९२ मा के डिन्डिया र एम. एलेनले गरेको अध्ययनमा यस्तो प्रवृत्ति झल्किन्छ।

- **मौखिक आक्रमण**

धम्की, चिच्याहट, अट्टहास, मनपरी बोल्ने र नाम किटेर बोल्नेजस्ता मौखिक आक्रमणको प्रवृत्ति महिलामा कम पाइन्छ। सन् १९७२ मा विलियम ल्याबोभ र सन् १९९० मा डोन्ना एडरले गरेको अध्ययनले यस तथ्यको पुष्टि गरेको छ।

- **श्रवण र सचेतता**

महिलाले कुराकानी सुन्नमा पनि चाख राख्छन्। साथै, असम्बन्धित विषयमा पनि कम हस्तक्षेप गर्ने गर्छन्। सन् १९७५ मा डन जिम्मरम्यान र क्यान्डास वेस्ट, सन् १९८० मा पी. फिसम्यान र सन् १९९१ मा भिक्टोरिया डि फ्रान्सिस्कोको अध्ययनले यस्तो देखाएको छ।

- **प्रभुत्व र पराधीनता**

विशेषज्ञ महिला समूहमा प्रभुत्व देखाउनभन्दा अन्तर्क्रियात्मक सहभागिता रुचाउँछन्। औसत महिलामा बढी बोल्ने क्षमता हुन्छ। यो कुरा सन् १९६६ मा एच.जे. आइसेन्क, सन् १९८० मा हेलेना एम. लिट-पिलिग्रिनी र सन् १९९३ मा जे. कोट्सले गरेको अध्ययनबाट पुष्टि भएको छ।

- **शिष्टता, मिलनसारिता र कोमलता**

महिला आफ्नो बोलीमा प्राय: शिष्टता, मिलनसारिता र कोमलता झल्कोस् भन्ने चाहन्छन्। अनकनाहट र पूरक प्रश्नका कारण 'कमजोर भाषा' भनिए पनि महिलामा अरूलाई दु:खी तुल्याउने र छुच्ची नदेखिने भावनाले शिष्टता प्रकट भएको हुन्छ। सन् १९७८ मा ब्राउन पेनेलोप र स्टेफेन लेभिन्सन, सन् १९८० मा ब्राउन पेनेलोप र सोही साल ओवार र एट्किन्सले गरेको अध्ययनबाट यो तथ्य पुष्टि हुन्छ।

- **प्रशंसापरक भाषा**

प्रशंसापरक भाषाशैली पनि महिलाले बढी प्रयोग गर्छन्। सन् १९८३ मा जेन्निफर कोट्सले गरेको अध्ययनअनुसार प्रशंसापरक भाषा शिष्टता, मिलनसारिता र कोमलतासितै सम्बन्धित देखिन्छ।

व्यक्तिको लैङ्गिक विशेषतामात्रै रेडियो अन्तर्वार्तामा प्रभाव पार्ने तत्त्व होइन । महिला बोलीका विशेषता पहिल्याउन पुरुष बोलीसित तुलना गरी हेर्ने चलन छ । समाजमा महिला र पुरुषको अप्राकृतिक लैङ्गिक भूमिका रहेसम्म दुईथरीको बोलीचालीमा पाइने भिन्नताका आधारमा नै एकअर्काका बोलीका विशेषता पत्ता लगाउन सजिलो पनि हुन्छ । सोही क्रममा विभिन्न स्रोत र अनुभवका आधारमा फेला परेका केही भिन्नतालाई समेटेर यहाँ प्रस्तुत गरिएको छ,

- पुरुष बोलीको तुलनामा महिला बोलीका प्रायः फरक विशेषता हुन्छन् र उनीहरूको उच्चारण तरिका पनि फरक हुन्छ (वार्धौघ सन् १९८६ : ३०३) ।

- महिला र पुरुषका आ-आफ्नै खालका फरक भाषिक र भाषेतर अभिव्यक्ति प्रणाली पनि हुनसक्छन् । उनीहरूको चलाइ, चेष्टा वा भाव अभिव्यक्त गर्ने तरिका पनि फरक-फरक हुनसक्छ । ती अर्धभाषिक र भाषेतर अभिव्यक्ति प्रणालीबाट महिलालाई पुरुषका अगाडि बढी विनम्र तथा आज्ञाकारी देखापर्न सल्लाह दिइएको हुन्छ (उएनो सन् २००६) ।

- महिलाको प्रायः नाम, थर र सम्बोधन पुरुषकोभन्दा फरक रहेको हुन्छ । नामले संकेत गर्ने कुरा अन्य शब्दहरूले गर्ने संकेतभन्दा विशिष्ट हुन्छ । सञ्चार माध्यमले त्यस्तो भावनाको प्रदर्शन गर्छन् (मिलर र स्विफ्ट सन् १९९७ : ७) ।

- पुलिंग, स्त्रीलिंग, नपुंसकलिंग जस्ता व्याकरणिक विधान र पुरुष, महिला, नपुंसक जस्ता लैङ्गिक विभेदबीच हुने सम्भावित सम्बन्धका कारण आउने भेद पनि महिला अभिव्यक्तिमा प्रशस्त देखापर्न सक्छ । महिलाले थाहै नपाईकन आफैंलाई होच्याउने र नगण्य देखाउने शब्द र अर्धभाषिक स्वरूपलाई प्रयोग गरिरहेका हुन्छन् (मिलर र स्विफ्ट सन् १९९७ : X) ।

- महिलाको लैङ्गिक भूमिका बदलिएको छ भने उनीहरूले प्रयोग गर्ने भाषामा पनि त्यसको संकेत देखिन्छ । तैपनि विशेषज्ञ र विशिष्ट पदधारी महिला शक्तिको भाषाभन्दा समता र समझदारीको भाषा बोल्न रुचाउँछन् (बालेन सन् २००१ : १ र ९) ।

- महिलालाई सञ्चार माध्यममा विशेषज्ञभन्दा पीडित र पूरक प्रतिनिधिका रूपमा बोल्न बढी सहभागी गराइन्छ । भूमिकाले उनीहरूको बोलीलाई तल पार्न र निचो देखाउन सक्छ । (विविध स्रोत)

- एउटै लैङ्गिक समूहमा हुने कुराकानीमा महिला बढी भिन्न तरिकाले बोल्छन् । मिश्रित लैङ्गिक समूहमा फरक शैलीको प्रयोग कम हुन्छ । ( विविध स्रोत)

- महिला संवाद वा रापोट शैलीमा बोल्छन् । सम्बन्ध स्थापना र कायम गर्नमा बढी ध्यान दिन्छन् । सञ्चारमाध्यम र आमनेसामने कुराकानीमा यस्तो शैलीको प्रयोग व्यापक भेटिन्छ । (विविध स्रोत)

- पुरुषले बोल्न सक्ने कतिपय विषयमा महिलालाई मौन रहनुपर्ने अवस्था पनि छ । सञ्चारमाध्यमले समाजलाई कतै न कतै, कुनै न कुनै तरिकाले प्रतिविम्बित गरिरहेका हुन्छन् । । (विविध स्रोत)

## अन्तर्क्रियात्मक सूत्रहरू

भाषा उच्चारण, व्याकरण र शब्दभण्डार मात्र होइन । भाषामा सामाजिक सम्बन्ध स्थापनाका लागि कसरी बोल्ने भन्ने कुरा पनि महत्त्वपूर्ण हुन्छ (ट्रडजिल सन् १९९५ : ११०) । भाषाको अर्थविज्ञानमा भएको संवादात्मक सिद्धान्तमा पाउल ग्राइसको सहकार्यात्मक सिद्धान्त (यादव र रेग्मी २०५८ : ३१२) पनि छ । सन् १९६७ मा हार्भर्ड विश्वविद्यालयको विलियम जेम्स भाषणमालामा ग्राइसले दिएका व्याख्यानहरूमा आधारित यो सिद्धान्तले संवादलाई गुणस्तर, मात्रा, सम्बन्ध र तरिका गरी चार कोणबाट हेरेको छ । यी कुरा सन् १९७५ मा प्रकाशित लजिक एन्ड कन्भर्सेसन अर्थात तर्क र संवाद शीर्षकका लेखमा पनि छन् । ग्राइसको यस सिद्धान्तबारे विकिपेडियाको इन्टरएक्सनल सोसियोलिङ्ग्विस्टिक्समा पनि चर्चा गरिएको छ । ग्राइसले स्थापना गरेका सूत्रलाई रेडियो अन्तर्वार्ताको विश्लेषणमा पनि उपयोग गर्न सकिन्छ । रेडियोमा सफल र सहज संवादका लागि यिनै चार सूत्रमा उत्कृष्ट समायोजन हुनुपर्ने देखिन्छ ।

- **संवादको गुणस्तर**

असत्य र प्रमाणहीन होइन, सत्य र ठहरिने कुरा बोल्नुपर्छ । अनि बल्ल संवाद गुणस्तरीय हुनसक्छ । रेडियो अन्तर्वार्तामा असत्य र प्रमाणहीन कुरालाई स्थान दिनु हुँदैन । झुक्किएर दिइएछ भने पनि गल्ती सच्याउने आचारसंहिताको पालना गर्नुपर्छ ।

- **संवादको मात्रा**

चाहिने कुरा मात्र बोल्नु र नचाहिने नबोल्नु भन्ने सल्लाह जुनसुकै खालको संवादमा पनि लागू हुन्छ । रेडियो अन्तर्वार्ताका लागि त यो कुरा समयका कोणबाट पनि ध्यान दिनुपर्ने हुन्छ । आवश्यक सूचना मात्र भएको संवादले मात्र सहकार्यमा निर्दिष्ट दिशा र लक्ष्य हासिल गर्न सक्छ ।

- **संवादको सम्बन्ध**

संवादबाट निर्दिष्ट दिशा र लक्ष्यमा पुग्नका लागि सहभागीबीच प्रश्न र उत्तरको धार पनि मिल्नुपर्छ । यसले संवादको सम्बन्धलाई बलियो बनाउँछ । सम्बन्ध बलियो भए संवादको सन्दर्भ र सिलसिला मिल्छ ।

- **संवादको तरिका**

भन्न खोजेको कुरा नढाँटीकन सोझै र सुरैसँग भन्नुपर्छ । अलमल, अनकनाहट र असावधानीले संवादलाई गुणस्तरहीन, भद्दा र तितरवितर बनाइदिन्छ । तरिका मिलेन भने संवाद निरर्थक हुनसक्छ । रेडियोमा सार्थक संवाद हुनुपर्छ । वक्तालाई अस्पष्टता र संदिग्धता हटाएर सङ्क्षेपमा र क्रमैसँग भन (यादव र रेग्मी २०५८: ३१५) भन्ने सल्लाह ग्राइसले दिएका छन् ।

## समाज भाषाविज्ञानको सङ्क्षिप्त इतिहास

समाज भाषाविज्ञानको इतिहास अन्य भाषाविज्ञानको इतिहासको तुलनामा त्यति लामो छैन । भाषाको सामाजिक पक्ष आधुनिक चेतनाको उपज भए पनि समाजभाषिक अध्ययनको सूत्र खोज्दै जाँदा बीसौं शताब्दीको सुरुसम्मै पुग्न सकिन्छ । स्विट्जरल्यान्डका गौचतले सन् १९०० ताका गरेको भाषिक अध्ययनमा सामाजिक पक्ष भेटिन्छ भने भारतीय र जापानी भाषाशास्त्रीले सन् १९३० ताका गरेको भाषिक अध्ययनलाई सामाजिक अवधारणासँग जोडेर हेर्न सकिन्छ । अमेरिकामा विलियम ल्याबोभ र बेलायतमा बासिल बर्नस्टेनले सन् १९६० ताका समाज भाषावैज्ञानिक अध्ययनको सुरुवात गरेको देखिन्छ । शब्दस्रोतलाई आधार मान्ने हो भने समाज भाषाविज्ञानको इतिहास आजभन्दा ४५ वर्षमात्रै पुरानो फेला पर्छ ।

समाज भाषाविज्ञान शब्दको प्रयोगका सम्बन्धमा खोतल्दै जाँदा सन् १९६२ सम्म पुग्न सकिन्छ । त्यतिबेला सोभियत रूसमा प्रचलनमा आएको सोसियोलिङ्ग्विस्टिका (Sociolinguistika) र सोसियलनाजा लिङ्ग्विस्टिका (socialnaja linguistika) भन्ने शब्द तथा पदावली नै आजको सोसियोलिङ्ग्विस्टिक्स (Sociolinguistics) शब्दका स्रोत हुन् ।

बीसौं शताब्दीको उत्तरार्द्धको सुरुमै अनुभववादी भाषाशास्त्री, समाज भाषाशास्त्री, मनोभाषाशास्त्री आदिले भाषाको समाजपरक अध्ययन परम्पराको जग बसालेका तथ्य भेटिन्छ । भाषिक परिवर्तनको सामाजिक अभिप्रेरणापरक अध्ययनको जग १९ औं शताब्दीको उत्तरार्द्धको तरंग सिद्धान्तमा आधारित छ ।

सन् १९५२ मा हाभेर सी. कर्रीले अंग्रेजी भाषामा बोल्ने बानी र सामाजिक स्तरका बारेमा अध्ययन गरी भाषाको समाजपरक अध्ययन परम्परालाई अघि बढाएको पाइन्छ । भाषिक अध्ययनमा सामाजिक तत्त्वलाई छोएर अध्ययन गर्ने परिपाटी त्यतिबेलै बसेको पाइए पनि सामाजिक कोणबाट भाषाको अध्ययन विश्लेषण गर्ने पहिला विद्वान् डेल हाइम्सलाई मानिएको छ । उनले सन् १९६२ मा नै भाषालाई 'एथ्नोग्राफी अफ स्पिच' का रूपमा व्याख्या गरेको भेटिन्छ । दुई वर्षपछि उनले भाषा तथा समाजशास्त्री जोन जे. गम्पर्जसँग मिलेर 'समाज र संस्कृतिभित्र भाषा' नामक पुस्तक प्रकाशमा ल्याएको पाइन्छ ।

त्यसअघि सन् १९२० ताका नै डेल हाइम्सले आफ्नो विशालकाय ग्रन्थमा भाषाको सामाजिक महत्त्वका बारेमा चर्चा गरिएको सामग्री समाविष्ट गरेको पाइन्छ भने सन् १९२७ मा लियोनार्द ब्लुमफिल्डले साक्षर र निरक्षरको बोलीको तुलनात्मक अध्ययन गरेको भेटिएको छ ।

यसैगरी, सन् १९३७ मा जे. आर. फर्थद्वारा समाजशास्त्रीय भाषाविज्ञानका बारेमा चर्चा गरिएको 'प्रोग्राम्याटिक एस्से' आएको देखिन्छ भने सन् १९४८ मा म्याक डेभिडद्वारा दक्षिण क्यारोलिनामा गरिएको पश्च-स्वर 'र' को अध्ययनमा सामाजिक महत्त्व भएको कुरा झल्काइएको छ । त्यस्तै, सन् १९५८ मा जे. फिसरले सामाजिक सूचकहरूमा भाषिक रूप र विभक्तिको अध्ययन तथा विश्लेषण गरेको पाइन्छ भने सन् १९५९ मा पी. गार्भिनले भाषिक स्तरीयताको विभाजन गर्ने तत्त्वबारे अध्ययन गर्ने प्रयत्न गरेको देखिन्छ ।

समाज भाषाविज्ञानमा आधारित अध्ययनका लागि सन् १९६४ लाई उर्वर वर्ष र अनुभववादी अनुसन्धानको क्षेत्रमा प्रवेश-विन्दुका रूपमा मानिएको छ । यसै वर्ष पहिलो सम्मेलन पनि भएको थियो ।यो वर्ष जोन जे. गम्पर्जद्वारा सामाजिक भाषिकाको अध्ययन, रोजर शुएको सम्पादनमा समाजभाषिका बारेको ग्रन्थ प्रकाशन, विलियम ल्याबोभबाट विशेष सामाजिक समूहबीच हुने भाषा ग्रहणबारे अध्ययनको प्रस्तुति र ल्याबोभकै 'डिजर्टेसन अन द सोसल स्ट्राटिफिकेसन अफ इंग्लिस' को न्यूयोर्क सहरमा आधारित अध्ययन भएको देखिन्छ ।

यसरी समाज भाषाविज्ञानमा आएको अनुभवीकरण विभिन्न प्राज्ञिक रुचि र विशेष दुर्बोध्यपनबाट ग्रसित भएको पाइए पनि सन् १९६४ लाई समाज भाषावैज्ञानिक र भाषाको समाजशास्त्रीय अनुशासनमा अध्ययन गर्ने परिपाटीको बढी प्रयोग भएको वर्षका रूपमा मान्न सकिने तर्क नर्बर्ट डिट्मरको छ (नर्बर्ट सन् १९७६ : १२८) ।

उर्वर वर्षपछिका समयमा भाषाको समाज भाषावैज्ञानिक अध्ययनमा व्यापकता, सूक्ष्मता तथा वर्णनात्मकता थपिँदै गएको पाइन्छ । भाषाको समाजवैज्ञानिक

अध्ययनले व्यक्ति अथवा वक्ता, स्थान, काल, परिवेश तथा पृष्ठभूमिका आधारमा अध्ययन गर्न सकिने थुप्रै सम्भावनालाई आफ्नो पकडमा लिएको देखिन्छ ।

सन् १९६६ मा विलियम ब्राइटले पनि सामाजिक भाषिकाहरूको अनुसन्धान गरेको भेटिन्छ । सोही वर्ष एलेन डि. ग्रिमसा, सन् १९६७ मा डेल हाइम्स र सन् १९६८ मा जोसुआ ए. फिसम्यानले व्याकरण नियमसमर्थक विचारको अध्ययनमा रुचि देखाएको पाइन्छ । उनीहरूले अन्य कुराका बीच भाषिक, मानवशास्त्रीय र समाजशास्त्रीय कोणबाट समेत समाज भाषावैज्ञानिक अध्ययनमा सघाउ पुऱ्याउने कुरा उठाएको देखिन्छ ।

पछिका यी वर्षमा अनुभववादी, सिद्धान्तवादी र व्यवहारवादी भाषिक अनुसन्धान कार्यहरू ज्यादै नै बढेको पाइन्छ । हाइम्स आफ्नै सिद्धान्तमा आधारित अनुशासनमा अघि बढेको पाइन्छ भने फिसम्यान र ल्याबोभले उनीहरूको परम्परागत अनुशासनलाई व्यापक बनाउने लक्ष्य लिएको देखिन्छ । पहिले फिसम्यान र ल्याबोभ भाषाको समाजशास्त्रमा रुचि राख्ने भए पनि पछि उनीहरूले सामाजिक परिप्रेक्ष्यमा भाषिक विश्लेषण गर्न थालेको भेटिन्छ ।

सन् १९६७-६८ मा चर्चामा आइसकेको गम्पर्ज, हाइम्स, ल्याबोभ र एस्. लिबर्सनको 'वैयक्तिक सञ्चार' त्यतिबेला भाषिक अनुशासनको प्रश्नमा केन्द्रित रहेको पाइन्छ । साथै, विषयलाई ध्यानमा राखी वैयक्तिक सञ्चारबारे छलफल हुने गरेको पाइन्छ ।

सन् १९७१ मा ग्रिमसाले भने अमेरिकी समाजको भाषिक अध्ययनमा जरुरी ठहऱ्याएको विषय 'वैयक्तिक सञ्चार' लाई नै पुन: वैचारिक धरातलमा उभ्याएको भेटिन्छ । अनुभववादी अनुसन्धानले विस्तारै समाज भाषावैज्ञानिक अनुसन्धानलाई बढी प्रस्ट रूपमा प्रस्तुत गर्न सम्भव तुल्याएपछि व्याकरण नियमसमर्थक चरणको अन्त्य भएको पाइएको छ ।

यसपछि पनि समाज भाषाविज्ञानका अध्ययनका सम्भावनाहरू फराकिँदै गएको देखिन्छ र समाजसित सम्बन्धित लैङ्गिकलगायत यावत पक्षका आधारमा भाषाको अध्ययन गर्न सकिने मार्ग प्रशस्त भएको छ ।

## भाषामा लैङ्गिक अध्ययनका मोडहरू

युरोपेली, अमेरिकी र जापानी भाषामा विभिन्न क्षेत्र, जाति, धर्म, संस्कृति, शैक्षिकस्तर, लिंग, आर्थिक अवस्था, उमेर आदिका आधारमा पृथक-पृथक भाषाका पृथक-पृथक अध्ययन भएका प्रशस्त उदाहरण भेट्न सकिन्छ । भाषाको वर्णनात्मक अध्ययन गर्दै समाज भाषाविज्ञानको संख्यात्मक अध्ययन-सर्वेक्षण पनि पाश्चात्य र पूर्वीय भाषिक क्षेत्रमा भइसकेको पाइन्छ । यस क्रममा इरेन भान बालेनको 'रुस्कोए अन फाइभ' भन्ने बीबीसी वार्ता कार्यक्रमको भाषिक अध्ययन स्मरणीय छ । मूलधारको विद्युतीय सञ्चारमाध्यमकै भए पनि सो अध्ययनले सन् १९७०-८० को दशकको 'प्रभुत्व' र सन् १९८०-९० दशकको 'पृथक' अवधारणालाई केलाउँदै भाषामा समतावादी प्रयोगको अवधारणालाई अघि सारेको छ । सन् १९९७-९८ बीचका पाँच महिनाको पाँचवटा कार्यक्रमका कुल १० घण्टाको कथ्य सामग्रीका आधारमा गरिएको सो अध्ययनले मूलतः महिला र पुरुषले बोल्ने क्रममा वाक्यका बीचमा घुसाइने शब्द र पदावली जस्ता 'अनावश्यक' ठानिएका भाषिक स्वरूपको प्रवृत्ति र कारण खोतलेको छ । भाषाले मानिसको पहिचानसहित सामाजिक लिंग सिर्जना गर्न सघाएजस्तै मानिसमा रहेको पुलिङ्गी र स्त्रीलिङ्गीसम्बन्धी धारणा बदलियो भने उनीहरूको भाषा पनि बदलिन्छ भन्ने मान्यतालाई उचित मान्न सकिन्छ (वासी सन् २००४) । यही मान्यतामा सो अध्ययन गरिएको छ ।

यसैगरी, फ्लोरिडा इन्टरनेसनल युनिभर्सिटीका डा. कार्मेलिया सुलिभान र डानियल ओकोनेलले मिडिया अन्तर्वार्तामा बिल क्लिन्टन र हिलारी क्लिन्टनको भाषामा पाइने लैङ्गिक भिन्नताबारे अध्ययन गरेको पाइन्छ । जर्नल अफ साइकोलिङ्ग्विस्टिक्स रिसर्चमा सन् २००७ को अक्टुबरको पहिलो साता प्रकाशित सो अध्ययनले अन्तर्वार्तामा बिल क्लिन्टन र हिलारी क्लिन्टनले व्यापक रूपमा आ-आफ्नो लैङ्गिक भूमिका दर्शाएको फेला पारेको छ । उनीहरूको भाषाले पुरुष र महिलामा रहेको ऐतिहासिक शक्तिसम्बन्धलाई पनि झल्काएको छ (सुलैमन र ओकोनेल सन् २००७) ।

जापानमा पनि भाषाको लैङ्गिक अध्ययनको लामो परम्परा भेटिन्छ । त्यहाँ पूर्वआधुनिककालदेखि नै अदालती महिलाको भाषा उच्चवर्गीय जापानी महिलाको

पहिचान बन्यो । आदर्श महिलाको भाषा कस्तो हुन्छ भन्ने चर्चा-परिचर्चासहित पाठ्यपुस्तकहरू निर्माण गरिएपछि सञ्चार र शिक्षाका माध्यमबाट महिलालाई पुरुषभन्दा शिष्ट तरिकाले बोल्न प्रेरित र प्रशिक्षित गर्ने कामसमेत भएको पाइन्छ । जापानमा महिलालाई पुरुषभन्दा शिष्ट र लैङ्गिक रूपमा सचेत भएर बोल्न सिकाउने पाठ्यपुस्तकहरू विद्यालय तहदेखि नै पढाइने गरेको छ । जापानी भाषामा लैङ्गिक वर्गभिन्नता पनि छ (वासी सन् २००४)। यस्तो भए पनि पछिल्लो समयमा जापानका नवयुवती पुस्ताले बोल्ने भाषामा परिवर्तन आएको छ । उनीहरूले लैङ्गिक सन्तुलनको पक्षमा उभिँदै पुलिङ्गी र तटस्थ भाषा प्रयोग गर्न थालेका छन् ।

परम्परागत रूपमा जापानी महिलाले प्रयोग गर्ने भाषामा कोमलता, शिष्टताजस्ता नारीत्व झल्काउने विशेषता जापानका नवयुवतीको बोलीमा कमै पाइन्छ । उनीहरूले पुलिङ्गी र तटस्थ बोली बोल्न थालेका छन् ( उएनो सन् २००६)। लैङ्गिक समतामूलक सामाजिक चेतनाको विश्वव्यापीकरणले नेपाली समाजमा पनि प्रभाव पार्न थालेको छ । रेडियो पत्रकारितामा भित्रिएको समतामूलक भाषा प्रयोगको सैद्धान्तिक सीमाले अन्तर्वार्ताहरूमा प्रस्तुत हुने महिला बोलीका जीवन्त लवजलाई छेक्न सक्दैन ।

समाज भाषाविज्ञानमा लैङ्गिक अध्ययनको पाटो सन् १९७० को दशकदेखि उघारिएको पाइन्छ । सन् १९७५ मा रोविन ल्याकोफले ‘ल्याङ्ग्वेज एन्ड ओमेन्स प्लेस’ मार्फत महिलाले प्रयोग गर्ने भाषा तल्लोस्तरको हुने निष्कर्ष निकालेको पाइन्छ । सन् १९८३ मा पी. फिसम्यानले ‘इन्टरयाक्सन : द वर्क ओमेन डु’ विषयमा गरेको अध्ययनले पनि ल्याकोफकै बाटो पछ्याएको बुझिन्छ । उनीहरूले समाजमा महिलाको स्थान सहयोगी र पुरुषको स्थान मालिकका रूपमा रहेकाले पुरुष र महिलाको बोलीमा भिन्नता भएको दाबी गरेका छन् । उनीहरूले महिलालाई अल्पसङ्ख्यक शोषित वर्गमा राखेर भाषालाई सोहीअनुरूप व्याख्या गरेको पाइन्छ । यसरी गरिएको भाषिक अध्ययनलाई प्रभुत्ववादी अवधारणामा आधारित मानिन्छ ।

सन् १९८० को दशकको उत्तरार्द्धदेखि भाषाको लैङ्गिक अध्ययनमा भिन्नतावादी अवधारणाले प्रवेश पाएको देखिन्छ । सन् १९८६ मा जेन्निफर कोट्सको 'ओमेन, मेन एन्ड ल्याङ्ग्वेज' पुस्तक प्रकाशमा आएपछि भाषालाई हेर्ने प्रभुत्ववादी धारणामा परिवर्तनको धार छुटिन्छ । त्यसलाई अघि बढाउन सन् १९९० मा डेबोरा टानेनले 'यु जस्ट डन्ट अन्डरस्टान्ड, ओमेन एन्ड मेन यल कन्भर्सेसन' भन्ने पुस्तकमार्फत बल प्रदान गरेको पाइन्छ । कोट्स र टानेनले महिला र पुरुष विभिन्न उपसंस्कृतिसित सम्बन्धित हुन्छन् र उनीहरूमा देखिने कुनै पनि भाषिक भिन्नताले सांस्कृतिक भिन्नतालाई दर्शाउने विश्वास गरेको पाइन्छ । सन् १९९० को दशकमा पश्चिमी समाजमा देखिएको लैङ्गिक समताको व्यापक प्रभावले भाषालाई हेर्ने दृष्टिकोणमा पनि समतावादी अवधारणाले प्रवेश पाएको बुझिन्छ ।

सन् २००१ मा इरेन भान बालेनले 'रुस्कोए अन फाइभ' भन्ने बीबीसी रेडियो अन्तर्क्रियाको भाषिक अध्ययन गरेपछि समतावादी अवधारणा सशक्त भएको मानिन्छ । 'मेल एन्ड फिमेल ल्याङ्ग्वेज : ग्रोइङ टुगेदर ?' मा बालेनको तर्क छ, भाषाले मानिसको परिचय र लैङ्गिकता सिर्जना गर्न सघाउँछ भने मानिसमा पुरुषत्व र नारीत्वको धारणा बदलिएपछि उनीहरूको भाषा पनि बदलिन्छ भन्ने मान्यता राख्नु युक्तिसंगत छ । उनको अध्ययनमा लैङ्गिक धारणामा परिवर्तन आएको परिणामस्वरूप पुरुष र महिलाको भाषा बढी समान हुँदैछ भन्ने निष्कर्ष भेटिन्छ ।

भाषाको लैङ्गिक अध्ययनको पाटो समाजसित प्रत्यक्ष जोडिएको पाइन्छ । समाजको परिवर्तनशीलतालाई लैङ्गिक भूमिकामा आएको परिवर्तनले बढी नै प्रभाव पारेको पनि देखिन्छ । तीन दशकभित्र प्रभुत्ववादी, भिन्नतावादी र समतावादी गरी तीन खालका लैङ्गिक अवधारणा विश्वको भाषिक समाजमा देखापरेको छर्लंग हुन्छ । भाषिक अध्ययनले पनि समाजकै परिवर्तनको रफ्तारमा महिला र पुरुषको बोलीको लैङ्गिक विशेषता र स्वरूपको विश्लेषण गर्दै आएको पाइन्छ । यस खालको अध्ययन अमेरिकामात्र होइन, विश्वका अन्य महादेशका विभिन्न भाषामा हुने गरेका उदाहरण प्रशस्त भेटिन्छन् ।

## सामुदायिक रेडियो र लैङ्गिक चरित्र

सामुदायिक हितका लागि समुदायको स्वामित्व र व्यवस्थापनबाट सीमित क्षेत्रमा प्रसारण हुने गरी सञ्चालित रेडियो नै सामुदायिक रेडियो हो । एउटै भौगोलिक क्षेत्र, एकैनासको समाज र पेसागत समूहबाट सम्बन्धित क्षेत्र र समूहको हितका लागि सामुदायिक रेडियो स्थापना गरिएको हुन्छ । यस्तो रेडियोलाई स्थानीय रेडियो, वैकल्पिक रेडियो, स्वतन्त्र रेडियो भनेर पनि चिनिन्छ । सामुदायिक रेडियोका प्रमुख सिद्धान्त र आदर्शहरू 'जनताद्वारा जनताका लागि सञ्चालित रेडियो' भन्ने भावनामा आधारित हुन्छन् । जनताको लगभग आधा संख्या लैङ्गिक रूपले महिलाका रूपमा चिनिन्छ । यो लैङ्गिक समूहलाई सामुदायिक रेडियोले बहिष्करणमा पार्नु आफ्नै सिद्धान्त र आदर्शबाट विचलित हुनु हो । मूलप्रवाहमा रहेका रेडियोहरू समाजका लागि पर्यवेक्षकमात्र हुन्छन् तर सामुदायिक रेडियो समाज परिवर्तनको अभियानमा सोझै सामेल हुनुपर्छ (मैनाली र साथीहरू २०५८ : ३०) भन्ने मान्यता छ ।

रेडियो सुलभ र सस्तो हुन्छ । यसले निरक्षरलाई पनि समेट्छ । सञ्चारका अन्य माध्यमको उपस्थिति र पहुँच कम भएका गरिब, ग्रामीण र सहरी क्षेत्रमा समेत रेडियो प्रसारण हुनसक्छ । यसैले रेडियोलाई महिलाको माध्यम पनि भनिन्छ (काब्रेरा-बाल्लेजा सन् ?)। महिला तथा बालबालिकाको हक र अधिकारको संरक्षणका लागि सामूहिक दायित्वको बोध गराउनु सामुदायिक रेडियोको लक्ष्यभित्रै पर्छ । सामुदायिक रेडियोले अलग भाषा र छुट्टै सामाजिक चरित्रका नागरिकको आवश्यकतालाई बुझ्न सक्नुपर्छ (मैनाली र साथीहरू २०५८ : ३४)।

सामाजिक सांस्कृतिक रूपमा पछि पारिएका महिला समुदायको आवश्यकतातिर भने सामुदायिक रेडियोले पर्याप्त ध्यान दिन सकेको देखिँदैन । राजनीतिदेखि प्रजनन स्वास्थ्यसम्मका विषयमा महिलाको दृष्टिविन्दुबाट पर्याप्त आवाज उठाउनै बाँकी छ । यसैले युरोपदेखि अफ्रिकासम्म महिलाले आफ्ना विषयमा आवाज उठाउन सांकेतिक रूपमै भए पनि छुट्टै सामुदायिक रेडियो स्टेसनको स्थापना गरेका छन् । महिलाको सामुदायिक रेडियो स्टेसनले प्रयोग गर्ने भाषाको समतामूलक लैङ्गिक पाटो भने ओझेलमै छ । व्यापक रूपमा चर्चामा आउन सकेको पनि देखिँदैन ।

## ● विश्व इतिहास

सामुदायिक रेडियोको विश्व इतिहास ६० वर्षभन्दा लामो कालखण्डमा विस्तारित छ । सन् १९४७ मा बोलिभिया र कोलम्बियाबाट सामुदायिक रेडियोको इतिहास प्रारम्भ भयो । बोलिभियाका खानी मजदुरहरूको 'भ्वाइस अफ दि माइनर' रेडियो सुरु भएकै वर्ष कोलम्बियाका पादरीले रेडियो 'सुटाटेन्जा' चलाए । खानी मजदुरमा सबै लैङ्गिक समूहको सहभागिताको सम्भावना छ । उक्त दुई रेडियोका प्रभावबाट बोलिभिया र कोलम्बियामा सयौं सामुदायिक रेडियो सञ्चालनमा आए । फिलिपिन्सको ताम्बुली सामुदायिक रेडियो परियोजनाले २३ वटा सामुदायिक रेडियोको सञ्जाल नै गठन गऱ्यो ।

सामुदायिक रेडियोहरू विकासोन्मुख देशमा मात्र होइन, विकसित देशमा पनि सञ्चालनमा आउन थाले । अमेरिका र क्यानडामा सन् १९५० को दशकदेखि नै सामुदायिक रेडियोले प्रसारण अनुमति पाए । सन् २००८ सम्ममा त्यहाँ सामुदायिक रेडियो स्टेसनको सङ्ख्या तीन सयभन्दा बढी पुगिसकेको पाइन्छ । तीमध्ये धेरैजसो स्टेसन ठूला र सहरी रेडियोले राम्ररी समेट्न नसकेका आदिवासी, जातिगत, भाषिक, मजदुर र ग्रामीण क्षेत्रका समुदायप्रति लक्षित छन् ।

अष्ट्रेलिया र युरोपमा सन् १९७० को दशकदेखि सामुदायिक रेडियोले प्रवेश पायो । अष्ट्रेलियामा अनुमति दिँदा जनजाति वा भाषिक समुदायप्रति लक्षित गरियो । सरकारी र व्यापारिक रेडियो नपुगेका ठाउँमा प्रसारण गर्नुपर्ने, शास्त्रीय संगीत र शिक्षामूलक कार्यक्रम प्रसारण गर्ने तर विज्ञापन र प्रायोजित कार्यक्रम प्रसारण गर्न नपाउने सर्त राखियो । युरोपमा चाहिँ 'स्वतन्त्र रेडियो' का लागि अभियान नै चलाइयो । गैरकानुनी रूपमा खुलेका धेरै रेडियो स्टेसनले सामुदायिक रेडियोको कानुनी मान्यता पाए । नेदरल्यान्ड, फ्रान्स, इटाली, स्वीडेन, फिनल्यान्ड, डेनमार्क, नर्वे आदि मुलुकमा सामुदायिक रेडियोहरू निक्कै सशक्त छन् । बेलायतमा स्थानीय व्यापारिक रेडियो स्टेसनले पाउने प्रसारण अनुमतिसित खासै भिन्नता नभए पनि सबल सामुदायिक रेडियोहरू विकसित हुने क्रममा छन् । पूर्वी युरोपमा

पनि सन् १९९० को उदार राजनीतिक परिवर्तनले व्यापारिक रेडियो स्टेसनलाई अनुमति दिन थालेपछि सामुदायिक रेडियोप्रति अभिरुचि बढेको पाइएको छ ।

एसियाको कुरा गर्ने हो भने फिलिपिन्सपछि श्रीलंकामा सरकारी प्रसारण संस्थाअन्तर्गत महाबेली सामुदायिक रेडियो सञ्चालनमा आयो । त्यसपछि नेपालमा सामुदायिक रेडियोको प्रवेश भएको हो । वि.सं. २०५४ जेठ ९ गते ललितपुरमा स्थापित 'रेडियो सगरमाथा' दक्षिण एसियाकै पहिलो गैरसरकारी वा स्वतन्त्र सामुदायिक रेडियो स्टेसनका रूपमा पनि परिचित छ ।

समुदायका बासिन्दाको हित र भनाइका लागि कार्यक्रमहरू प्रसारण गर्ने अवधारणामा स्थापित भए पनि बहुसंख्यक सामुदायिक रेडियोले लक्षित समुदायका आधाजसो लैङ्गिक समूहका बासिन्दाको आवाज र भावनाको उचित कदर गर्न बाँकी नै रहेको भेटिन्छ । सरकारी र कर्पोरेट मिडियामा महिलाले जुन खालको भेदभावको सामना गर्छन्, सामुदायिक मिडियामा पनि कहिलेकाहीँ त्यही खालको भेदभावको पुनरावृत्ति पाइन्छ (**काब्रेरा-बाल्लेजा सन्** ?) ।

सामुदायिक रेडियोका अवस्थाका सम्बन्धमा सन् २००६ मा अमार्क एसिया प्यासिफिक र आइसिस इन्टरनेसनल-मनिलाले एसिया प्रशान्त क्षेत्रमा २३ वटा सामुदायिक रेडियो स्टेसन र कार्यक्रम उत्पादन समूहमा महिला कार्यक्रम र सहभागिता सम्बन्धमा गरेको सर्वेक्षणमा २१ वटा स्टेसनमा साताको एकदेखि पाँच घण्टा महिलाले महिलाका लागि कार्यक्रम चलाएको पाइयो । यी कार्यक्रममा महिला, अधिकार, स्वास्थ्य स्याहार, महिलाविरुद्धको हिंसा, साक्षरता र समाजमा सफल महिलाका कथा दिने गरेको पाइयो । स्टेसनमा जम्मा २८ प्रतिशत महिला नेतृत्व तहमा छन् । प्राविधिक पक्षमा पनि २८ प्रतिशत महिला भेटिए । कार्यक्रम निर्माता र प्रशासनतर्फ ४४-४४ प्रतिशत महिला देखिए । यसबाट सामुदायिक रेडियोमा पनि महिलाको भूमिका परम्परागत नै भएको पुष्टि हुन्छ ।

सामुदायिक रेडियो स्टेसनमा गरिएको लैङ्गिक अध्ययनमा पनि परम्परागत लैङ्गिक रेखाअनुसार कामको बाँडफाँड भएको र प्राविधिक पदहरू पुरुषकै लागि आरक्षित गरेको जनाएको छ (**काब्रेरा-बाल्लेजा सन्** ?)।

सर्सर्ती हेर्दा महिलाको माध्यम भनेर मानिएको रेडियोको पनि सामुदायिक स्टेसनमा महिलाको समानुपातिक सहभागिता र पहुँच हुन बाँकी देखिन्छ । महिलाकै भनेर खोलिएका कतिपय स्टेसनहरूले चाहिँ जनसाङ्ख्यिक हिसाबले पुरुषलाई पनि बराबरी स्थान दिएर सामुदायिक अवधारणालाई सही तरिकाले प्रयोगमा ल्याएको बुझिन्छ । यस परिप्रेक्ष्यमा त्यस्ता स्टेसनले प्रयोग गर्ने भाषा लैङ्गिक रूपले कत्तिको सम्माबर्द्धक छ त भनेर केलाउन भने अझै बाँकी छ ।

## समताको सन्देश निम्ति महिलाको रेडियो

पहिलो सामुदायिक रेडियो 'भ्वाइस अफ दि माइनर' खुलेको ३५ वर्षपछि पहिलो महिला सामुदायिक रेडियोको स्थापना भयो । सन् १९८२ को अक्टुबर १८ मा नर्वेमा 'रेडियो ओराकेल' को स्थापना भएपछि अन्य सामुदायिक रेडियोहरूले महिलाको समानुपातिक सहभागिता र आवाजलाई स्थान दिन नसकिरहेको सचेत अनुभवले सांकेतिक अभिव्यक्ति पायो । 'रेडियो ओराकेल' ले महिलालाई अन्तर्वार्ताकार वा सञ्चारकर्मी र स्रोत व्यक्ति दुवैमा सक्रिय प्राथमिकता दिनेमात्र होइन, सांगीतिक व्यक्तित्वमा पनि कम्तीमा ५० प्रतिशत संगीतकार र कलाकार महिलालाई सहभागी गराउँछ । 'रेडियो ओराकेल' मा सन् १९९८ मा दर्ता भएका ५० देखि ७० हजार श्रोतामध्ये महिला र पुरुष आधा-आधा छन् । झण्डै १५ सय व्यक्तिले 'रेडियो ओराकेल' मा काम गरेकामध्ये धेरैजसो नर्वेली प्रसारण माध्यममा प्रसिद्ध व्यक्तित्व बनिसकेका छन् (रेडिओराकल हरस्टोरी सन् ?)।

अहिले संसारका विभिन्न ठाउँमा महिलाले "आफ्ना विषयलाई आफ्नै तरिकाले" उठाउन आफैंले सामुदायिक रेडियो चलाउनुपर्ने अनुभव साटासाट गर्न थालेका छन् । फिजीको नयाँ घुम्ती रेडियो परियोजना महिलाकै सक्रियतामा महिलाकै लागि भनेर सञ्चालित छ (**ओमेन्स इन्टरनेसनल लिग फर पिस एन्ड फ्रिडम सन् २००४**) ।

'फेमटक ८९.२ एफएम' नामको महिलाको सामुदायिक घुम्ती रेडियो परियोजना सञ्चालनका पछाडि फिजीका सचेत महिलाको आफ्नै गुनासो छ । उनीहरूले रेडियो तरंगको व्यवसायीकरणका कारण "आफ्ना विषय आफ्नै तरिकाले" स्थानीय समुदायमा राख्ने ठाउँको कमी अनुभव गरेपछि सन् २००० मे २४ मा छुट्टै सामुदायिक घुम्ती रेडियोको स्थापना गरे (**ओमेन्स इन्टरनेसनल लिग फर पिस एण्ड फ्रिडम सन् २००४**)। शान्तिप्रयासमा संलग्न गैरसरकारी संस्थाहरू र महिला समूहको साझेदारीमा सञ्चालित घुम्ती रेडियोले सूचना र सञ्चारको पहुँचमा फड्को हालेको छ । सो रेडियोले प्रयोग गर्ने भाषा र अन्य व्यावसायिक रेडियोहरूले प्रयोग गर्ने भाषाको लैङ्गिक सन्तुलनमा समानता छ कि भिन्नता छ भन्नेबारे स्पष्ट हुन भने छुट्टै अध्ययनको जरुरत छ ।

महिलाले रेडियोबाट आफ्ना कुरा राख्न पाउनु त परैजाओस आफूले चाहेका कुरा सुन्न पनि नपाएको अनुभव गरेपछि युगान्डामा अफ्रिकाकै पहिलो महिला सामुदायिक रेडियो स्टेसन '१०१.७ मामा एफएम' स्थापना भयो । युगान्डामा रेडियो माध्यमबाट आफ्ना कुरा राख्ने सयजनामध्ये १५ जना मात्र महिला रहेको कुरा अनुसन्धानले पुष्टि गरेको छ (**उगान्डा मिडिया ओमेन एसोसिएसन सन् ?**)। समकक्षी पुरुषका तुलनामा अत्यन्त कम महिलाको बोली मात्र रेडियोबाट प्रसारित हुने गरेको तीतो अनुभवले 'मामा एफएम' सामुदायिक रेडियोको जन्म दियो । 'मामा एफएम' रेडियोबाट अङ्ग्रेजीसहित अन्य दसभन्दा बढी स्थानीय भाषामा कार्यक्रम प्रसारण गरिन्छ । लैङ्गिक संवेदनशील शैक्षिक कार्यक्रमसमेत प्रसारण गर्ने 'मामा एफएम' को पनि भाषिक लिंगविधानका विशेषताबारे खासै चर्चा भएको पाइँदैन ।

मूलत: महिलाका अभिव्यक्तिलाई स्थान दिने भए पनि अस्तित्वमा रहेका सञ्चारमाध्यममा अत्यन्त कम महत्व दिने गरिएकाहरूलाई पनि 'मामा एफएम' रेडियोले विचार आदान-प्रदानको मौका दिन्छ । समुदायमा लैङ्गिक सन्तुलनको वकालत र पहलकदमी गर्ने मामा एफएमले स्वास्थ्य, कानुनी, आर्थिक सशक्तीकरण, शिक्षा, मानव अधिकार, सुशासन, नेतृत्व, धर्म, कृषि, शान्ति निर्माण, वातावरण र राजनीति विषयमा कार्यक्रमहरू सञ्चालन गर्दछ । यी विषयहरू महिला र अन्य सिमान्तकृत समूहका चासो वा सरोकारका विषय पनि हुन् । लैङ्गिक

रूपले सन्तुलित भाषाले विषयलाई मूलधार र अन्य सामुदायिक स्टेसनको प्रस्तुतिभन्दा विशिष्ट बनाउन सक्छ । यसबारेमा भने 'मामा एफएम' मौन छ ।

नेपालमा पनि वि.सं. २०६४ असोज १३ गतेदेखि महिलाले पूर्वाञ्चलमा छुट्टै एफएम चलाएका छन् । रेडियो पूर्वाञ्चल नामक सो एफएममा सञ्चालक समिति सदस्यदेखि सुरक्षा गार्डसम्म महिला नै छन् । त्यसपछि सिरहामा रहेको फूलबारी एफएमको नाम आउँछ । उदयपुरमा पनि २०६६ सालको दशैंसम्ममा महिलाले महिलाका लागि प्रभावकारी रूपमा छुट्टै एफएम प्रसारणको थालनी गर्ने उद्देश्य राखेर तालिम आदिसहित पूर्वतयारी गरिरहेका छन् ।[२]

## रेडियो सगरमाथा : भाषा, शैली, समता र संहिता

रेडियो सगरमाथा स्थापनाको नीतिगत आधार खोतल्दै जाँदा वि.सं. २०४६ को प्रजातन्त्र पुनर्स्थापनाको जगमा प्रतिपादित राष्ट्रिय सञ्चार नीति, २०४९ सम्म पुग्न सकिन्छ । सो नीतिमा 'निजी क्षेत्रका संगठित संस्थालाई पनि निश्चित क्षेत्रमा फ्रिक्वेन्सी मोडुलेसन (एफएम) प्रसारण प्रणाली स्थापना गरी शिक्षाप्रद र मनोरञ्जनात्मक कार्यक्रम प्रसारण गर्न दिने' (पन्त ब्रदर्स ? : ७८) कुरा उल्लेख छ । त्यसपछि राष्ट्रिय प्रसारण ऐन, २०४९ ले "...फ्रिक्वेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी शिक्षाप्रद, मनोरञ्जनात्मक तथा समाचारमूलक कार्यक्रम प्रसारण गर्न चाहने व्यक्ति वा संगठित संस्था ... लाई कार्यक्रम प्रसारण गर्न तोकिएको ढाँचामा इजाजतपत्र दिन सक्नेछ" (दाहाल : २०५८ : ३०२) भनी व्यवस्था गरेको छ । वि.सं. २०५२ मा राष्ट्रिय प्रसारण नियमावली बनेपछि सञ्चार नीति र प्रसारण ऐनले गरेको व्यवस्थालाई कार्यान्वयनको बाटो खुलेको देखिन्छ । वि.सं. २०५४ देखि नेपालमा एफएम ब्यान्डमा स्वतन्त्र सामुदायिक रेडियो स्टेसन खुल्ने क्रमको सुरुआत भएको पाइन्छ । रेडियो सगरमाथा एफएम १०२ थोप्लो चार मेगाहर्ज नेपालको पहिलो सामुदायिक रेडियोका रूपमा वि.सं. २०५४ जेठ ४ गते इजाजत पाएर ९ गतेदेखि राजधानीबाट प्रसारणमा जान् थालेको तथ्य विविध स्रोतबाट प्राप्त हुन्छ ।

२. डा. रेणु राजभण्डारीसित २०६५ साल फागुनमा भएको कुराकानीमा आधारित ।

दिगो विकास, वातावरण, असर र समयानुकूल गुणात्मक शिक्षा, विज्ञान-प्रविधि, प्रतिस्पर्धा, उपभोक्ता हक र सचेतता, दलित, लैङ्गिक समता, जनजाति, बालबालिका, सामूहिक/सामुदायिक विकास र प्रयास, सरसफाइ, लोकसंस्कृति, लोकसाहित्य र संगीत, भाषा, रहनसहन, शैली, संस्कार, कृषि, यातायात, परिवहन, गृहिणी, बेरोजगारी-रोजगारी, युवा-वृद्धवृद्धा आदि क्षेत्र र विषयसँग सम्बन्धित सामग्रीलाई प्राथमिकतासाथ स्थान दिने कुरा रेडियो सगरमाथा प्रसारण निर्देशिका, २०६३ मा उल्लेख छ ।

कार्यक्रम प्रसारण गर्दा लैङ्गिक र भाषिक पक्षमा समेत विशेष ध्यान दिने नीति राखेको रेडियो सगरमाथाले महिलासहित समाजका कसैलाई पनि होच्याउने, घृणा उत्पन्न गर्ने वा अवहेलना गर्ने खालका गीत, विज्ञापन वा अन्य कुनै सामग्री प्रसारण नगर्ने नीति लिएको देखिन्छ । व्यक्तिगत लाञ्छना, गालीबेइज्जती हुने, अश्लीलता प्रकट हुने, अपराधलाई दुरुत्साहन हुने खालका सामग्रीलाई पनि रेडियो सगरमाथाको निर्देशिका २०६३ ले प्रसारण गर्नबाट रोकिदिएको पाइन्छ ।

लैङ्गिक उत्थान र विकासमा मद्दत पुग्ने कार्यक्रमलाई भने प्राथमिकतासाथ प्रसार गर्ने नीति लिएको रेडियो सगरमाथाले नेपाली भाषामा सञ्चालित कार्यक्रममा पूर्णतः नेपाली भाषामै कार्यक्रम सञ्चालन गर्नुपर्ने भनी शैली निर्देशिकासमेत तयार गरेको देखिन्छ । 'रेडियो कार्यक्रममा निम्त्याउने सबै अतिथि रेडियोका लागि समान हुने', 'सबै अतिथिको नाम, सम्बद्धता र पद खुलाई' प्रसारण गर्नुपर्ने, 'छलफल, अन्तरक्रिया र अन्तर्वार्तामूलक कार्यक्रम सञ्चालन गर्दा ... विवादास्पद विषयमा सम्बन्धित सबै पक्षले प्रतिवाद गर्न पाउने गरी अवसर दिनुपर्ने,' 'उच्चारण मानक नेपालीमा गर्नुपर्ने' र 'कार्यक्रममा आफूले मात्र नभई अतिथिलाई समेत सञ्चालन भइरहेको सम्बन्धित भाषामा सरल ढंगले बोल्न कार्यक्रममा जानुअगाडि नै अनुरोध गर्ने र प्रेरित गर्ने गर्नुपर्दछ' भन्ने कुरा रेडियो सगरमाथाको प्रसारण निर्देशिका २०६३ मै स्पष्ट किटान गरिएको पाइन्छ ।

दैनिक १८ घण्टा प्रसारणमा गइरहेको रेडियो सगरमाथाको दैनिक के कति घण्टा महिलाको हितनिम्ति लक्षित छ भन्ने स्पष्ट किटान गर्न नसकिए पनि कार्यक्रमको सूची, सञ्चालनमा सहभागिता, कार्यक्रममा स्रोत व्यक्ति तथा श्रोता सहभागिताको पहुँच र अन्तरवस्तुको प्रकृतिलाई सर्सर्ती हेर्दा महिलालाई परम्परागत

विभेदको खाडलबाट माथि उठाउने प्रयास गरेको देखिन्छ । 'सबै कार्यक्रममा महिला-पुरुष सहभागितालाई समानुपातिक बनाउन विशेषताका हिसाबले नसकिए पनि भक्स-पपमा त आधा महिला र आधा पुरुष समावेश गर्न सकिन्छ नि भन्नेतर्फ सञ्चारकर्मी सचेत रहे पनि कहिलकाहीँ महिलाले बोल्नै नचाहने र कोही-कोहीले माइक्रोफोन देखेपछि हाँसीमात्रै रहने गरेको पनि पाइएको छ ।'[३] समाजमा लैङ्गिक असमानताको खाडल पुरिँदै र सचेतता बढ्दै गएपछि यस खालको समस्या विस्तारै हट्दै जानेमा आशावादी हुन सकिन्छ ।

सञ्चारको भाषा सामान्यतः परम्परागत पत्रकारिताको सिद्धान्त र आदर्शसित जोडिएको हुन्छ । रेडियो अन्तर्वार्ताको भाषा पनि सो सिद्धान्त र आदर्शबाटै अनुप्राणित होस् भन्ने आग्रह हुन्छ । त्यसलाई लैङ्गिक समतामूलक बनाउनु समसामयिक सकारात्मक प्रयास हो । त्यसका लागि सामुदायिक रेडियो स्टेसनले मूलधारका माध्यमहरूभन्दा प्रभावकारी भूमिका खेल्न र अमिट छाप छाड्न सक्छन् । कार्यक्रमको स्वरूप, विषयवस्तु, अभिव्यक्ति तथा भाषाशैलीलाई स्थानीय ढाँचामा ढाल्ने क्रममा सचेततामात्रै थपियो भने पनि सामन्ती पितृसत्तात्मक सोचबाट सिर्जित लिंगभेदी अभिव्यक्तिहरू नयाँ कालखण्डमा निषिद्धकथन जस्तै भएर सञ्चारमाध्यमबाट विस्थापित हुन सक्छन् ।

प्रसारणको भाषा श्रोताले चिने, जाने र भोगेको भाषा हुनुपर्छ । यसका लागि अनुभवको भाषा ग्रहण गर्नुपर्छ । (मैनाली र साथीहरू : २०५८ : ५२) त्यसो गर्दा सांस्कृतिक अभिव्यक्ति झल्किन्छ । यहीनेर सामुदायिक सञ्चारकर्मी चनाखो बन्नुपर्ने देखिन्छ । लिंगभेदी पुरातन संस्कृतिको दुष्प्रभावलाई छाडेर समभावी र विवेकसम्मत नवीन संस्कृतितर्फ समाजलाई उन्मुख गर्न सामुदायिक रेडियो स्टेसनहरूले आफ्नै भाषिक शैली र संहिता बनाउन सक्छन् । त्यसक्रममा लैङ्गिक समताको अग्रगामी युगीन पाटो कहिल्यै पनि बिर्सन हुँदैन । नयाँ युगको व्यवस्थापनका लागि समसंस्कृतिको विकास अपरिहार्य छ । रेडियो सगरमाथाजस्ता सामुदायिक रेडियोले भाषाका माध्यमबाट त्यो महत्त्वपूर्ण काम गर्न सक्छन् ।

३. रेडियो सगरमाथाका तत्कालीन स्टेसन मेनेजर मोहन विष्टसँग २०६४ साल असोजमा भएको कुराकानीमा आधारित ।

# खुलाउनै पर्ने केही तथ्य

रेडियो अन्तर्वार्तामा सहभागी सञ्चारकर्मी र स्रोत व्यक्तिहरूबीचको कुराकानीमा पाइने भाषिक विशेषताको रूप र सार पक्षको निरूपण गर्ने उद्देश्यले गरिएको समाजभाषिक अनुसन्धानका क्रममा प्राप्त तथ्यको नालीबेली यस खण्डमा छ । सुरुदेखि नै एफएम रेडियोले विदेशी भाषा र संस्कृति भित्र्याएर नेपाली भाषा र संस्कृतिलाई ध्वस्त बनाउने भयो (हुमागाईं : २०६५ : ४) भन्नेहरूको आरोपबाट अलग रहेर छुट्टै पहिचान बनाएको रेडियो सगरमाथाले नेपालका राष्ट्रभाषाहरू बाहेक अन्य भाषामा गीतसमेत प्रसारण नगर्ने नीति लिएको छ । यसमा अन्तर्वार्ताको ढाँचामा सार्वजनिक, समसामयिक र औपचारिक कथ्यभाषालाई अध्ययन सामग्री बनाइएको छ । यस खण्डमा लिइएका सम्पूर्ण उदाहरण सामग्रीहरू नेपालको मात्र होइन, दक्षिण एसियाकै पहिलो गैरसरकारी, सामुदायिक र स्वतन्त्र एफएम (मैनाली र साथीहरू : २०५८ : १५) भनेर चिनिएको रेडियो सगरमाथाबाट २०६४ साल असोज महिनामा प्रसारण भएका साप्ताहिक कार्यक्रममा लिइएका अन्तर्वार्ताका चुनिएका अंश हुन् । (हेर्नुहोस् बक्सा नं. १)

बक्सा नं. १ :

**उदाहरणमा समाविष्ट असोजका कार्यक्रमहरूको विवरण**

| कार्यक्रमको नाम | कार्यक्रमको प्रकार | अवधि (मिनेट) | कार्यक्रमको सङ्ख्या | कुल अवधि (मिनेट) | सहभागी सङ्ख्या | |
|---|---|---|---|---|---|---|
| | | | | | महिला | पुरुष |
| सह-अस्तित्व | साप्ताहिक | ४५ | ४ | १८० | ६ | ० |
| सञ्जीवनी | साप्ताहिक | ३० | ४ | १२० | ६ | २ |
| सफलताको गोरेटो | साप्ताहिक | ४५ | ४ | १८० | ३ | ० |
| शैली | साप्ताहिक | ४५ | ५ | २२५ | ५ | ० |
| समावेशी अभियान | साप्ताहिक | ३० | ५ | १५० | १ | ४ |
| सहभागिता | साप्ताहिक | ३० | ४ | १२० | १ | १ |
| शिक्षा डबली | साप्ताहिक | ३० | ५ | १५० | १ | २ |
| हाम्रो सरोकार | साप्ताहिक | ३० | ४ | १२० | १ | ३ |
| उहिले बाजेका पालामा | साप्ताहिक | ३० | ४ | १२० | ० | ४ |
| युवा आवाज | साप्ताहिक | ६० | ५ | ३०० | ३ | ३ |
| जम्मा | | | ४४ | १,६६५ | २७ | १९ |

स्रोत : रेडियोमा महिला बोली : समाज भाषावैज्ञानिक अध्ययनका क्रममा गरिएको कार्यक्रम अनुगमन ।

कुल ५४० घण्टाको कार्यक्रमलाई विविध कोणबाट सीमाङ्कन गर्दा जम्मा पौने २८ घण्टाको अन्तर्वार्तामा बोलिएको सामग्री भाषिक अध्ययनको दायरामा परेको छ । सजिलाका लागि सहभागीको क्षेत्रीय वितरणलाई (हेर्नुहोस् चार्ट नं. १) राजधानी केन्द्रित गरी तीन भागमा बाँडिएको छ । जातीय वितरणको कुरा पनि

जटिल छ । थरका आधारमा मात्र जात किटान गर्न नसकिने र कतिपय सहभागीले दोहोरो जातीय पहिचान बोकेकाले सबैलाई मूलतः चार भागमा समेटिएको छ । (हेर्नुहोस् चार्ट नं. २) वर्गीय दृष्टिले चाहिँ उच्चमध्यमदेखि विविध कोणबाट सिमान्तकृत र पीडित महिलासम्मको सहभागिता छ ।

चार्ट नं. १




चार्ट नं. २



समाजभाषिक कोणबाट अन्तर्विषयक अनुशासनमा रही वर्णनात्मक अध्ययन पद्धति अपनाइएको यस खण्डमा आधुनिक भाषाविज्ञानका प्रमुख सम्प्रदायमध्ये उपयुक्त व्याकरणिक सिद्धान्तको आंशिक उपयोग गरिएको छ । रेडियो पत्रकारिताको सिद्धान्त, पद्धति, शैली र संहिताले अन्तर्वार्ताको भाषा शैलीको आयाम सीमाङ्कित गरेका छन् । यस खण्डमा रेडियो अन्तर्वार्तामा सहभागी नेपाली महिलाको भाषा शैलीको वस्तुगत अध्ययन गरिएको छ । यसमा मूलत: व्याकरणिक संरचनाका आधारमा ध्वनि, वर्ण, शब्द र वाक्यमा भेटिएका मौलिक र आगन्तुक पक्षसँगै समसामयिक प्रवृत्तिको निरूपण र विश्लेषण गरिएको छ ।

## सार्छन् ध्वनि सर्दैन अर्थ

एउटै कुरा एउटै समय, एउटै स्थान, एउटै यन्त्र, एउटै शैलीमा बोल्न खोजे पनि वक्ताको सूक्ष्मभन्दा सूक्ष्म विशिष्टता उसको बोलीमा झल्किन्छ । यस्तो हुनमा सामाजिक स्थिति, आर्थिक अवस्था, क्षेत्रगत पृथकता, जलवायु, मनोविज्ञान, पेसा, शरीरविज्ञान, शैक्षिक प्रशिक्षण, भ्रमण, लैङ्गिक चेतना, राजनीति, अन्य भाषा जान्ने र बुझ्ने क्षमता आदिको पनि प्रत्यक्ष वा परोक्ष प्रभाव रहन्छ । यस अर्थमा हरेक व्यक्तिको भाषा अद्वितीय र अनौठो देखिन्छ (यादव र रेग्मी २०५८ : ३०)। यति हुँदाहुँदै पनि सञ्चार भनेको सामाजिक गतिविधि भएकाले बोली वा कथनलाई पनि सामाजिक नै भन्न सकिन्छ (हड्सन सन् १९९९ : १०६)।

ध्वनि, शब्द, बोली र संगीत भाषाका उपज हुन् । यी रेडियो माध्यमका अभिव्यक्ति र सम्प्रेषणका साधन पनि हुन् । व्यक्तिगत स्तरमा अभिव्यक्तिका निमित्त र सामाजिक स्तरमा सम्प्रेषणका निमित्त (शर्मा २०३६ : ३०६) प्रयोग गरिने भाषाको कथ्य स्वरूप अत्यन्त सहज, गतिशील, प्रवाहपूर्ण, प्रभावकारी र बढी बुझिने वा छुने खालको हुने कुरा अनुभववादी भाषाविज्ञानीहरू उल्लेख गर्दछन् । बोलीको भाषालाई लेखनको स्वरूपमा जस्ताको तस्तै बाँधन सकिँदैन । कुरो बुझिएसम्म त्यसरी बाँधिरहनु जरुरी पनि पर्दैन । बोल्ने भाषा लेख्ने भाषाभन्दा सामयिक र स्वच्छन्द हुन्छ । बोल्ने बेला अप्रत्याशित तरिकाले केही अप्रिय बोलिहालियो भने पनि नेपालीमा *हाड नभएको जिब्रो* भनेर उम्किने चलन छ ।

मानिसको तत्कालीन मनस्थितिअनुरूप सिर्जित भाव बोल्नासाथ हावामा तरङ्गित हुँदै श्रव्य अङ्गमा प्रवेश गर्दछ । त्यो अदृश्य तरङ्ग भएकाले त्यसलाई श्रोता मस्तिष्कले ग्रहण गर्न नसकेमा वक्ताले दोहोऱ्याएर बोल्नुपर्ने हुन्छ । यो भाव लिपिबद्ध भाषिक स्वरूप जस्तो जस्ताको तस्तै नभई केही भिन्न रूपमा दोहोरिन पनि सक्छ । यसैले बोलीलाई भाषाको सहज र स्वत:स्फूर्त स्वरूप मानिएको हो । रेडियोमा चाहिँ रेकर्ड हुने भएकाले एकपटक बोलेको बोलीलाई पटक-पटक जस्ताको तस्तै सुन्न सकिन्छ ।

मानिसले भाव आदान-प्रदान गर्न आफ्ना स्वर अङ्गहरूलाई सञ्चालन गरेपछि निस्कने सार्थक ध्वनि नै बोली हो । आदिम युगदेखि मानव समाजमा चल्दै आइरहेको विचार विनिमयको यस विशिष्ट स्वरूप नभएको भए मानिस शब्द सञ्चार गर्दै अन्य प्राणीभन्दा भिन्न भएर भावको संसार हाँक्न सक्ने अवस्थामा पुग्दैनथ्यो । ज्ञान, विज्ञान, पद्धति र प्रविधि हस्तान्तरण र ग्रहणको विश्वव्यापीकरण र सूचनाप्रविधि युगको वर्तमान सञ्चार कल्पनाभन्दा परको कुरा हुन्थ्यो ।

मौखिक भाषा सहज र स्वाभाविक हुन्छ र यही नै भाषाको आदर्श रूप हो ( पोखरेल २०४० : १२९)। यो रूपलाई मूलत: रेडियो माध्यमले प्रयोगमा ल्याएको हुन्छ । मूलधारको रेडियो पत्रकारिताले सरल, शिष्ट, औपचारिक तर स्वाभाविक बोलीको माग गर्दछ । मूलप्रवाहका रेडियोभन्दा सामुदायिक रेडियोहरूले बढी सहज र स्वाभाविक भाषा प्रयोग गर्न सक्छन् । अनौपचारिक प्रस्तुति सामुदायिक रेडियोको विशेषता नै हो । यसलाई स्टेसन शैलीकै रूपमा ग्रहण गरिन्छ ( मैनाली २०५८ : ३७)। यसैले अर्थ नसार्ने खालका जे जस्ता ध्वनिका स्वरूप समाजमा गुञ्जिन्छन्, तिनले रेडियो अन्तर्वार्तामा पनि प्रवेश पाएका हुन्छन् ।

नेपालको कुरा भने अलि फरक तरिकाले उठान भएको छ । वि.सं.२०५३ सालदेखि नै सामुदायिक रेडियोमा बोलिने भाषाको उपयुक्त मापदण्ड तयार गरी लागू गर्ने कुरा उठ्न थाल्यो । फलत: वि.सं. २०५४ साल जेठ ९ गतेदेखि प्रसारणमा आएको सामुदायिक एफएम रेडियो सगरमाथाले स्थापनाको सुरुदेखि नै स्टेसनको प्रसारण निर्देशिका, सम्पादकीय नीति तथा शैली निर्देशिका तयार गरी भाषिक सचेतता अपनाउन खोजेको देखिन्छ । मूलधारका सञ्चारमाध्यमको भाषामा समतामुखी अवधारणाले प्रवेश गरेको चाहिँ सन् १९७० को दशकमा नै

हो (वेस्टले सन् १९८० : ३५७) । त्यसको प्रभाव समाजमा ध्वनिको तहबाटै पर्न थालेको पनि हुनसक्छ । सामुदायिक रेडियो अन्तर्वार्तामा त्यसको झलक पाउन सकिन्छ ।

वक्ताको सूक्ष्मभन्दा सूक्ष्म विशिष्टता उसको बोलीमा ध्वनिको तहदेखि नै झल्किन सुरु हुन्छ । नेपाली महिलाको बोलीमा पनि यो कुरा लागू हुन्छ । पश्चिममा डडेल्धुरा र कञ्चनपुरदेखि पूर्वमा मोरङ र झापासम्मका कम पढेका हुन् कि बढी, सबै जाति र वर्गका कतिपय महिलाले प्रयोग गरेका शब्दमा ध्वनिको विकल्प प्रयोग भेटिन्छ । उनीहरू एउटा ध्वनिको सट्टा अर्कै ध्वनिको प्रयोग गरेर पनि मानक शब्दको उच्चारण गर्छन् । त्यसो त नेपाली भाषाको स्तरीय स्वरूपमा धातुमा प्रत्यय लागेर बन्ने शब्दहरूको निर्माण र तिनको प्रयोग सम्बन्धमा निश्चित व्याकरणिक व्यवस्था छ । सोहीअनुसार यस्ता शब्दलाई औपचारिक रूपमा बोल्ने वा लेख्ने गरिएको हुन्छ ।

रूप, शब्द, उपवाक्य, वाक्य, संकथनजस्ता भाषिक क्षेत्रहरूको आधार तहमा ध्वनि रहेको हुन्छ । अनौपचारिक बोलचालको नेपाली भाषालाई शब्दका तहमा केलाउने हो भने ध्वनिहरूको वैकल्पिक प्रयोग हुने गरेका उदाहरण प्रशस्त भेट्न सकिन्छ । रेडियो सगरमाथाका अन्तर्वार्तामा सहभागी महिलाका बोलीमा पनि यस खालको प्रवृत्ति पाइन्छ । रेडियो अन्तर्वार्तामा बोलिएका नेपाली शब्दमा प्रयोग हुने गरेका उदाहरणीयमध्ये केही वैकल्पिक ध्वनिहरूको प्रवृत्तिलाई यसरी प्रस्तुत गर्न सकिन्छ ।

| प्रतिनिधि शब्द/प्रत्यय | विकल्प | व्याख्या |
|---|---|---|
| जाने | जानी | प्रत्ययान्त एकार इकारमा परिणत |
| पनि | नि | शब्दादिको 'प' ध्वनि लोप |
| लाग्छ | लाक्च | मध्य व्यञ्जन ध्वनि विचलन |
| लाग्छ | लाक्छ | मध्य व्यञ्जन ध्वनि विचलन |
| लाग्छ | लाग्च | अन्त्य व्यञ्जन ध्वनि विचलन |
| लाग्छ | लाग्स | अन्त्य व्यञ्जन ध्वनि विचलन |
| पर्छ | पर्च | अन्त्यको 'छ' ध्वनि 'च' मा परिणत |
| पर्छ | पर्स | अन्त्यको 'छ' ध्वनि 'स' मा परिणत |

रेडियो अन्तर्वार्तामा सहभागी महिलाले कतिपय ठाउँमा 'ने' अन्तिममा आउने प्रत्ययको ठाउँमा 'नी', 'पनि' को सट्टा 'नि', 'पिनि', 'पछि' को सट्टा 'सी', 'पसी' वा 'पिछि' र 'लाग्छ' क्रियापदको सट्टा 'लाक्छ', 'लाक्च', 'लाग्च', 'लाग्स' जस्ता वैकल्पिक ध्वनिको समेत प्रयोग गर्दछन् । यसैगरी, शब्दका बीचमा 'इ' ध्वनि र निपातहरूको प्रशस्त प्रयोग, सर्वनाम, क्रियायोगी शब्दहरूको लटरपटर उच्चारण वा प्रयत्नलाघव, लोप, आगम आदि विशेषता वर्तमान नेपाली महिला बोलीमा टड्कारो भेट्टाउन सकिन्छ । साथै, सर्वनाम शब्द 'उनीहरू' को बीचमा रहेको इकार र 'ह' ध्वनि लोप भएर 'उनरु', 'उँदरु' जस्ता वैकल्पिक रूपको निर्माण भएका छन् ।

**● 'ने' अन्तिममा आउने विशेषणमा 'नी' सर्वाधिक**

नेपाली भाषाको स्तरीय स्वरूपमा धातुमा 'ने' प्रत्यय लागेर बनेका विशेषण शब्दहरूको निर्माण र तिनको प्रयोग सम्बन्धमा निश्चित व्यवस्था छ । सोहीअनुसार यस्ता शब्दहरूलाई बोल्ने वा लेख्ने गरिएको हुन्छ । सिद्धान्ततः यस्तो भए पनि व्यवहारमा अन्य ध्वनिका तुलनामा 'ने' प्रत्ययान्त शब्दमा 'नी' ध्वनिको विकल्प प्रयोग बढी नै हुने गरेको छ । यस्तो प्रयोग रेडियो सगरमाथाका अन्तर्वार्तामा सहभागी महिलाको बोलीमा पनि पर्याप्त भेटिएको छ । अध्ययनमा समेटिएका कुल ३३ वटा कार्यक्रममध्ये २० वटामा 'ने' प्रत्ययान्तको ठाउँमा 'नी' ध्वनिको समेत प्रयोग भएको भेटियो (अधिकारी : २०६४ : ६२) । बाँकी तीनवटा कार्यक्रममा लिइएका अन्तर्वार्तामा मात्र अन्त्यमा 'ने' आउने ठाउँमा 'नी' ध्वनि प्रयोग भएको सुनिएन ।

धेरैजसो नेपाली महिलाको बोलीमा 'ने' र 'नी' दुवै प्रत्ययको अन्तिम ध्वनिमा मिश्रित प्रभाव देखिएको छ । यस्तो प्रभाव हाल ध्वनिका रूपमा सीमित छ । सामान्यतः यसले शब्दको अर्थमा फरक पारेको छैन । यसले रेडियो अन्तर्वार्ताको गुण, मात्रा, सम्बन्ध र तरिकालाई पनि अन्यथा गरेको छैन । स्रोत व्यक्ति र सञ्चारकर्मी दुवैको बोलीमा देखापरेको यस्तो प्रवृत्ति निम्न, निम्नमध्यम, मध्यम, उच्चमध्यम र उच्च सबै खालको वर्गीय पृष्ठभूमिबाट व्यक्तित्व बनाएका महिलामध्ये कसै न कसैमा कतै न कतै भेटिएको छ । क्षेत्रीय दृष्टिले पनि नेपालका पूर्व, पश्चिम र मध्य तीनै क्षेत्रका कतिपय महिलाले 'ने' प्रत्ययान्त विशेषणलाई 'नी' ध्वनिमा रूपान्तर गरेको पाइएको छ ।

प्रत्ययको अन्तिममा आउने एकारलाई ईकार बनाउने प्रवृत्ति प्राय: क्रिया विशेषणमा मात्र सीमित नरहेर थेगो र संयोजकमा पनि सर्ने गरेको पाइन्छ । भनाइलाई बलशाली र लयात्मक बनाउन ध्वनिको इकारान्त प्रयोगको विकल्पतर्फ ढल्किएको अनुमान गर्न गाह्रो छैन । एउटै वक्ताले पनि कतै 'ने' प्रत्ययान्त ध्वनि प्रयोग गरेको पाइएको छ भने कतै 'नी' । सामुदायिक नै भए पनि रेडियो माध्यममा बोल्दा लेख्य वा मानक नेपाली भाषा प्रयोग गर्नुपर्छ भन्ने परम्परागत मानसिक दबाबका कारण कतिपय वक्ताको बोलीमा मिश्रित प्रयोग भएको हुनसक्छ । नेपाली भाषा पहिलो भाषा नभएका कतिपय वक्ताको बोलीमा 'ने' प्रत्ययान्त शब्दहरूलाई 'ने' नै भनेको सुनिन्छ भने पहिलो भाषा नेपाली भएकाहरूले कतै 'ने' र कतै 'नी' भनेको सुनिन्छ । 'ने' का ठाउँमा 'नी' प्रत्ययान्तको प्रयोग राजधानी र राजधानीपश्चिमका वक्तामा बढी भेटिन्छ भने कतिपयले यस्तो प्रयोग गरेका छैनन् । अन्तर्वार्ता लिने र दिने अनि महिला र पुरुष गरी विभिन्न खालका वक्तामा प्राय: ('ने' प्रत्ययान्त विशेषणमा 'नी' को वितरणले प्रवेश र प्राथमिकता पाएको छ । अर्थमा भिन्नता नल्याउने र समतातिर उन्मुख परिवर्तनशील समाजमा कुनै खास वर्गीय पहिचान पनि नझल्काउने भएकाले रेडियो अन्तर्वार्तामा यस्तो प्रयोगको पुनरावृत्ति पनि भइरहेको छ । महिला र पुरुष दुवै खालको सहभागिता रहेको मिश्रित अन्तर्वार्तामा पुरुषले पनि यस्तो प्रयोग गरेका छन् । परम्परागत रूपमा इकारान्त ध्वनिले स्त्रीलिंगी बुझाए पनि यस्तो प्रयोगले लैङ्गिक अर्थ भने बोकेको पाइँदैन ।

- **'लाग्छ' क्रियापदमा विकल्प ध्वनि**

निश्चित कोशीय अर्थ भएको पद वर्ग क्रिया हो । यसले पदावलीको निर्माण पनि गर्न सक्छ । अर्थतात्विक आधारमा क्रियाले कुनै काम बुझाउँछ । वाक्यतात्विक आधारमा नेपाली भाषामा सामान्यत: वाक्यको अन्त्यमा आउने पद नै क्रिया हो । रूपतात्विक आधारमा क्रियाले 'छ', 'यो' जस्ता सहायक क्रियामध्ये कुनै एक रूप लिन पनि सक्छ । 'लाग्छ' यस्तै एउटा नेपाली क्रियापद हो ।

'लाग्छ' लाई अर्थपूर्ण बनाउन निश्चित तरिकाले उच्चारण गरिन्छ । मानक नेपाली भाषामा 'लाग्छ' भनेर लेख्ने गरिए पनि यसको उच्चारणमा थरिथरिका ध्वनिको प्रयोग हुने गरेको छ । यस खालको प्रभाव रेडियो अन्तर्वार्तामा सहभागी महिलाको बोलीसम्मै फैलिएको छ । यसको उच्चारणमा पछिल्ला दुई ध्वनिमा

अनियमित खालको वैकल्पिक प्रयोग भेटिन्छ । 'लाग्छ' लाई कसैले 'लाक्छ' भन्छन् भने कसैले 'लाक्च' भनेको सुनिन्छ । यस्तै, कसैले 'लाग्च' भनेका हुन्छन् भने कसै-कसैले 'लाग्स' भन्ने गरेको समेत पाइएको छ । विविध ध्वनिको उच्चारणले 'लाग्छ' क्रियापदको अर्थमा भने कुनै भेद ल्याएको छैन ।

'लाग्छ' क्रियापदको बीचको 'ग्' ध्वनि सबैभन्दा बढी 'क्' मा परिणत भएको पाइन्छ । अन्त्यको 'छ' ध्वनि पनि 'च' वा नगण्य मात्रामा भए पनि 'स' ध्वनिमा परिणत भएको छ । अंग्रेजी भाषाको प्रभावमा परेका नेपालीको उच्चारणमा 'स' ध्वनि स्पष्ट सुनिन्छ । 'लाग्छ' क्रियापद एउटा त्यस्तो उदाहरण हो, जसको प्रयोगमा विकल्प प्रयोग र बहुलता भेटिएको छ । (हेर्नुहोस् बक्सा नं. ०२)

बक्सा नं. ०२

'लाग्छ' मा ध्वनिको विकल्प वितरण स्थिति

| वैकल्पिक स्वरूपको प्रकार | कुल कार्यक्रम | वैकल्पिक स्वरुप पाइएको कार्यक्रम सङ्ख्या | प्रतिशत |
|---|---|---|---|
| लाक्छ | २३ | ८ | ३४.७८ |
| लाक्च | २३ | ५ | २१.७३ |
| लाग्च | २३ | २ | ०८.६९ |
| लाग्स | २३ | १ | ०४.३४ |
| कुल | २३ | १६ | ७९.५४ |
| स्रोत : रेडियोमा महिला बोली : समाज भाषावैज्ञानिक अध्ययन विषयक शोधपत्र | | | |

'लाग्छ' बाहेक *पकाउँच, हुन्च, पर्च, दिनुन्च, भन्दिन्च, गरिन्च, रहन्च, हुन्चु, भन्चु, चाहन्चु,* मात्र होइन, *हुन्चन्, भन्चन्, बेचिन्चन्, जन्माउँचे, पाल्चे, ख्वाउँचे, बचाउँचे* जस्ता क्रियापदको पनि 'छ' ध्वनि 'च' र नगण्य मात्रामा 'स' मा बदलिएको पाइन्छ । यस्तो परिवर्तन महिला बोलीमा मात्र सीमित छैन । यो प्रवृत्ति लैङ्गिक पनि होइन । यसले रेडियो अन्तर्वार्ताको गुण, मात्रा, सम्बन्ध र तरिकामा पनि गडबड गर्दैन । समग्रमा नेपाली शब्दमा कतिपय ध्वनिहरूलाई वक्ताले आफूखुशी यताउता सारेर बोले पनि अर्थ सरिसकेको छैन । यस्तो प्रयोग महिला पुरुष दुवैको बोलीमा पाइन्छ । यसैले पनि शब्दमा ध्वनि सार्ने प्रवृत्तिलाई लैङ्गिक मान्न सकिँदैन ।

## "पनि" भएर "नि नपुगेर "पिनि"

*कोइ एन्जियोले पनि सयोग गर्‍यान, एन्जियोले नि उठाको हैन ... त्यत्तिगर्दा पिनि राज्यले सुनाइ गरेन, ... रिजब गरेर नि आयुँ ।*

यसो भनेर बाँकेकी बेलु वादीले कार्यक्रम सहअस्तित्वमा कुरा गर्दा 'पनि' संयोजकलाई 'नि' भनेर निपातका रूपमा समेत प्रयोग गरेकी छन् । कार्यक्रम सञ्जीवनीमा कुसुम ज्ञवालीले *याँनेर अलिकता म नि थप्छु !* भन्दै 'पनि' का ठाउँमा 'नि' मात्र प्रयोग गरेर बीचैमा आफ्ना कुरा थपेका छन् ।

रेडियो अन्तर्वार्तामा यसरी कुरा गर्नेहरू अरू पनि छन् । कलाकार दीपाश्री निरौला हुन् कि लैङ्गिकविद् कान्ता रिजाल, नृत्यङ्गना हनी श्रेष्ठ हुन् कि पर्यटन व्यवसायी सम्झना तामाङ । रेडियो सगरमाथाका सञ्चारकर्मीहरूले समेत सहज तरिकाले 'पनि' को सट्टा 'नि' प्रयोग गरेर अन्तर्वार्ता लिने गरेका छन् ।

- *समस्या अब मोटो भन्दा नि, अ मोटी भन्चन्, अब त्यै हो ।*
- *मैले मीठो पकाए नि मलाई ... ... मलाई भान्सामा त्यत्ति एलाउ गर्दैन के (छोराले) ।*
- *अब ब्या गरेरा केटीले नि के डान्सान्स गर्ने भन्ने हुन्छ नि हैन ?*
- *म ऐलै नि आय्ज असिस्टेन्ट म्यानेजर म नि ऐले अफिसमा ह्यान्डल गर्दैछु ।*
- *जस्तै तपाइँले नि भन्नुभयो कि हजारौँ संस्थाहरू यस्ता छन् ।*

सिन्धुपाल्चोककी स्रोत व्यक्ति सीता थापाको भने कुरा अलि फरक छ । उनी 'पनि' को सट्टामा मात्र 'नि' विकल्प ध्वनिको प्रयोग गर्दिनन्, निपातका रूपमा पनि 'नि' प्रयोग गरेर बोल्छिन् । यसरी बोल्ने उनी एक्लै भने होइनन् ।

- *गाउँमा त अब खान नि पाइँदैन नि वस्तु नपालेसी ।*

अव्ययका रूपमा चिनिने 'पनि' पदलाई संयोजकका रूपमा प्रयोग गरिन्छ । शब्द र वाक्य दुवैलाई जोड्ने यस क्रियाविशेषणले समुच्चय अर्थ बुझाउँछ (भट्टराई : २०३३ : ३४३)। स्तरीय लेख्य नेपाली भाषामा 'पनि' पदको निश्चित ध्वन्यात्मक व्यवस्था छ । त्यसलाई औपचारिक कथ्य भाषामा सामान्यत: जस्ताको तस्तै प्रयोग गर्ने आग्रह राखिन्छ ।

रेडियो अन्तर्वार्तामा सहभागी महिलाको बोलीको अध्ययनका क्रममा भने पुगनपुग आधाजसो महिलाले 'पनि' पदको प्रयोग गर्दा आंशिक रूपमा विकल्प ध्वनिको प्रयोग गरेका छन् । सामान्यत: ध्वनिका स्वरूपमा 'नि' निपात जस्तै देखिने भए पनि कतै कतै 'पनि' को सट्टा 'नि' समेत प्रयोग गर्ने गरिएको छ । यसलाई अर्थका आधारमा मात्र 'पनि' पदको विकल्प हो वा निपात हो भनेर बुझ्नुपर्ने हुन्छ । अध्ययनका क्रममा अधिकांश ठाउँमा 'पनि' को उच्चारण स्पष्ट सुनिएको छ भने थोरै ठाउँमा 'नि' मात्र होइन, 'पिनि' जस्तो ध्वनि समेत उच्चारण गरिएको पाइएको छ (अधिकारी २०६४ : ६२)। यसमा इकार प्रयोग बढी देखिए पनि यसले परम्परागत स्त्रीलिङ्गी भाव बोकेको पाइँदैन ।

'पनि' को सट्टा 'नि' र 'पिनि' को अत्यन्त सीमित परिवेशमा मात्र प्रयोग भए पनि यसले निपातको 'नि' हो कि भनेर पनि झुक्याउन पनि सक्छ । यस्तो प्रयोग कायमै रहिरह्यो भने यसले नेपाली भाषामा दख्खल नभएको अवस्थामा जटिलता थप्न सक्छ । यसले पार्ने भाषिक घाटा नेपालीले व्यहोर्नुपर्ने हुन्छ ।

नेपाली महिला बोलीमा 'नि' निपातको प्रयोगका साथै 'ने' प्रत्ययान्तको 'नी' र 'पनि' को सट्टा नगण्य रूपमा भए पनि 'नि' को थप प्रयोगले समष्टिमा 'नि' ध्वनिको प्रयोग बढाएको छ । 'पिनि' को प्रयोगचाहिँ तुलनात्मक रूपमा कम पढेलेखेका र निम्न वर्गका वा राज्यले नै लामो समयदेखि सामाजिक रूपमा पछाडि पारेका समुदायका सहभागीले बढी गरेको पाइन्छ । अर्थमा परिवर्तन नल्याउने, कसैलाई अप्ठेरो पनि नपर्ने तर सुन्दा फरक हुने यस खालको ध्वन्यात्मक भाषिक भेदले सामुदायिक रेडियोको अन्तर्वार्तालाई जीवन्तता प्रदान गर्दछ । धेरैजसो महिलाको बोलीमा 'पनि' को उच्चारण स्पष्ट सुनिन्छ । कसै कसैले 'पिनि' उच्चारण गरे पनि त्यसले खासै पुनरावृत्ति पाएको छैन । सामान्यत: महिला महिलाबीचको कुराकानीमा

त्यो पनि अत्यन्त कम मात्रामा 'पनि' को सट्टा 'नि' प्रयोग भएको छ । आफूसँग सम्बन्धित कुरामा 'पनि' को ठाउँमा 'नि' प्रयोग गर्ने पनि छन् । 'पनि' को सट्टा 'नि' मात्र प्रयोग गर्ने प्रवृत्ति पुरुषमा पनि उत्तिकै छ । यस खालको विकल्प ध्वनिले पनि कुनै एक लैङ्गिक विशेषता बोकेको पाइँदैन ।

- **'पछि' नामयोगीमा विकल्प ध्वनि**

क्रियामा 'पछि' प्रत्यय विशेषणका रूपमा लाग्छ र यो पद क्रियाविशेषणका रूपमा चिनिन्छ । स्तरीय लेख्य र औपचारिक कथ्य नेपाली भाषामा 'पछि' को प्रयोगमा कुनै वैकल्पिक रूपको प्रयोग भएको पाइँदैन । अनौपचारिक कथ्य नेपाली भाषामा भने यसको प्रयोग हुने ठाउँमा समान अर्थ दिने अर्कै ध्वनि उच्चरित भएको पाइन्छ । रेडियो सगरमाथाका अन्तर्वार्तामा सहभागी महिला बोलीका विविध तथ्यांकहरू केलाउँदा पनि 'पछि' को ठाउँमा 'सी', 'पसि', 'पिछि' जस्ता फरक ध्वनिको उच्चारणले स्थान पाएको सुनिन्छ । एउटै व्यक्तिले कतै 'पछि' भनेको छ भने कतै 'पसि', 'पिछि' वा 'सी' मात्र भनेको पनि छ । बोलीचालीमा यस खालको विकल्प प्रयोगले लय, बल र मौलिकता थप्न सघाउँछ । अनौपचारिक बोलीमा धेरै व्यक्तिले यस्तो विकल्प ध्वनि उच्चारण गर्छन् । रेडियो अन्तर्वार्तामा यस्तो वैकल्पिक प्रयोग १० प्रतिशतमात्र भेटिएको छ (अधिकारी २०६४ : ७२) । उक्त प्रयोग हाल ध्वनिकै स्तरमा सीमित छ । यस्तो ध्वनिको विकल्प प्रयोग अन्तर्वार्तामा सहभागी स्रोत व्यक्तिले मात्र होइन, कतिपय सञ्चारकर्मीले समेत गरेका छन् ।

- *तपाइँ हुनुन्च भनेसी छलफल सम्वादहरू भए ?...*

सञ्चारकर्मी किरण पोखरेल स्रोत व्यक्ति अष्टलक्ष्मी शाक्यलाई यसरी सोध्छन् । उनले कार्यक्रम *सह-अस्तित्वमा* शाक्यलाई मात्र होइन, *सहभागिता* मा कमला न्यौपाने र उपेन्द्र अधिकारीका अगाडि पनि यसरी नै प्रश्न राखेका छन् ।

- *...साठ्ठी नाघेसी सबै जेष्ठ ?*

कुरा गर्दै जाँदा कमला न्यौपानेको गुनासो गर्ने शैलीमा पनि 'पछि' भन्नुपर्ने ठाउँमा अर्कै ध्वनि सुनिन्छ,

● *हाम्रो चैँ आज बुडाबुडी भए<u>पसि</u> थन्किएर बस्नुपर्नी ...।*

त्यति मात्र होइन, 'पछि' को अगाडि इकार आगम भएका उदाहरण पनि छन् । *सह-अस्तित्व* मा सहभागी वादीहरूको भनाइ यस्तो छ,

● *यदि माग पूरा भएन भने<u>पिछि</u> .... याँ कडाभन्दा कडा कानुन आन्दोलन गर्नेछम् ।... पैसा भोन भने<u>पिछि</u> अब फोनमा कन्ट्याक हुँदैन ।*

'पछि' का ठाउँमा फरक ध्वनि प्रयोग गर्ने प्रवृत्ति हेर्दा सामान्यत: क्रियासँग जोडिएर आउने 'पछि' को उच्चारणमा आंशिक परिवर्तन आएको छ । *भनेसी, आइलागेसी, बसेसी, खाएसी, नपालेसी, पाएसी, परेसी, नाघेसी* त्यस्ता केही उदाहरण हुन् । केही ठाउँमा एकल 'पछि' का लागि पनि विकल्प ध्वनिको प्रयोग भएको छ । *भनेपसि, पसि, भएपसि* अर्को खालका उदाहरण हुन् । यस्तो प्रयोग क्रियासँग नजोडिइकन पनि हुने गर्दछ । सुरुमा इकार आगम भएर हुने प्रयोग चाहिँ क्रियासितै जोडिएरमात्र प्रयोग हुने गरेको छ ।

'पछि' को सट्टा विकल्प प्रयोग निम्न वर्गका कम पढेलेखेका तथा राज्यले नै मूलधारबाट पछि पारेका समुदायका महिलाको बोलीमा बढी भेटिएको छ । अंशत: यस्तो प्रयोग उच्चमध्यम वर्गीय पृष्ठभूमिसहित अङ्ग्रेजी र अन्य भाषाबाट प्रभावित महिलाले पनि गर्ने गर्दछन् । समान पृष्ठभूमिका पुरुषको बोलीमा पनि यस्तो प्रवृत्ति भेटिन्छ । सञ्चारकर्मी पुरुषले समेत प्रयोग गर्ने गरेको यस्तो प्रवृत्तिका पछाडि पनि कुनै लैङ्गिक कारण भने भेटिँदैन । यसले बोलीमा लयात्मकता थप्न मद्दत गर्दछ । सामान्यत: एकारपछि 'पसि' र 'सी' को बढी प्रयोग भएको छ । यस खालको अभिव्यक्तिमा पनि लैङ्गिक रूपमा विभेदकारी गुण पाइँदैन ।

# जता पनि छताछुल्ल घुसुवा ध्वनि

*तर के भन्देखिन् यो अअ संवि अअ यो संविधानसभाको इलेक्सनमा जानलाई, कममा पनि तेत्तीस प्रतिशत हुनुपर्छ र राज्यको अनेक अ अ अ उस् क्षेत्रमा पनि अ मैलाहरूको सहभागिता हुनुपर्छ भनेर दुइचारोडा सेमिनारहरू पनि हाम्ले गर्‍यौँ।... अब यौ एउटा अअ डेमोक्र्याटिक उउ नम्समा विश्वास गर्ने हुँदाखेरी अब भोइलेन्समा गएर एक्दम उउ तोडफोड गर्ने अथवा यो त्यो गर्ने हामी गर्न सक्दैनौँ।*

लिपिका भरमा अनुमान गर्न कठिन छ, यी वाक्य प्राध्यापन पेसामा लागेकी परिपक्व राजनीतिकर्मी महिलाका हुन् भनेर। ठाउँ-ठाउँमा रहेका अ, अअ, उस्, उउ जस्ता घुसुवा ध्वनिले विचारलाई भुत्ते बनाइदिएका छन् भने भावलाई कमजोर। यसरी वाक्यमा जथाभावी प्रवेश भएका अनावश्यक वा निरर्थक ध्वनिहरूलाई घुसुवा ध्वनि (हेजिङ् डिभाइस) भनिन्छ। बोलचालका क्रममा एउटै ध्वनिको पनि सार्थक र निरर्थक प्रयोग हुनसक्छ। जुन वाक्यमा जुन ध्वनिको निरर्थक प्रयोग भएको छ, त्यो वाक्यमा त्यो ध्वनिलाई घुसुवा ध्वनि मानिन्छ। बोलचालका क्रममा घुसुवा ध्वनिहरूको प्रयोग हुने सम्भावना बढी हुन्छ। रेडियोमा पनि सामान्यत: मूलधारका भन्दा सामुदायिकमा र सामुदायिकमा पनि अन्य कार्यक्रमका तुलनामा अन्तर्वार्तामा घुसुवा ध्वनिहरूको बढी प्रयोग हुने सम्भावना हुन्छ।

किन घुस्छन् अनावश्यक ध्वनिहरू मान्छेका बोलीमा ? यसका अनेकौँ कारण हुन सक्छन्। सामान्यत: विचार नगरीकनै बोल्नेहरूले बढी घुसुवा ध्वनिहरू प्रयोग गर्दछन्। विषय र शैलीमा अलमल भएका बेला पनि अनायासै घुसुवा ध्वनिहरू प्रयोग हुन सक्छन्। बोल्ने बेलामा दकस लागेको छ भने पनि घुसुवा ध्वनिहरूको चाप बढ्न सक्छ। रेडियो अन्तर्वार्तामा स्रोत व्यक्तिका रूपमा निम्त्याइएकी क्याम्पस पढाएर परिपक्वता समेत

हासिल गरिसकेकी राजनीतिमा सक्रिय महिलाका वाक्यमा घुसुवा ध्वनिहरूको बाहुल्य देखिनाको कारण पहिल्याउन भने छुट्टै अध्ययनको जरुरत पर्दछ । त्यसका लागि हजारौँ वर्षदेखिको राजनीतिक, आर्थिक, सामाजिक लिंगभेदी शासकीय दुष्चक्र तोड्ने युगान्तकारी अभिलाषा एकातिर र अर्कातिर लिङ्गभेदी नेतृत्वले पुरानै व्यवहारको जालझेलमा जेलेर पार्टीगत रूपमै प्रताडित बनाइरहेका समतावादी महिलाको सरल र संवेदनशील मनोविज्ञानका पक्ष र पाटाहरू केलाउनुपर्ने पनि हुनसक्छ ।

बोल्ने बेला भाषिक र भाषेतर दुवै क्षेत्रमा प्राकृतिक लिङ्गका कारण केही न केही भेद आउने कुरामा समाजवैज्ञानिक अध्ययनले धेरै पहिले प्रकाश पारे पनि अहिले ती कुरा विवादको घेरामा छन् । मूलतः मष्तिस्कीय संरचनाले महिला र पुरुषको बोल्ने बानीमा अन्तर आउँछ भन्ने मनोविद लौआन ब्रिजेन्डाइनको *द फिमेल ब्रेन* नामक पुस्तकमा मष्तिस्कको संरचनागत भिन्नताले नै फरक लिंगका व्यक्तिबीचमा धेरैजसो भाषिक ग्रहण र सामाजिकी विभेद उत्पन्न भएको कुरा उल्लेख छ । यो विवादास्पद परिकल्पना हो (ननवर्ग सन् २००७ : १)। जे भए पनि व्यक्ति आफैँमा एउटा जटिल जीववैज्ञानिक स्वरूप चाहिँ पक्कै हो । घुसुवा ध्वनिहरू त्यही जटिलताका साङ्केतिक उपज पनि हुन् ।

घुसुवा ध्वनिहरू बोलचालका क्रममा स्वतः प्रवाहित हुने भाषिक अभिलक्षण हुन् । यिनीहरू आक्षरिक र अनाक्षरिक दुवै स्वरूपमा आउन सक्छन् । यस खालको ध्वनिले बोलीको प्रवाहलाई तरङ्गित वा प्रकम्पित बनाउन पनि मद्दत गर्दछ । औपचारिक, श्रावणिक र साञ्चारिक तीनै खालका ध्वनि प्रक्रियामा घुसुवा ध्वनिलाई बेवास्ता गर्न सकिँदैन । कतिपय अवस्थामा यस्ता ध्वनिले अभिव्यक्तिलाई भद्दा बनाउन र सम्प्रेषणमा वाधा पुयाउन सक्छन् । रेडियो अन्तर्वार्तामा घुसुवा ध्वनिको बढ्ता प्रयोगलाई 'निरर्थक हल्ला' का रूपमा लिइन्छ । भन्न खोजिएको कुरालाई नै अल्मल्याउने गरी प्रयोग हुने घुसुवा ध्वनिले वक्ताको कला कम, कमजोरी बढी झल्काउँछ । त्यस्तो कमजोरीको लहरो विषयको ज्ञानदेखि प्रविधिको पहिचान र व्यक्तिको मनोविज्ञानसम्म तानिएको हुन्छ । महिलाको हकमा कुरा गर्दा सामाजिक लिंगभेदको प्रसंग स्वतः जोडिन आउँछ, जसले उनीहरूलाई युगौँयुगदेखि अप्राकृतिक रूपमा धेरैतिरबाट कमजोर बनाएर वर्तमानसम्म ल्याइपुऱ्याएको छ ।

- *हामीले ह~ सम्मेलन स्थलसम्म आउने जाने हँ~ सम्मेलन स्थ स्थलमा खाने बस्ने र यो जुन प्रतिबद्ध शुल्क छ तीन सय, त्यो समेत छुट दिने अ~ हँ त्यो एउटा बेवस्था गरेका छौँ ।*

- *......जी, याँहीनेरी अ~ विभिन्न हँ राजनीतिक दलका भ्रातृसंगठनहरू हँ छन्, युवा युवाहरूको क्षेत्रमा कार्यरत अँ विद्यार्थी संगठन भनुँ या युवा हँ अँ संघसंगठन पनि छन् ।*

- *... हजुर, अ यो बारेमा चैँ ह नेपालका पचत्तरओटै जिल्लाबाट चैँ हामी एकजना पुरुष र एकजना महिला नै नै प्रतिनिधित्व महिलाले आउनै पर्छ भनेर तेस्को बारेमा हाम्ले खबरहरू गरिराखेका छौँ ।*

- *यो यथार्थ भनेको एक्दमै हँ~~ के भन्छ ...अब, अ~~ ठ्याक्कै भन्न चैँ सकिँदैन ।*

- *अ म्ह तर, हँ दुर्भाग्यवश नीति त राम्रो छ तर तेस्को इम्प्लिपमेन्टेसन कार्यान्वयन पक्ष चाइने कमजोर छ ।*

यी उदाहरणबाट पनि थाहा हुन्छ, नेपाली महिलाको बोलीमा धेरैजसो स्वर ध्वनिहरू घुस्ने गरेका छन् । बोल्ने क्रममा 'अ', 'आ', 'इ', 'उ', 'ए' जस्ता स्वर ध्वनिका विविध उच्चारण हुन्छन् । 'म्', 'स्', र 'ह्' तीनवटा मात्र व्यञ्जन ध्वनिको प्रयोग भएको छ । सामान्यत: घुसुवा ध्वनिले एकस्वर, अनुनासिक हुँदै स्वरबहुल रूप धारण गरेको पनि छ । 'अ' ध्वनिको सामान्य, लामो र बढी लामो स्वरूपको ध्वनि जुन रूपमा प्रयोग भएको छ, त्यही रूपमा 'ह्' ध्वनिको पनि प्रयोग भएको छ । 'अ' र 'ह्' ध्वनिमै अनुनासिकता पनि भेटिएको छ । स्वरबहुल ध्वनिको कुरा गर्ने हो भने स्वर-स्वर र स्वर-व्यञ्जनको मिश्रण पनि भएको छ । रेडियो अन्तर्वार्तामा अन्य खालका घुसुवा ध्वनि पनि छन् । घुसुवा ध्वनिको वितरण प्रवृत्ति फरक छ । एउटै सहभागीले पनि विभिन्न परिवेशमा विभिन्न

खालका आक्षरिक र अनाक्षरिक ध्वनि घुसाएर बोल्ने गरेको पाइन्छ। (हेर्नुहोस् बक्सा नं. ०३)

यस खालका घुसुवा ध्वनिहरू रेडियो अन्तर्वार्ताका क्रममा भन्न खोजिएको कुरा सम्झन, दकस हटाउन, भन्न खोजिएको कुरा बुझाउन र कुराकानीलाई जीवन्त बनाउन वा जारी राख्न प्रयोग गर्ने गरेको पाइन्छ। यस्तो प्रयोग स्रोत व्यक्ति र सञ्चारकर्मी महिला-पुरुष दुवैको बोलीमा रेडियो माध्यममा उपयुक्त मान्न सकिनेभन्दा बढी नै मात्रामा भेटिएको छ।

बक्सा नं. ०३

घुसुवा ध्वनिको वितरण स्थिति

| घुसुवा ध्वनिको स्वरूप | कुल कार्यक्रम | घुसुवा ध्वनि पाइएको कार्यक्रम | कुल कार्यक्रममा घुसुवा ध्वनि पाइएको कार्यक्रमको प्रतिशत |
|---|---|---|---|
| अँ, अँ˜, अँ˜˜ | २३ | २० | ८६.९५ |
| अ, अ˜, अ˜˜ | २३ | १३ | ५६.५२ |
| ह, ह˜, ह˜˜ / हँ, हँ˜, हँ˜˜ | २३ | ०९ | ३९.१३ |
| उ, उउ, उस् | २३ | ०५ | २१.७३ |
| उँ अँ, हँ अँ, म्अँ | २३ | ०३ | १३.०४ |
| अई, अम्, हँ अ | २३ | ०३ | १३.०४ |
| एँ, हैं | २३ | [illegible] | [illegible] |

नोट : एउटा कार्यक्रममा एकभन्दा बढी [illegible] कारण कुल संख्या र प्रतिशत अधिक देखिएको हो।

*स्रोत : रेडियोमा महिला बोली : समाज भाषावैज्ञानिक अध्ययन विषयक शोधपत्र*

घुसुवा ध्वनिको बढी प्रयोग भएका रेडियो अन्तर्वार्ताहरू राम्रा मानिँदैनन्। [illegible] क्रममा सहभागी अधिकांश महिलाको आर्थिक, शैक्षिक, सामाजिक, पारिवारिक, पेसागत, समूहगत वा संस्थागत हैसियत उच्च र सशक्त देखिन्छ। समकक्षी पुरुषले पनि उत्तिकैजसो घुसुवा ध्वनि प्रयोग गरेर बोलेका छन्। यसैले बदलिँदो समाज-अर्थ-राजनीतिक परिप्रेक्ष्यमा रेडियो अन्तर्वार्तामा घुसुवा ध्वनिको प्रयोगलाई पनि लैङ्गिक प्रवृत्तिमात्रै हो भन्न सकिने आधार छैन।

# झापादेखि कञ्चनपुरसम्म उस्तै छ निपात

रेडियो अन्तर्वार्तामा भनाइलाई जीवन्त बनाउने सशक्त भाषिक एकाइका रूपमा निपातलाई प्रयोग गर्न सकिन्छ । रेडियो सगरमाथाबाट प्रसारित विभिन्न अन्तर्वार्तामा सहभागी महिलाले यसको यथेष्ट उपयोग गरेको पाइएको छ । अधिकांश निपातहरू एकाक्षरी हुने भएकाले बोलीचालीका क्रममा शब्दभन्दा ध्वनि जस्तै सुनिन्छन् । । कुनै भाषिक एकाइहरूको अर्थमा जोड दिँदै भावात्मक अभिव्यक्तिलाई सशक्त बनाउने काम निपातहरूले गर्दछन् । निपातले अभिव्यक्तिलाई सकारात्मक र नकारात्मक दुवै धारमा उत्तिकै सशक्त ढंगले अर्थ प्रदान गर्न सघाउँछ ।

व्याकरणिक कोटिका पद वर्गहरूमध्ये निपात अशाब्दिक वर्गमा पर्दछ । निपातको निश्चित र स्वतन्त्र कोशीय अर्थ हुँदैन । निपातहरूले अन्य पदका सापेक्षतामा मात्र अर्थ व्यक्त गरेर व्याकरणिक कार्य सम्पन्न गर्दछन् । नेपाली व्याकरणका विभिन्न तहका एकाइहरूमा निपातले अर्थगत विशिष्टता प्रदान गरेको पाइन्छ ।

रूपतात्विक र वाक्यात्मक आधारलाई उपयोग गरेर निपातलाई छुट्याउन सकिन्छ । खासगरी वाक्यात्मक आधारमा वितरणको प्रवृत्तिलाई हेरेर निपातलाई छुट्याउन सजिलो हुन्छ । निपातको बारेमा अहिलेसम्म भाषिक दृष्टिले विस्तृत अध्ययन हुनसकेको छैन । यसैले रेडियो अन्तर्वार्तामा सहभागी महिलाको बोलीमा भेटिएका निपातहरूलाई प्रयोग बाहुल्यका आधारमा मोटामोटी मात्र चर्चा गरिएको छ ।

रेडियो सगरमाथाबाट प्रसारित अन्तर्वार्ताको अध्ययन गर्दा निपातको प्रयोग शतप्रतिशत वक्ताले गरेको भेटिएको छ । खासगरी, 'नि', 'त', 'नि त' जस्ता एकाक्षरी निपातको पदीय ध्वनि महिलाले बढी मात्रामा प्रयोग गरेका पाइएको छ (अधिकारी २०६४ : ८७) । सामान्यत: 'र' संयोजकका रूपमा परिचित भए पनि प्रश्नवाचक निपातको रूपमा समेत यसको प्रयोग भएको छ । यस्तै, 'के' 'क्या', 'पो' 'है', 'हैन?', 'हैन र?', 'चैं', 'चाहिँ' जस्ता निपातहरू प्रयोगमा आएका छन् । नेपाली भाषामा निपातहरू पनि साझा र समान लैङ्गिक अभिव्यक्ति दिने जीवन्त भाषिक अभिलक्षण हुन् ।

रेडियो अन्तर्वार्तामा सहभागीका बोलीमा 'नि', 'त', 'नि त' जस्ता एकाक्षरी निपात प्रयोग भएका उदाहरणहरू प्रशस्त भेटिएका छन् । कुनै शब्दका बीचमा 'त' भएका छन् भने कुनै 'नि' पछि विश्राम वा प्रश्नसमेत भएका छन् । कुनै वाक्यान्तमा उद्गार वा प्रश्नात्मक 'त' भएका रूपमा छन् भने कुनै 'त' र 'नि' का बीचमा शब्द भएका अवस्थामा पनि छन् । त्यति मात्र होइन, कुनै कुनै त वाक्यमा 'नि त' भएर पनि प्रयोग भएका छन् ।

**शब्दहरूका बीचमा 'त' भएका केही उदाहरणहरू :**

*जित्ने त होइन, कुरा त मेरो, त्याँ त एकदम, दिँदाखेरी त हामी, भनेपसि त कस्को, महिला त महिला, मलाई त हैन ?, हड्डी त पुलिसहरूले, मन् त अब, हुन त प्रधानमन्त्री, पुस्ता त अलि त परिवर्तन, पब्लिकले त नसुन्या, अनुसारले त प्रेसर, पनि त अलिकति, ठाउँमा त चुकिसक्यौँ, केई त बोल्दिनु, नभैकन त अज्ज कति त घरमा, तेस्पछि त बढ्दै यो त आफसेआफ, भने त उम् राम्रै, एक त हाम्रो कालीगरलाई त मैले, तेस्पछि चैँ त अनि, त्यति त हैन ?, या त ~ अब अँ ~, गाउँमा त खेतबारीको, परेसी त गाउँको, ठ्याक्कै त मलाई, तपाइँ त एकदमै, जिन्दगी त मैले, हेरेपछि त सकियो, परम्परामा त एक्दम, काइँ न काइँ त यो कुराले मेरो पनि त दिमागलाई, केसेसमा त यो, भन्दाखेरि त हैन ?, कत्थकको त कति, म त झसं ~ ~ गै लेख्या त छ, महिलाको त त्यो महिलाको त साँच्चै, जेष्ठनागरिकले त तै अलिकति सक्ने मान्छेले त अझै, त्यो त पढालेखा मइलाहरू त ल, एउडा त अ ~ ~ शैक्षिक, भनेको त सर्वप्रथम त आफ्नो, हस् त यहाँलाई, कुराहरू त यहाँ, हुन त अ ~ यो, नभएपछि त मेन कुरा त यस्तो कार्यतिर लाग्ने त हुँदैहुँदैन, अनि त रमाइलो, सेक्टर त चाइँ, पहिले त अ हाम्रो,*

**'नि' पछि विश्राम वा प्रश्नसमेत भएका केही उदाहरणहरू :**

*जाँदाखेरी त नि, अगि पनि भनेँ नि, गर्दाखेरी नि, है ? पनि त छ नि, हैन ?, दिन्छन् नि, भन्नुभो नि, भनेदेखि नि, लाग्छ नि ;, कस्तो हुन्छ भने नि, हुन्च नि, हैन ? भनेको नि, पनि नि, सट्टा नि, हैन ?, चैँने नि, हैन ?, पछि नि, अनि, भएपछि नि, रछ नि, लेख्या छ नि, पऱ्यो नि ;, भन्नुभो नि,*

**वाक्यको अन्तिममा उद्‌गार वा प्रश्नात्मक 'त' भएका केही उदाहरणहरू :**

*होइन त्यो ट ;, हेरिँदैन त ?, यस्तो त ;, के त ?, कसरी बित्यो त ?, के बितिरा छ त ? आत्मसम्मानको पर्व बनाउनुपर्छ त ?, के गर्दै हुनुन्छ त ?, ऐलेसम्म ट ;, यो कसरी गड्ने त ?, कसरी गर्दा हुन्छ त ?, किन होला त ? के हुनुपर्ने रेछ त ? पो छु त ;, कसरी स्वीकार्ने त ?, कसरी हेर्ने त ?, ऐले त ;, के हुन्छ त ?*

**'त' र 'नि' का बीचमा शब्द भएका केही उदाहरणहरू :**

*पनि त छ नि, हैन ?, जिम्मेवारी त उस्को बाउको हो नि ;, भनेपछि त त्यो चेञ्ज आउन जरुरी छ नि, खाँदा त भाँडाहरू धेरै भए नि, अब त नयाँ परिस्थिति आको छ नि ;, कैले काइँ त जट्टि...राम्रो भ पनि डिक्क हुन्छ नि ;, भनी ट हुँडै भ न नि, हो कि हैन ?, छुट्टिन त कति गारो भयो नि, गाउँमा त अब खान नि पाइँदैन नि, पोइसा त भै हाल्छ नि, गाउँमा त हुन्छ नि, यस्तै त हो नि, अब वाँहाँहरूलाई त थाहा छैन नि, त्यो त उस्मा आ को परिवर्तन हो नि ;, भने त नेपालको अस्तित्व नै रहेन नि ;, लागेपछि त कोई कस्तो...हुन्छ नि तेस्तो, पनि त होला नि, भनेको त धेरै ठूलो अप्रेसन हो नि है ?, मनार त क्यै हुँदैन नि ;, त्यो त यौडा अन्याय भयो नि ;*

**वाक्यमा 'नि त' भएका केही उदाहरणहरू :**

*मइला हुन्चे नि त , नहुन सक्च नि त, हइन र ?, बाउको हुन्छ नि त हुनुपरो नि त ;*

नेपाली महिलाको बोलीमा सबैभन्दा बढी 'नि', 'त', 'नि त' जस्ता एकाक्षरी निपात पदको प्रयोग भेटिएको छ । पूर्वमा झापा, मोरङदेखि पश्चिममा कञ्चनपुर, डडेलधुरासम्मका महिलाले यस खालका निपातको प्रयोग गर्दछन् । 'चैँ', 'के' ;, 'र' ;, 'खै' ;, 'क्या' ;, 'हगि' ;, 'हैन ?' जस्ता स्वतन्त्र अर्थविहीन पदीय ध्वनिको प्रयोगसमेत हुने भए पनि अन्तर्वार्ताका क्रममा कतै न कतै 'नि', 'त', 'नि त' वा 'न त' जस्ता ध्वनिको प्रयोग गर्नेहरू बढी छन् । निपातको प्रयोगबाट नेपाली महिला आफ्नो बोलीमा भावात्मक अभिव्यक्तिको स्पर्श गराउन चाहन्छन् भन्ने देखिन्छ । साथै, आफ्नो बोलीलाई अर्थगत विशिष्टताले सशक्त बनाउने कुरामा धेरैजसो नेपाली महिला पछि पर्न चाहँदैनन् भन्ने यसले पुष्टि गर्दछ । निपातको प्रयोगले सामान्य वाक्यलाई पनि जीवन्त बनाउँछ ।

निपात प्रयोग गर्नेहरूका तुलनामा निपात प्रयोग गर्ने राम्रो बानी नभएका सहभागीको बोलीमा घुसुवा ध्वनि र शब्दहरूको प्रयोग बढी पाइएको छ (अधिकारी २०६४ : ९४) । महिला आफ्नो अभिव्यक्तिमा जीवन्त अभिव्यञ्जना थप्न पनि निपातको प्रयोग गर्ने गर्दछन् । निपातका रूपमा 'नि', 'त', 'नि त' जस्ता ध्वनिको बढी प्रयोगले नेपाली महिलाको बोलीमा लयात्मकता पनि हुन्छ । निपातले सकारात्मक र नकारात्मक दुवै खालका अर्थलाई बलियो बनाउँछ । महिलाले धेरैजसो अन्तर्क्रियात्मक अभिव्यञ्जना प्रदान गर्न निपातको प्रयोग गर्दछन् । सञ्चारकर्मी र सहस्रोत व्यक्तिहरूको ध्यान आफूतिर तान्न वा छलफलमा सहभागी गराउन पनि निपातको प्रयोग प्रभावकारी हुन्छ । कतिपयले 'चाहिँ', 'चाईं' 'चाइने', 'चाइनी' जस्ता बहुअक्षरी निपातलाई थेगोका रूपमा समेत प्रयोग गर्दछन् । थेगोको काम गर्ने निपातहरू रेडियोका लागि 'हल्ला' मात्र हुन् ।

नेपाली भाषामा निपातको प्रयोगलाई लैङ्गिक दृष्टिले पनि साझा अभिलक्षण मान्न सकिन्छ । यस्तो प्रयोग पुरुषको बोलीमा पनि प्रशस्त भेटिन्छ । रेडियो अन्तर्वार्तालाई जीवन्त बनाउँदै कथ्यबोलीको नजिक पुऱ्याउन सार्थक निपातहरूले प्रशस्त योगदान गर्दछन् । हेयदृष्टि र घृणाभाव जगाउने जस्ता नकारात्मक अभिव्यक्तिबाट कसैलाई गालीगलौज गर्ने सन्दर्भमा बाहेक रेडियो अन्तर्वार्तामा निपातको प्रयोग प्रवाहलाई वैयक्तिक अभिव्यक्ति शैलीको रूपमा स्वीकार गर्ने चलन छ ।

# थाल बजाउनी सिष्टम गरिम्

थाल बजाउने विरोधको शैलीले कसरी प्रणालीको रूप लियो थाहा छैन । नेपाली शब्द प्रचलनमा हुँदाहुँदै पनि अङ्ग्रेजी शब्द घुसाएर बोल्ने बानी भने पुरुष-महिला दुवैमा पाइन्छ । भाषिक भूमण्डलीकरणले सबै वर्ग, क्षेत्र, जाति, पेसा, उमेर, अवस्था आदिका महिलामा कुनै न कुनै रूपमा प्रभाव पारेको हुन्छ नै ।

नेपाली बोलीचालीमा कतिपय अङ्ग्रेजी शब्दको आगमन अपरिहार्य जस्तै छ । मानक नेपाली भाषाको शुद्ध प्रयोगमा जोड दिने रेडियो सगरमाथाको प्रसारण निर्देशिका २०६३ ले समेत कतिपय अङ्ग्रेजी शब्दलाई भित्र्याउन अनुमति दिएको छ । अन्तर्वार्तामा सहभागीमध्ये अधिकांश महिलाले कुनै न कुनै अङ्ग्रेजी शब्दको प्रयोग गरेकै हुन्छन् । कतिपय शब्दहरू विकल्परहित वा अपरिहार्य पनि छन् । कतिपय अङ्ग्रेजी शब्दका चाहिँ नेपाली विकल्प त छन् तर अल्पप्रचलित वा अप्रचलित अवस्थामा ।

नेपाली भाषामा प्रचलित विकल्प भएका शब्दको ठाउँमा पनि अङ्ग्रेजी शब्द र शब्दसमूहको प्रयोग गर्ने बानीले रेडियो अन्तर्वार्तामा समेत प्रवेश पाएर स्थान बनाइसकेको छ । अङ्ग्रेजी शब्द प्रयोगका सिलसिलामा शब्दसमूह मात्र होइन, नेपाली वाक्यगठनमै अङ्ग्रेजी भाषाको प्रभाव परिसकेको छ । कतिपयले नेपाली शब्दलाई नै अङ्ग्रेजीकरण गरेर प्रयोग गर्ने गरेको पनि स्पष्टै सुनिन्छ ।

रैथाने हुन् या आगन्तुक, प्रत्येक शब्दले सामाजिक वर्गीकरणबारे केही न केही सूचना दिन्छन् । एउटै व्यक्तिले पनि कुनै कम्पनीमा भएको आधारमा आफूलाई फरक समारोहमा फरक तरिकाले स्व-वर्गीकरण गरी प्रस्तुत गर्न सक्छ (हड्सन सन् १९९९ : २३९)। नेपालीमा भने कतिपय अङ्ग्रेजी शब्दको प्रयोग अर्थको गहिराइलाई समेट्ने ध्येयले भन्दा पनि सामान्य भावलाई सघाउने साधनको रूपमा भएको पाइन्छ । मानक नेपाली भाषालाई दोस्रो भाषाका रूपमा प्रयोग गर्ने र अङ्ग्रेजी माध्यमका विद्यालयबाट शिक्षा प्राप्त नेपाली महिलाको बोलीमा यस खालको प्रवृत्ति बढी देखिन्छ ।

● **जस्ताको तस्तै प्रयोग**

शब्दका अगाडि वा पछाडि नेपालीका उपसर्ग, प्रत्यय, वचन, विभक्ति आदि र संगतिसूचक घटक नजोडिएको अङ्ग्रेजी शब्दलाई 'जस्ताको तस्तै' मान्न सकिन्छ । शब्दोच्चारणको विविधताका आधारमा मात्र आगन्तुक शब्दलाई नेपालीकृत मान्न नसकिने हुनाले कतिपय शब्दलाई फरक उच्चारणमा भेटिए पनि तिनलाई 'जस्ताको तस्तै' कोटिमा राख्ने गरिन्छ । रेडियो अन्तर्वार्तामा अधिकांश सहभागीले आगन्तुक अङ्ग्रेजी शब्द र शब्दसमूहको उच्चारण जस्ताको तस्तै गर्ने गरेका पनि छन् ।

अङ्ग्रेजी माध्यमबाट विद्यालय शिक्षा हासिल गरेका र उच्चशिक्षित वा विशेषज्ञ महिलाको बोलीमा आगन्तुक अङ्ग्रेजी शब्दहरू बढी भेटिन्छन् । यो लैङ्गिक नभएर मूलत: भूमण्डीकरणको आर्थिक उपनिवेशमा हुर्किएको मानवीय प्रवृत्ति हो । नेपालीभन्दा अङ्ग्रेजी भाषाबाट अध्ययन, अध्यापन गर्ने व्यक्तिमा अङ्ग्रेजी शब्दहरूको प्रयोग गर्ने बानी बढी छ । घरमा नेपाली नबोल्नेहरूले नेपाली भाषामा अन्तर्वार्ता दिँदा अङ्ग्रेजी शब्दको बढी प्रयोग गर्दछन् । उनीहरूले सामान्यत: बहुप्रचलित अङ्ग्रेजी आगन्तुक शब्द र शब्दसमूहको प्रयोग जस्ताको तस्तै गर्ने प्रयास गर्दछन् ।

**अङ्ग्रेजी शब्द र शब्दसमूहको जस्ताको तस्तै प्रयोग भएका केही उदाहरणहरू :**

*ग्यारेन्टी, पर्सेन्ट, एजेन्डा, बिजी, प्रोब्लम, सिचुएसन, टेन्सन, सपोर्ट, सिरियस्ली, ग्यारन्टी, सिष्टम, रिजव, ब्लिडिङ, ट्रेनिङ, एप्रोच, लिगलाइज, एबोर्सन, सोसाइटी, सेफ डेलिभरी, स्किल बर्थ एटेन्डेन्ट, लाइब बर्थ एटेन्ड, सेफ एबोर्सन, जस्टिफाइ, मेल डोमिनेटेड, चेन्ज, इक्वल, ग्राबिटी, नमिनेट, प्रेसर, रेस्पन्सिबल, रियलाइज, मेकानिजम, कभरेज, डाइभर्ट, एक्सरसाइज, ह्यान्ड रिटेन, लास्ट पोर्सन, ड्रास्टिक मिजर्स, इफेक्टिव इन्टुमेन्ट (इन्स्ट्रुमेन्ट), फुल्ली, डिभोटिड, टाइम, स्याडुल, डिफिकल्ट, मेडिकेसन (मेडिटेसन), पेन्टिङ, सिनियर, मोडर्न, मिक्स, फ्यासिलिटी, इम्प्रुभ, ग्र'प एक्जिबिसन, कम्प्युटर*

*एनिमेसन, कार्टुन एनिमेसन, सेल एनिमेसन, इन्ट्रेस, ट्रेनिङ, कन्टिनेन्टल, प्रोफेसनल, प्रोडक्ट, रिक्वेस्ट, रेस्पोन्स, युज, कम्प्रोमाइज, क्वालिटी, प्रिजर्भेटिभ, आर्टिफिसियल फ्लेभर, ट्याक्ल, डिफ्रेन्ट, चेन्जेबल, ब्यालेन्स, सपोर्ट, कन्सन्ट्रेट, सिरियस्ली, पासआउट, ब्यास्लर सेकेन्ड इयर, कोर्स, लाइक, क्याटलग, फ्यास्सन, डिफ्रेन्ट, इन्ट्रेस्ट, इन्ट्रेस, बिग्निङ, लोन, अर्डर, कलर, पर्स्नली, इट स्टार्ट अफ लाइक् इभ्री डे, आइ थिंक द बेस्ट थिंक अ पर्सन क्यान डु, सक्सेसफुल, इम्प्लोइ, ट्रेनिङ, फेम्ली, ट्याम, फिलिङ, जिन्स पैन्ट, कन्टिन्यु, रेस्पोन्स, इम्पोर्टेन्ट, सिरियल, प्राक्टिस, इन्टरभ्यु, लाइभ्ली, आक्टिङ, फिल, रेगुलर हजुन्वाइफ हजुन्वाइफ हजुन्वाइफ, क्रेजी, पाट्टिकुलर, सिम्पल, डिमान्ड, टान्जिबल, इन्डाइरेक्टली, हाइलाइट, मेन्सुरेसन, चित्रगुप्ता, च्यान्टिङ, हयुमन रिभोलुसन, रिफ्लेक्सन, बिजी, पार्टिसिपेटरी, एलाउ, टाइम, रिलेटिभ ह्याप्पीनेस, अब्सोलुट ह्याप्पीनेस, चेन्ज, साइकोलोजिकल्ली टर्चर, डान्स, क्लासिकल डान्स, टोट्टली, सेम, बेसिक, पर्मिसन, ओपन हार्ट सर्जरी, लास्ट स्टेज, क्याटगोराइज, एजुकेसन, कम्पल्सरी, सिभिक एजुकेसन, विल, कन्सेप्ट डेभ्लप, ल्याक अफ डिसिजन, ड्यु टु डु टु इलटरेसी, अर्डर, इम्पोसिबल, कलेक्टिभ रिस्पन्सिबिलिटी, ग्रुप फर्मेसन, कम्बिनेसन, सिस्टम, इकनमिक इकनमिक सिस्टम, लिवरलाइज्ड, इसु, लिवरलाइज इकनमिक पोलिसी, लिंक, फेइलिएर, सिस्टम, फोकस, ब्रोडर पोलिटिकस, हयुमन राइट, पार्टिसिपेन्ट, एडभोकेसी, कोअर्डिनेसन, सपोर्ट, इसु, एजुकेसन, इम्प्लोयमेन्ट, गाइडलाइन, चेन्ज, डेमोक्रेटिक, ट्रिट, सेफ्टी कभर, फस्ट, विज्नेस, पर्सेन्ट, एजुकेटेड, फर्वाड, चेन्ज, युज, रनिङ, इम्पोर्टान्स, इन्टर्नल, टुरिजम, इन्भल्भ, टुर, फिल, कल्चर, ह्यान्डल, स्पेसल्ली, मल्टिरिलिजियस, एक्चुअल्ली, सेक्टर, डेभ्लप, इम्प्लिमेन्टेसन, डिफिनिसन, कन्सर्न, कमन सेन्स अप्लाई, मोडिफाई, स्पेस, हन्ड्रेड पर्सेन्ट लस, पर्सेन्टेज, टिचर्स ट्रेनिङ, होपफुल्ली, पर्सेन्ट ।*

रेडियो अन्तर्वार्तामा जस्ताको जस्तै प्रयोग भएका उदाहरणहरूलाई केलाउँदा धेरैजसो शब्दका प्रचलित नेपाली विकल्प छन् । कतिपय शब्दलाई नेपाली वाक्यमा जबरजस्ती घुसाइएको छ । कतिपय शब्द र शब्दसमूहको नेपाली विकल्पभन्दा अङ्ग्रेजी शब्द नै जनजिब्रोमा चलिसकेको पनि छ ।

राज्य संरचनामा महिलाको तेत्तीस प्रतिशत सहभागिता सुनिश्चित गर्ने विधायिकी संकल्पपछि त्यस विषयमा बोल्नेहरूले 'तेत्तीस' लाई नेपालीमा र 'प्रतिशत' का ठाउँमा 'पर्सेन्ट' भन्ने गरेको पनि पाइन्छ । यसबाट नेपाली पदावलीमा समेत अङ्ग्रेजी शब्द प्रवेश गरेर मिश्रित पदावली बनाएको प्रस्ट हुन्छ । 'प्रतिशत' लाई 'पर्सेन्ट' भन्नेहरू बढी पढेलेखेकादेखि कम पढेलेखेकासम्म छन् । यसबाट नेपालीमा दुई भाषाका शब्दहरू मिलेर एउटा पदावली बन्ने प्रक्रिया पनि सुरु भइसकेको छनक मिल्छ । 'तत्तीस पर्सेन्ट'ले त्यसकै संकेत गर्दछ ।

'ग्यारेन्टी' वा 'ग्यारन्टी', 'सिष्टम', 'फेम्ली', 'ट्याम' वा 'टाइम' त्यस्ता शब्दहरू हुन्, जसलाई राज्य र समाजको विभेदीकरणमा परेर अति कम शिक्षित रहन बाध्य महिलाले पनि प्रयोग गरेका छन् । आफ्नो वर्गीय र लैङ्गिक हकका लागि सचेत हुने अनौपचारिक प्रयासका क्रममा वा गाउँबाट राजधानी आएर अरूको परिवारमा घरधन्दा गर्ने अवस्थाका महिलाले पनि तीमध्ये कुनै न कुनै शब्द जस्ताको तस्तै प्रयोग गरेका छन् । यसबाट अङ्ग्रेजी शब्दको प्रभाव नेपाली जनस्तरमा व्यापक भइरहेको संकेत मिल्दछ ।

पढालेखा मान्छेको अङ्ग्रेजी शब्द प्रयोग गर्ने मोहले गर्दा जनस्तरको बोली प्रभावित भएको हुनसक्छ । एफएम फ्रिक्वेन्सीका स्थानीय वा सामुदायिक रेडियो माध्यमले त्यसलाई अन्तर्वार्ता वा छलफल कार्यक्रमबाट व्यापक बनाउन सघाएका छन् । त्यसको प्रभावबाट महिला पनि मुक्त छैनन् । यसको पुष्टि देशका विभिन्न भागबाट काठमाडौं पुगेर रेडियो सगरमाथाका विभिन्न अन्तर्वार्तामा सहभागी भएका महिलाको बोलीले पनि गरेको छ ।

कतिपय वाक्यमा त नेपालीभन्दा अङ्ग्रेजी शब्द नै बढी छन् । 'आइ थिंक द बेस्ट थिंक अ पर्सन क्यान डु' त्यस्तै खालको एउटा उदाहरण हो । कतिपयले आफूले भन्न खोजेको कुरा स्पष्ट पार्नका लागि अङ्ग्रेजी शब्द घुसाएका छन् भने कतिपयले नेपालीमा भन्न आएन भन्दै अङ्ग्रेजी शब्द र शब्दसमूहको पनि सहारा

लिएका छन् । 'कन्सर्न', 'रिलेटिभ ह्याप्पिनेस', 'एब्सोलुट ह्याप्पिनेस' सोही क्रममा प्रयोग भएका केही उदाहरणहरू हुन् ।

'इम्प्लिमेन्टेसन कार्यान्वयन पक्ष' जस्ता वाक्यांशको प्रयोग भएको स्थिति पनि छ । यसले नेपाली भाषामा पहिले अङ्ग्रेजी शब्द घुसाएरमात्र त्यसलाई बुझाउने नेपाली शब्द प्रयोग गर्ने प्रवृत्तिलाई झल्काउँछ । गैरसरकारी संघसंस्थामा कार्यरत महिलाले प्राय: यसरी बोल्ने गरेका छन् । यसरी बोल्ने पुरुषको पनि कमी छैन ।

'थाल बजाउनी सिष्टम गरिम्Ú र ...कति टाइम एफर्ट लाक्च हैन ?Ú जस्ता वाक्यमा ...सिष्टमÚ र ...एफर्टÚ घुसुवा शब्दका रूपमा आएका छन् । ...एफर्टÚ प्रयोग गर्ने नै हो भने ...लाक्चÚ को ठाउँमा ...हुन्छÚ क्रियापद राख्नुपर्ने हुन्छ । नेपाली भाषामा अङ्ग्रेजी शब्द प्रयोग गर्नमा महिलाहरू पनि अगाडि छन् । यस्तो प्रवृत्तिका पछाडि लैंगिक कारण मात्र जिम्मेवार भने छैन ।

### ● नेपालीकृत प्रयोग

अङ्ग्रेजी शब्दको नेपालीकृत प्रयोग नेपाली बोलीको विशेषता हो । महिलाहरूको बोलीमा पनि त्यस खालको विशेषता पाइन्छ । अङ्ग्रेजी शब्दमा नेपाली विभक्ति जोड्नु, बहुवचन वा दोहोरो बहुवचन जोड्नु, परस्थानिक जोड्नु, निपातीकरण गर्नु, नेपाली समानान्तर शब्द जोड्नु, शब्दसमूहको बीचमा घुसुवा ध्वनि र नेपाली शब्द प्रयोग गर्नु सामान्य जस्तै भइसकेको छ । रेडियो अन्तर्वार्तामा सहभागी महिलाको बोलीमा पनि यस्तो लक्षण पर्याप्त देखिन्छ ।

**अङ्ग्रेजी शब्दको नेपालीकृत प्रयोगका केही उदाहरणहरू :**

*हाइसोसाइटीमा, एन्जियोले, मदर्स ग्रुपहरू, सिङ सिङ्गल पर्सनबाटै, टाइप्ड जुन डकुमेन्ट, भोइलेन्समा, डेमोक्र्याटिक उउ नम्समा, डेमोक्र्याटिक अ डाइलगहरूबाड, बोल्ड कलरहरू, इन्टरडेकोरेटिङहरू, सिनियर, डेकोरेटिङमा, ड्इङहरू, ट्रेडिसनलाई, डिभ्लप्मेन्टहरू, म्यानपावरहरू, बिजिनेस डाउनको, रेस्पोन्सै, डिभ्लप्मेन्ट स्टडिजको स्टुडेन्ट,*

*टेन फिफ्टिनसम्म, लाइक् टेलर्सहरूकाँ, फर्स्टमा स्टर्ट, लाइक् बेसिक्ली कम स्टर्ट, बेसिक्ली ब्याग्सबाट, साडिजमा, मन्थ्ली बेसमा पेमेन्ट्स, कस्टमर्सहरू, पार्टीजमा, कम्युनिटीहरूदेखि, साडिजहरू पार्टीजमा, इन्करेजै, मस्ट्ली सप्पै बेस्ट क्वलिटीको मत्तै युज, सेल्सहरू, सेक्स वर्कर्सहरू, बेसिक्ली मलाई चैं आई वन्ट टु लाइक विमेनहरूलाई इम्प्लोइमेन्ट गरेर छ नि ट्रेन गरेर, अँ वेलबिइङ स्टान्डर्ड अफ लिभिङ इन्क्रिज, कति टाइम एफर्ट लाक्च हैन ?, हँहँ प्राक्टिकल्ली, फन्नी टाइपको, रिदमबाटै, फिलै, एज अ लाइफमा, कमेन्ट्सहरू, डान्स मुमेन्टहरू, फिलिम क्रेजी, क्यारियरलाई नै ऐले लभ, पन्च डाइलगहेरू, पिस सेन्टर जस्ले चैं पिस, एजुकेसन र कल्चरलाई प्रोमोट, ज्वाइन्ट फामिलीमा, टाइम, बुद्धिष्टहरूले, डान्सहरूमा, डान्सान्स, सिनियर सिटिजनको लाइनमा, वेल टु डु फेमिलीको, इम्प्लिमेन्टेसनको पार्ट, स्लोगान युयानोले, ट्वेन्टी फर्स्ट सेन्चुरीमा, प्रोपर्टी राइटको, एज फ्याक्टरको, नाइन्टिन नाइन्टीतिर, सिस्टमले, इन्टेलेक्चुअल्सहरू, मेन समस्या, करेन्ट सिचुएसनका, अफिसियल्ली रूपमा अफिस्ले, प्यारेन्ट्सहरूमा डिपेन्डेन्ट, प्यारेन्ट्सहरूले, गार्जेनहरूलाई, एजुकेसनहरूमा, प्राक्टिकल रूपमै, कल्चर्सहरू, गेटअपदेखि, ह्याविटहरू, चाइल्डिसदेखि, प्राइमरी लेबलमा, कम्पोनेन्टहरूलाई, डिसिबिली भएका ।*

रेडियो अन्तर्वार्तामा बोलिएका वाक्यमा ध्यान दिने हो भने नेपाली भाषामा अङ्ग्रेजी शब्दले शब्द संरचनादेखि वाक्य संरचनासम्म प्रभाव पारेको देखिन्छ । अङ्ग्रेजी शब्दमा नेपाली विभक्ति, बहुवचन, बहुवचनसहित विभक्ति र परस्थानिक जोड्ने गरिएको छ । 'कम्युनिटीमा', 'कन्सेप्टमा', 'भेराइटीको', 'फेमिलीको', 'बुद्धिष्टहरूले', 'इन्टेलेक्चुअल्सहरू', 'ह्याबिटहरू', 'कम्पोनेन्टहरूलाई', 'प्राक्टिकल रूपमै', 'गेटअपदेखि', 'नाइन्टिन नाइन्टीतिर' यस्ता केही उदाहरण हुन् । यस्तो प्रवृत्तिको निरूपणका लागि छुट्टै अनुसन्धान गर्न पनि सकिन्छ ।

यसैगरी, अङ्ग्रेजी शब्दलाई निपातीकरण गरेर 'रेस्पोन्सै', 'इन्करेजै', 'फिलै', 'टाइमै' बनाएर बोल्ने गरेको पाइन्छ । त्यसबाहेक अङ्ग्रेजी शब्द 'डान्स' मा नेपाली पूरक अनुकरण 'सान्स' जोडेर 'डान्सान्स' भनेको पनि सुनिन्छ । नेपाली शब्द 'सारी' वा 'साडी' लाई नै अङ्ग्रेजीकरण गरेर 'सारीज' वा 'साडीज' बनाएर त्यसमा नेपाली बहुवचन जोडेर 'साडीजहरू' बनाएको पाइन्छ । त्यतिमात्र होइन, त्यसपछि 'पार्टीज' मा 'मा' विभक्ति थपेर 'साडिजहरू' मा बुट्टा भर्ने र 'पार्टीजमा' लगाएर जाने कुरा गर्नेहरू पनि छन् । यस खालको भाषिक खिचडी पकाउनमा महिला बढी सिपालु भेटिएका छन् ।

कतिपय अङ्ग्रेजी शब्दको प्रयोग नेपालीमा अर्थ न बर्थको जस्तो पनि लाग्छ । 'कति टाइम एफर्ट लाक्च हैन ?' नेपाली जस्तै गरी बोलेको भए पनि यसले अङ्ग्रेजी शब्दहरूलाई नेपाली सोचअनुरूप ढाल्न सकेको छैन । बोर्डिङ स्कुलमा पढेबढेका सहरिया युवा जमातमा यस खालको बोली व्यापक हुँदै आइरहेको छ । त्यस्तो प्रभाव रेडियो अन्तर्वार्तामा सहभागी महिलामा पनि देखिनु अस्वाभाविक होइन । सामुदायिक रेडियो सगरमाथाले नेपाली भाषाको शुद्ध प्रयोगका लागि स्थापनाकालदेखि नै जोड दिँदादिँदै पनि अन्तर्वार्ताका क्रममा भित्रिने अङ्ग्रेजी शब्द र शब्दसमूहको भारलाई नियन्त्रित र नियमित गर्नसकेको छैन । कतिपय सञ्चारकर्मीले नै अङ्ग्रेजी शब्दमा मोह देखाएका छन् । शताब्दियौँदेखि राज्यले सिमान्तीकरण गरेका मध्य र सुदूरपश्चिमका महिला समुदाय अधिकार प्राप्तिका लागि आन्दोलन गर्न राजधानी आएर विरोधमा उत्रँदा थालमात्रै बजाउँदैनन् । उनीहरूले थाल बजाएर विरोध जनाउने शैलीलाई पनि सिष्टमका रूपमा अभिव्यक्त गर्छन् । यसले नेपाली भाषाको बोध र अभिव्यक्ति शैलीमा अङ्ग्रेजी भाषाले व्यक्तिमा कतिसम्म र समाजमा कुन तहसम्म प्रभाव पारिसकेको छ भन्ने सङ्केत गर्छ । यसरी हेर्दा रेडियो अन्तर्वार्तामै पनि नेपाली शब्ददेखि वाक्य संरचनासम्म भित्रिएका अङ्ग्रेजी शब्द र शब्दसमूहको नेपालीकृत प्रयोगको पृथक र विस्तृत समाजभाषिक अध्ययनका लागि पर्याप्त आधार बनिसकेको देखिन्छ ।

# घुसुवा शब्दहरूको डुङ्गुर केलाउँदा

वाक्यमा भएका अनावश्यक वा निरर्थक शब्दलाई घुसुवा शब्द भनिन्छ । एउटै शब्दको पनि सार्थक र निरर्थक प्रयोग हुनसक्छ । जुन वाक्यमा जुन शब्दको निरर्थक प्रयोग भएको छ, त्यो वाक्यमा त्यो शब्दलाई घुसुवा शब्द मानिन्छ । बोलचालका क्रममा घुसुवा शब्दहरूको प्रयोग हुने सम्भावना बढी हुन्छ । विचार नगरीकनै  बोल्नेहरूको मुखबाट बढी नै घुसुवा शब्दहरू निस्कन्छन् । कतिपय घुसुवा शब्दहरू थेगोका रूपमा आउँछन् । विषय र शैलीमा अलमल भएका बेला पनि घुसुवा शब्दहरूले ठाउँ पाउँछन् । कतिपयले दकसका कारण पनि घुसुवा शब्दहरू ओकलिरहेका हुन्छन् ।

रेडियोमा घुसुवा शब्दहरू बढी भएमा भन्न खोजिएको कुरा प्रस्ट हुँदैन । त्यसले सूचनाको गुणस्तरमा नकारात्मक असर पार्छ । विषयवस्तुको प्रस्तुतिलाई फिक्का बनाउँछ र श्रोतालाई भड्काएर अर्कै स्टेसनतिर मोड्न मद्दत गर्छ । थोरै र चाहिने कुरामात्र बोल्ने बानी भएकाले पनि कहिलेकाहीँ चालै नपाईकन घुसुवा शब्दहरू प्रयोग गरिरहेका हुन्छन् । भाषाको मानक स्वरूपमा राम्रो पकड नभएको अवस्थामा पनि घुसुवा शब्दहरूले प्रश्रय पाइरहेका हुन्छन् । रेडियो अन्तर्वार्तामा सहभागी नेपाली महिलाको बोलीमा पनि घुसुवा शब्दहरू प्रशस्त सुनिन्छन् ।

रेडियो सगरमाथाका अन्तर्वार्तामा सहभागीका बोलीमा घुसुवा शब्द प्रयोग भएका केही उदाहरणहरू यसपछि लगत्तै कोठाहरूमा दिइएको छ । उदाहरण (अ) मा सहभागीको बोली जस्ताको तस्तै दिइएको छ भने (आ) मा घुसुवा ध्वनिसहित शब्द र शब्दसमूह हटाएपछिको रूप प्रस्तुत छ ।

| क्र.सं. | (अ)<br>**सहभागीको वास्तविक अभिव्यक्ति** | (आ)<br>**उपयुक्त अभिव्यक्ति** |
|---|---|---|
| १ | अ˜˜ त्यो दुइटै गरेर अ हामी यो संविधानसभा सदस्य निर्वाचन सम्बन्धमा बनेको यो विधेकमा दुइतै गरेर चाइने न्यूनतम तेत्तीस पर्सेन्ट अथ्वा एक तिहाइ महिलाको उम्मेदवारी हुनैपर्छ भन्ने प्रस्ट प्रावधान अँ त्यसो भको हुनाले पनि यो प्रावधानले चाइनी निश्चित रूपबाट सबै राजनीतिक पार्टीहरूलाई एक तिहाइ महिला उठाउनै पर्ने, त्यो चाइने अँ बाध्यात्मक बाध्यकारी चैं त्यो बेबस्था गरेको हुनाले पनि उठाउने बन्छ नै ।<br>*(अष्टलक्ष्मी शाक्य, सहअस्तित्व, २०६४।६।५)* | संविधानसभा सदस्य निर्वाचन विधेकमा दुइतै गरेर न्यूनतम एक तिहाइ महिलाको उम्मेदवारी हुनैपर्छ। यो प्रावधानले राजनीतिक पार्टीहरूलाई एक तिहाइ महिला उठाउनै पर्ने बेबस्था गरेको हुनाले पनि उठाउने बन्छ नै । |
| २ | दाइजो प्रथालाई नै लिउँ न अब, चेलीबेटीले नै अब मेरो बाउआमाको म बेइज्जत गरेर म दाइजो अँ के दाइजो विरोधमा जान चाहन्चु म व्याहा गर्दिनँ म भनेपछि कस्को के लाक्च ?<br>*(सीमा खान, सहअस्तित्व, २०६४।६।१२)* | दाइजो प्रथालाई नै लिउँ न, चेलीबेटीले नै दाइजो विरोधमा जान चाहन्चु व्याहा गर्दिनँ भनेपछि कस्को के लाक्च ? |
| ३ | थाल बजाउनी सिष्टम गरिम्, ...हाम्रो माग पूरा माग पूरा भएन भनेपछि हामी माग लिएर खुसी भएरै हामी फर्कनेछौं । यदि माग पूरा भएन भनेपिछि.... याँ कडाभन्दा कडा कानुन आन्दोलन गर्नेछम् । ...हामी सरकारको छिति पुर्याउनी हिसाबले हामी अगाडि बढ्नी छम् ।<br>*(बेलु वादी, सहअस्तित्व, २०६४।६।१९)* | थाल बजाउनी गरिम्, ...हाम्रो माग पूरा भएन भनेपिछि.... याँ कडाभन्दा कडा आन्दोलन गर्नेछम् । ... सरकारको छिति पुर्याउनी हिसाबले हामी अगाडि बढ्नी छम् । |
| ४ | यो स्कील बर्थ एटेन्डेन्ट अँ कसरी स्कील बर्थ एटेन्ड गर्ने भनेर सप्पैलाई हाम्ले सकेसम्म अँ अँ गाउँ घरसम्मलाई हाम्ले एप्रोच दिएर ट्रेनिङ दिएका छौं ।<br>*(डा. लता वज्राचार्य, सहअस्तित्व, २०६४।६।२६)* | कसरी स्कील बर्थ एटेन्ड गर्ने भनेर गाउँ घरसम्मलाई ट्रेनिङ दिएका छौं । |
| ५ | यौटा कुरा चइँ हामीले जसरी हुर्काउँछौं छोराछोरीबीच यौटा अब भेदभाव गर्न भएन, अबको पुस्ता र हामीभन्दा माथिल्लो पुस्ता त अलि त परिवर्तन हुनसक्छ नि ।...<br><br>त्यो कुराहरू मलाई कसरी हो जस्तो लाग्छ मलाई भन्देखि हेर्नुस् हाम्रो गाउँ ठाउँ मा कुकुर हुन्च नि, कुकुर भुस्याहा कुकुरहरू हुन्छन्, ...<br><br>*(कुसुम ज्ञवाली, सञ्जीवनी, २०६४।६।३)* | छोराछोरीबीच भेदभाव गर्न भएन, अबको पुस्ता र हामीभन्दा माथिल्लो पुस्ता त अलि त परिवर्तन हुनसक्छ नि ।...<br>त्यो कुराहरू मलाई कसरी हो जस्तो लाग्छ भन्देखि हाम्रो गाउँ ठाउँ मा कुकुर हुन्च नि, भुस्याहा कुकुरहरू हुन्छन्, ... |

एउटै वाक्यमा धेरै कुरा जोड्ने बानीले दश शब्दमा भन्न सकिने कुरा पनि साठीभन्दा बढी शब्द घुसाएर एउटा वाक्य पूरा गरेको पाइन्छ । कसैले पुनरुक्ति गरेर निरर्थक शब्दहरू घुसाएको पाइन्छ भने कसैले अल्मलिएर । भन्न खोजेको शब्द झट्ट नआएको अवस्थामा पनि अनावश्यक शब्दहरू घुसाएको पाइन्छ । कसै कसैले भनाइलाई ओजनदार बनाउने लोभमा पनि अनावश्यक शब्द घुसाएका छन् । शिक्षा डबलीमा प्रयोग भएका 'दुर्भाग्यवश' र 'इम्प्लिमेन्टेसन' शब्दहरूबाट यसको पुष्टि हुन्छ ।

भाषामा पकड नभएको अवस्थामा पनि घुसुवा शब्दहरूको प्रयोग भएको पाइन्छ । २०६४ साल असोज १९ गतेको सहअस्तित्वमा प्रयोग भएको 'सिष्टम' र 'कानुन', असोज २ गतेको शैलीमा प्रयोग भएको 'नभो', 'अब' जस्ता शब्दले यस्तै देखाउँछन् । कतिपय वाक्यमा स्पष्टताको कमीले शब्दहरूको बिटो थपिँदै गएको छ भने कतिपय शब्द स्पष्ट हुँदाहुँदै पनि बोल्ने क्रममा दुईचार शब्द स्वतः घुसेका छन् । सामान्यतः 'अब', 'यो', 'त्यो', 'मतलब', 'तपाईंको', 'अलि', 'अलिकति', 'भनुम् न', 'भनौँ न', 'कस्तो भयो भनी', 'चाइने', 'चाइनी' हिसाबमा, हिसाबड जस्ता शब्द वा शब्दसमूहहरू घुसाएर बोल्ने गरेको पाइन्छ ।

'हैन ?' जस्तो प्रश्नात्मक अभिव्यक्तिको प्रयोग पनि घुसुवा शब्दका रूपमा भएको पाइन्छ । प्रश्नात्मक शैलीमा प्रयोग भए पनि त्यसले उत्तरको अपेक्षा गरेको हुँदैन । यस्तै, कतिपयले 'हेर्नुस्' शब्दलाई पनि घुसुवा शब्दका रूपमा प्रयोग गरेका हुन्छन् । सो शब्दलाई अनपेक्षित तरिकाले घुसाइएको छ । घुसुवा शब्दको प्रयोग गर्ने बानी महिलामा मात्र होइन, पुरुषहरूमा पनि छ । स्रोत व्यक्ति र सञ्चारकर्मी दुवै खालका सहभागीको बोलीमा घुसुवा शब्दहरू उल्लेखनीय मात्रामा भेटिन्छन् । अन्तर्वार्तामा प्रशस्त भेटिने प्रतिक्रियात्मक अभिव्यक्ति 'हजुर' लाई पनि केही अन्तर्वार्तामा घुसुवा शब्दका रूपमा प्रयोग गरिएको छ । कतिपय अन्तर्वार्तामा श्रोता पक्षको वास्तै नगरी दुईजनाले निरर्थक कुराकानी गरिरहेको अवस्थामा यसको प्रयोग भएको छ ।

जे भए पनि घुसुवा शब्द र शब्दसमूहको प्रयोग गर्ने बानी लैंगिक नभएर वैयक्तिक वा मानवीय मात्र हो । कतिपय वक्ताले सामान्यभन्दा बढी शब्दको निरर्थक प्रयोग गर्दछन् भने कतिपयले कम । घुसुवा शब्दको अत्यधिक प्रयोगबाट कतिपय अन्तर्वार्ताको गुणस्तर खस्किन सक्छ भने रेडियो माध्यमको प्रभावकारी समयको अवमूल्यन पनि हुनजान्छ ।

# बोल्दा रैछन् वाक्य पनि थरीथरीका

नेपाली महिला स्वच्छन्द प्रकृतिका वाक्य पनि बोल्छन् । वाक्य पदावलीभन्दा माथिल्लो र अनुच्छेदभन्दा तल्लो भाषिक एकाइ हो । स्तरीय लेख्य नेपाली भाषामा संरचनाको आधारमा सरल, संयुक्त, मिश्र र मिलित गरी मुख्यत: चार प्रकारका वाक्य हुन्छन् । ती वाक्यहरूको संरचना र त्यसको प्रयोगसम्बन्धी निश्चित व्यवस्था छ । सोही व्यवस्थाअनुसार वाक्यको रचना गरिन्छ । अर्थका आधारमा नेपाली वाक्यहरू सामान्यार्थक, प्रश्नार्थक, आज्ञार्थक र विस्मयबोधक गरी चार प्रकारका छन् । रेडियो अन्तर्वार्तामा सहभागीले प्राय: कस्ता वाक्यहरू प्रयोग गर्छन् भन्ने ठम्याउनका लागि अर्थका आधारमा विभिन्न वाक्यहरूको अध्ययन गर्न सकिन्छ । अध्ययनबाट विभिन्न संरचनामा आबद्ध वाक्यहरूको व्याकरणगत संगतिसहित पूर्ण र अपूर्ण वाक्य प्रयोगको प्रवृत्तिसमेत पत्तो लगाइएको पनि छ ।

कथ्यभाषा बढी प्रवाहमय हुने भएकाले त्यो प्रवाह रेडियो अन्तर्वार्तामा कत्तिको र कुन रूपमा झल्किएको छ त भनेर जान्नका लागि भने रेडियो सुन्नैपर्ने हुन्छ । सुनेको कुरालाई जस्ताको तस्तै उतार्नमा पनि आफ्नै सीमा हुन्छन् । कतिपय उदाहरणलाई लिपिले मात्र झल्काउन नसक्ने भएकाले गति र यति, आरोह र अवरोह, विश्राम र प्रवाह आदिले कथ्यभाषालाई लेख्यभाषाको व्याकरणमा मात्र बाँधेर वाक्यको अध्ययन गर्न नसकिने स्पष्ट छ । कथ्य प्रवाहले भाव वा अर्थका सहारामा वाक्यको परम्परागत व्याकरणिक संरचनाको सीमालाई फराकिलो बनाउने सम्भावनालाई आत्मसात भने गर्न सकिन्छ ।

अन्तर्वार्तामा बोलिएका वाक्यका उदाहरणले मात्र कतिपय वाक्यको संरचना र भाव प्रष्ट गर्न सक्दैनन् । यसैले व्याकरणका दृष्टिले ठीक वाक्यका उदाहरण पनि सँगै राख्नुपर्ने हुन्छ । यहाँ सहभागीले बोलेका वास्तविक वाक्यको उदाहरण (अ) मा र सहभागीले उठाएका विषयकै आधारमा व्याकरणीय संरचनाका दृष्टिले ठीक उदाहरण (आ) मा उल्लेख गर्दै हरेक वाक्यको अलग अलग विश्लेषण गरिएको छ-

| क.सं. | (अ)<br>**सहभागीको वास्तविक वाक्य** | (आ)<br>**उपयुक्त वाक्य** |
| --- | --- | --- |
| १ | यसो छ, हामीले चइने अलिलि सरसल्ला त हामीले गऱ्यौँ˜˜ तर हामीले के थान्यौँ भन्दाखेरि अँ˜˜ कतिपय अब अरू अँ˜˜ भनुँम् मइला सांसदहरूसँग पनि कुरा नभको होइन ।<br>*(अष्टलक्ष्मी शाक्य, सहअस्तित्व, २०६४।६।५)* | यसो छ, हामीले महिला सांसदहरूसँग पनि सरसल्लाह गऱ्यौँ । |
| | विश्लेषण : एउटा वाक्यमा 'छ', 'गऱ्यौँ', 'ठान्यौँ', 'भनुम्' र 'होइन' गरी पाँचवटा समापिका क्रिया छन् । उद्देश्य 'हामीले' सुरुमै नभएर बीचमा तीन ठाउँमा प्रयोग भएको छ । विपरीतार्थी संयोजक 'तर' र 'नभको होइन' क्रियायोगी र क्रियाबीच संगति मिल्दैन । सरल, संयुक्त, मिश्र र मिलित कुनै पनि वाक्यको व्याकरणिक संरचनाभित्र यो वाक्य ठीकसँग अटाउन सक्दैन । भावको कुरा गर्ने हो भने 'महिला सांसदहरूसँग' गरिएको सरसल्लाहबाट वक्तालाई सन्तुष्टि नमिलेको अनुमान गर्न सकिन्छ । सामान्यार्थक वाक्यको सुरुमै 'यसो छ' भन्ने उपवाक्यको प्रयोगबाट बोलचालका क्रममा श्रोताको ध्यान तान्न र कुरा बुझाउन खोजेको देखिन्छ । | |
| २ | चेलीबेटीलाई अंश दिँदाखेरी त हामी मुलुकी अइन हेर्चौं, हैन ? तेतिखेर किन इस्लामिक कानुन हेरिँदैन त ?<br>*(सीमा खान, सहअस्तित्व, २०६४।६।१२)* | चेलीबेटीलाई अंश दिँदा किन इस्लामिक कानुन हेरिँदैन त ? |
| | विश्लेषण : यो वाक्यमा 'चेलीबेटीलाई अंश दिने', 'मुलुकी ऐन हेर्ने', 'इस्लामिक कानुन नहेर्ने' गरी तीनवटा उपवाक्यलाई समग्रमा संगति नमिलाई प्रयोग गरिएको छ । प्रश्नात्मक बनाइएका दुई वाक्यमा अघिल्लो वाक्य अलग गर्ने हो भने पछिल्लो वाक्य अधुरो हुन्छ । 'तेतिखेर' ले चेलीबेटीलाई अंश दिँदा भन्ने भाव तान्छ तर 'हेर्छौं' र 'हेरिँदैन' क्रियापदमा संगति छैन । यो वाक्य पनि प्रचलित व्याकरणको संरचनागत परिधिभन्दा बाहिरको प्रमाणित हुन्छ । बीचमा 'हैन?' भन्ने प्रश्नात्मक क्रियाले जवाफ होइन, समर्थन खोज्छ । | |
| ३ | कुरा चैँ भन्दा पनि तपाईको अब मुखले त सपैले हरेक कुरा भन्चन् हैन ?<br>*(कलावती वादी, सहअस्तित्व, २०६४।६।१९)* | मुखले त सपैले हरेक कुरा भन्छन् हैन ? |
| | विश्लेषण : यो वाक्यमा उद्देश्य 'मुखले' बीचतिर छ । उद्देश्यभन्दा अगाडिका शब्दहरू अनावश्यक छन् । अनावश्यक शब्दहरू हटाउने हो भने यो वाक्य सरल संरचनाभित्र पर्दछ । भावका हिसाबले यो वाक्यले अविश्वास प्रकट गरेको छ । 'हैन?' भनेर वाक्यलाई प्रश्नात्मक बनाउँदै समर्थन खोजिएको छ । | |

| क्र.सं. | (अ)<br>सहभागीको वास्तविक वाक्य | (आ)<br>उपयुक्त वाक्य |
|---|---|---|
| ४ | अर्को यो मातृमृत्युदर घटेको कारन यो हाम्रो ऐले गर्भपतन ऐले हामीकाँ लिगलाइज भएको छ ।<br>*(डा. लता वज्राचार्य, सहअस्तित्व, २०६४।६।२६)* | गर्भपतन गर्न पाइने हुनाले मातृमृत्युदर घटेको छ । |
| | विश्लेषण : यो वाक्य संरचनाका दृष्टिले अप्रचलित नभए पनि व्याकरण र भावका दृष्टिले गलत र अनर्थ भएको छ । 'अर्को यो' भनेर सुरु गरिएको यो वाक्य निरन्तर वाक्य हो भन्ने बुझिन्छ । क्रियायोगी 'कारन,' 'भएका' र क्रियापद 'छ' बीचमा संगति नमिलेर अर्थको अनर्थ भएको हो । विशेषज्ञको भाषामा यस खालको कमजोरीले विषयवस्तुको गुणस्तरमाथि गम्भीर प्रश्न उठाउँछ । गलत सन्देशबाट सञ्चारमाध्यम टाढै रहनुपर्ने भए पनि सहभागी सञ्चारकर्मीले त्यसतर्फ ध्यान दिएको र सच्याउन मद्दत गरेको पाइएको छैन । | |
| ५ | त्यो मात्रै हैन अफ्रिकाको जंगलको कुनै च्यानलमा देख्नुहोला सिंहको, सिंहिनीले पनि आफ्ना बच्चाहरूलाई बचाउँचे, लर्चे सिंहसित, सिंहलाई जिच्चे, अनि तेस्पछि उल्लाई ख्वाउँचे पनि ।<br>*(कुसुम ज्ञवाली, सञ्जीवनी, २०६४।६।३)* | सिंहिनीले पनि आफ्ना बच्चाहरूलाई बचाउँछे अनि खुवाउँछे । |
| | विश्लेषण : यो वाक्य निरन्तर वाक्य भइकन पनि उपवाक्यहरूको लहरबाट बनेको छ । सामान्यत: मिलित भन्न सकिने यो वाक्यको अन्त्यमा संयोजक भएकाले अपूर्ण जस्तो देखिन्छ । जम्मा सात शब्दमा भन्न सकिने कुरालाई तीन गुना बढी शब्द प्रयोग गरिएको छ । पुरुष सहभागीले प्रयोग गरेको यो वाक्यले महिलामात्र बढी बोल्छन् भन्ने परम्परागत मान्यतालाई गलत साबित गर्दछ । यस वाक्यमा धेरै कुरा एकैचोटि भन्न खोज्दा अर्थको अनर्थ पनि भएको छ । 'अफ्रिकाको जंगलको कुनै च्यानलमा देख्नुहोला सिंहको' एउटै वाक्यमा अटाउन खोजिएको यसप्रकारको शब्दको जालो अर्थका दृष्टिमा गुणस्तरहीन देखिन्छ । यस खालका वाक्यहरूलाई चाहिँ सहभागी सञ्चारकर्मीले सच्याएर पनि पार लगाउन सक्दैन । अन्तर्वार्ताका बेला 'अफ्रिकाको जंगलको' र 'सिंहको च्यानल हुँदैन' भनेर सच्याउन खोज्दा अतिथिको अपमान हुन्छ । त्यस खालका भ्रामक वा हावादारी वाक्यांश र वाक्यहरूलाई सम्पादनका बेला नहटाउने हो भने सञ्चारमाध्यमको विश्वसनीयता घट्छ । | |

| क.सं. | (अ)<br>सहभागीको वास्तविक वाक्य | (आ)<br>उपयुक्त वाक्य |
|---|---|---|
| ६ | शक्तिशाली संगठन हो तर के छ भनेदेखि नि, अब यौ एउटा अअ डेमोक्र्याटिक उउ नम्समा विश्वास गर्ने हुँदाखेरी अब भोइलेन्समा गएर एक्दम उउ तोडफोड गर्ने अथवा यो त्यो गर्ने हामी गर्न सक्दैनौं ।<br>*(सुप्रभा घिमिरे, सञ्जीवनी, २०६४।६।१७)* | शक्तिशाली संगठन हो तर प्रजातान्त्रिक परिपाटीमा विश्वास गर्ने हुँदाखेरी तोडफोड गर्न सक्दैनौं । |
| | विश्लेषण : यो सामान्यार्थक संयुक्त वाक्यमा अनावश्यक ध्वनि, शब्द र अङ्ग्रेजी पदावलीको प्रयोग छ । भाव र व्याकरणमा खासै कमजोरी नभए पनि यो वाक्यको प्रस्तुतिमा आत्मविश्वासको कमी झल्किन्छ। यसका पछाडि महिलाका सम्बन्धमा राज्यले गरेको संकल्प पनि व्यवहारमा ल्याउन नचाहने नेत्तृत्व पक्षको निकटताका कारण उत्पन्न अनिष्टबोध पनि एउटा कारण हुनसक्छ । | |
| ७ | हजुर, त्यो˜ विगतमा चैं यौटा अब तेतिबेला यौटा पूर्णकालीन सदस्यहरूको रूपमा चैं रएको रैनछ है ?<br>*(नैनकला थापा, सञ्जीवनी, २०६४।६।२४)* | विगतमा पूर्णकालीन सदस्यहरूको व्यवस्था रहेनछ । |
| | विश्लेषण : वाक्य सरल भइकन अन्तर्क्रियात्मक पनि छ। सुरुको 'हजुर' र अन्त्यको 'है ?' ले यसको पुष्टि गर्दछ। व्याकरणमा शुद्धता भए पनि वाक्यको बीचमा घुसेका अनावश्यक ध्वनि र शब्दले आत्मविश्वासलाई क्षीण देखाएका छन् । | |
| ८ | घरमा बसेर हाट डुइटै बाँढेर बसेर, फेरि ख्वाइ डिँडा पनि पोल्स्छ भन्न ठाल्यो भनी ट हुँडै भ न नि, हो कि हैन ?<br>*(सुषमा राजभण्डारी, सफलताको गोरेटो, २०६४।६।११)* | दुवै हात बाँधेर घरमै बसेर त हुँदै भएन नि, हो कि हैन ? |
| | विश्लेषण : मिलित भन्न सकिने यो वाक्य प्रश्नात्मक छ। यसमा भावसवलता भए पनि पृथक वर्णविन्यासले अशुद्धता झल्काएको छ। एउटै छोटो वाक्यमा 'घरमा बस्नु', 'दुवै हात बाँध्नु', 'ख्वाइदिनु', 'पोल्स्छ भन्न थाल्नु' जस्ता उपवाक्य अटेसमटेस छन्। असमापिका क्रिया 'बसेर' निरर्थक दोहोरिएको पनि छ। 'फेरि' र 'पनि' संयोजक, 'त..नि' निपात र 'हो कि हैन ?' प्रश्नात्मक पूरकले वाक्यलाई जीवन्त बनाएको छ। हातको 'हाट', दुइटैको 'डुइटै', बाँधेरको 'बाँढेर', दिँदाको 'डिँडा', पोल्छको 'पोल्स्छ', थाल्यो को 'ठाल्यो', त को 'ट', हुँदैको 'हुँडै', भएनको 'भ न', जस्ता वैकल्पिक वर्णको प्रयोगलाई काठमाडौंली भाषिकाको रूपमा ग्रहण गरेपछि मात्रै सही अर्थ ठम्याउन सकिन्छ। एउटै वाक्यमा सूक्ष्म रूपमा धेरै कुरा भन्ने प्रयास गरिएकाले वास्तविक वाक्यको संरचना छरितो हुनसकेको छैन । | |

| क्र.सं. | (अ)<br>सहभागीको वास्तविक वाक्य | (आ)<br>उपयुक्त वाक्य |
|---|---|---|
| ९ | मेन त चाइँ यस्को लागि चैं कस्तो हुँदो रैछ भने अब˜˜ सुरुमा त अब तेस्तो केस तेस्तो खासै उ भएन तर ऐले यसो हेर्दा चैं धेरै˜˜ एँ यस्को लागि चैं मैले जुन मैले गरिराछु तेस्को लागि चैं एक्दम टाइम चाइँ एक्दमै खट्नुपर्ने हुन्छ किनभने अब बिहानदेखि नै कैले हामीले गर्नुपर्ने हुन्छ कैले राति पनि भन्न पाइँदैन कैले अब आज छुट्टी म छुट्टी बस्छु भन्न पनि पाइँदैन । त्यो चाइँ मेनत चाइँ यस्मा धेरै गर्नुपर्छ ।<br>*(पुष्पा शर्मा, सफलताको गोरेटो,२०६४।६।१८)* | यसमा धेरै मिहिनेत गर्नुपर्छ । बिहानदेखि राति पनि भन्न पाइँदैन । कहिले छुट्टी पनि भन्न पाइँदैन । |
| | विश्लेषण : यो वाक्य अनावश्यक लामो छ । उद्देश्य सुरुमै भए पनि विधेय खण्ड बरालिएको छ । परम्परागत संरचनाका दृष्टिले यो वाक्य अव्याकरणिक छ भन्दा फरक पर्दैन । शब्द र शब्दसमूहको निरर्थक जालोले भन्न खोजेको कुरालाई छरितोसँग प्रकट गर्न दिएको छैन । यसको संगति केलाउनुको औचित्य पनि देखिँदैन । साठीभन्दा बढी शब्दको वास्तविक वाक्यले दिन खोजेको जरुरी जवाफ तीनवटा सरल वाक्यमा जम्मा चौधवटा शब्दको प्रयोगबाट सम्भव भएको छ । यसबाट कतिपय महिला अनावश्यक रूपमा वाक्य लम्ब्याएर बोल्छन् भन्ने पुष्टि हुन्छ । यो प्रवृत्ति लैंगिक भने होइन । रेडियो अन्तर्वार्तामा सहभागी पुरुषले प्रयोग गरेको वाक्य पनि अनावश्यक रूपमा लामो हुने गरेको उदाहरण यसअघि नै प्रस्तुत भइसकेको छ । | |
| १० | किनकि बीस वर्षपछाडि कहाँ हुन मन छ भन्ने हामी सबैलाई थाहा हुन्छ तर त्यसको लागि अहिलेदेखि के गर्नुपर्छ भनेर हामीलाई थाहा हुँदैन । हैन ?<br>*(जिसिका काफ्ले, सफलताको गोरेटो, २०६४।६।२५)* | बीस वर्षपछाडि कहाँ हुन मन छ हामी सबैलाई थाहा हुन्छ तर अहिलेदेखि के गर्नुपर्छ थाहा हुँदैन, हैन ? |
| | विश्लेषण : व्याकरणका दृष्टिले यो वाक्यमा खोट नदेखिए पनि अनावश्यक शब्दको भार यसमा पनि छ । सामान्यार्थक यो वाक्यको अन्त्यमा प्रश्नपरक पूरक 'हैन ?' को प्रयोग गरिए पनि जवाफको अपेक्षा गरिएको छैन । सुरुमै कारण देखाऊ संयोजक 'किनकि' प्रयोग गरिएको यो वाक्य मिलित संरचनामा अटाउन सक्ने देखिन्छ । | |

| क्र.सं. | (अ)<br>सहभागीको वास्तविक वाक्य | (आ)<br>उपयुक्त वाक्य |
|---|---|---|
| ११ | क्यै नराम्रो गरेर हिन्या हैन आफूले त अब उसैको गल्तीले गर्दा निस्केर हिन्न परेसी त गाउँको माया नि भैहाल्च है ?<br>*(सीता थापा, शैली, २०६४।६।२)* | उसैको गल्ती हो, मैले नराम्रो गरेर हिँडेको पनि हैन। गाउँको माया त भैहाल्छ है ? |
| | विश्लेषण : संरचनाका कोणबाट मिलित भन्न सकिने यो वाक्यमा भावको अप्रत्याशित संयोजन छ। क्षेत्रीय भाषिकाको छनक दिने शब्दहरू 'हिन्या', 'हिन्न', 'परेसी', 'नि', 'भैहाल्च' को प्रयोग भएको छ। अत्यल्पशिक्षित सहभागीले पतिका कारण घर छोडेर हिँड्नुपरेको कुरा बताउने क्रममा एउटै वाक्यमा गाउँको मायाको कुरा घुसाएको देखिन्छ, त्यो पनि प्रश्नात्मक शैलीमा। यसले एउटै वाक्यको भावसंगतिलाई अस्वाभाविक बनाएको छ। | |
| १२ | यस्तै भन्ने मलाई छैन नि, म कहाँ गएर टक्क मेरो फिलिङ अडकिन्छ, कुन चैं कुराले मलाई छुन्च थाहै हुँदैन।<br>*(विमला तुम्खेवा, शैली, २०६४।६।९)* | कुन चैं कुराले मलाई छुन्छ थाहै हुँदैन। |
| | विश्लेषण : सरल बन्नसक्ने वाक्यको संरचनालाई सुरुमै अनावश्यक रूपमा उपवाक्यहरू जोडेर लम्ब्याइएको छ। सुरुकै उपवाक्यले पनि जवाफ त दिन खोजेको छ तर अपूर्ण रूपमा। दोस्रो उपवाक्यले अनुकरणात्मकदेखि अङ्ग्रेजी शब्दसम्मको सहारा खोजेको छ, तैपनि भन्न खोजेको कुरा प्रस्ट्याउन सकेको छैन। तेस्रो प्रयासमा वाक्य टुंगिन्छ। भन्न खोजेको कुरा तेस्रो उपवाक्य मात्रै भए पनि पुग्छ। यसबाट शिक्षित र भाषासाहित्यमै चलखेल गर्ने महिलालाई पनि भन्न खोजेको कुरा एकैपटकमा भन्न गाह्रो पर्छ भन्ने पुष्टि हुन्छ। व्याकरणका दृष्टिले मानक धारबाट बाहिर नभए पनि वाक्यको प्रस्तुतिमा निपातको वितरण र क्रियापदको ध्वनि विकल्पले क्षेत्रीय भाषिकाको छनक दिन्छ। | |
| १३ | त्यो सिरियलबाट एवार्ड पाउँदाखेरि चाहिँ मलाई चाहिँ जे होस् मैले चैं केही गर्नसक्ने रैचु देस्को लागि आफ्नो लागि आफ्नो आमाबुबाको लागि क्यै गर्नसक्ने रैछु जस्तो फिल भएर चैं यो लाइनमा लागेँ ।<br>*(दीपाश्री निरौला, शैली, २०६४।६।१६)* | एवार्ड पाएपछि मैले केही गर्नसक्ने रैछु जस्तो लाग्यो अनि यही क्षेत्रमा लागेँ । |
| | विश्लेषण : मिलित वाक्य संरचनामा थोरै शब्दमा भन्न सकिने कुरा पनि प्रस्तुत वाक्यमा चाहिनेभन्दा बढी लम्ब्याइएको छ। एउटा सिरियलबाट एवार्ड पाउँदैमा चाहिनेभन्दा बढी कुरा जोडेर कला क्षेत्रमा काम गर्न थालेको बताउने परम्परागत सोच र निरर्थक शब्दहरूको जालो यस वाक्यमा भेटिन्छ। त्यसले वाक्यको छरितोपनालाई बोधो बनाएको छ। | |

<table>
<tr><th>क्र.सं.</th><th>(अ)<br>सहभागीको वास्तविक वाक्य</th><th>(आ)<br>उपयुक्त वाक्य</th></tr>
<tr><td>१४</td><td>ऐले मेरो डर चेञ्ज भको छ क्या ।<br>(कान्ता रिजाल, शैली, २०६४।६।२३)</td><td>ऐले मेरो डर परिवर्तन भएको छ क्या ।</td></tr>
<tr><td></td><td colspan="2">विश्लेषण : सरल संरचनाको अन्तर्क्रियात्मक वाक्य हो यो । दुईवटा नामयोगी बोकेको 'डर' यो वाक्यको उद्देश्य हो भने पछिल्लो चार शब्दको समूह विधेय हो । विधेयको अन्त्यमा प्रयुक्त 'क्या' अन्तर्क्रियात्मक अभिव्यक्ति हो । अङ्ग्रेजी शब्द 'चेञ्ज' का ठाउँमा 'परिवर्तन' र 'भको' ठाउँमा 'भएको' राख्ने हो भने यो वाक्य मानक नेपाली हुनसक्छ । बोलचालको भाषामा भने यो वाक्य यत्तिकै सरल र सार्थक छ । रेडियोमा छोटो र स्पष्ट वाक्यको प्रयोगलाई राम्रो मानिन्छ पनि । अन्तर्वार्तामा त झन अन्तर्क्रियात्मक अभिव्यक्तिको अपेक्षा पनि हुन्छ । यो वाक्य नेपाली महिला लामा-लामा वाक्यमात्र बोल्दैनन् भन्ने प्रमाण पनि हो । छोटा वाक्यको प्रयोग प्रवृत्ति पनि लैंगिक होइन, वैयक्तिकमात्र हो ।</td></tr>
<tr><td>१५</td><td>दुःखको त अब याँलाई था छ कि छैन ? मेरो ओपनहार्ट सर्जरी भएको हो, मेरो मुटुको अपरेसन गरेको हो ।<br>(हनी श्रेष्ठ, शैली, २०६४।६।३०)</td><td>दुःखको त याँलाई था छ कि छैन ? मेरो मुटुको अपरेसन गरेको हो ।</td></tr>
<tr><td></td><td colspan="2">विश्लेषण : प्रस्तुत वाक्यले अनावश्यक रूपमा अङ्ग्रेजी शब्दसमूह जोडिएको उपवाक्यलाई बीचमा बोकेको छ । संयुक्त प्रश्नात्मक वाक्यको व्याकरणिक संगति भने मिलेको छ । उच्चारणमा प्रयत्नलाघव भएको सर्वनाम शब्द 'याँ' रेडियो अन्तर्वार्तामा स्वाभाविक मानिन्छ ।</td></tr>
<tr><td>१६</td><td>अइलेसम्मनको हाम्रो देशको जुन देशमा कानुन बन्या छ, त्यो चैं सब्भन्दा त्रुटिपूर्ण चैं के भने कानुन भएर मात्रै तेल्लाई चैं इम्प्लिमेन्टेसनको पार्टमा, तेसैले ह्याँले किन, मेरो यौटा नैतिकताको कुरो, लु म बसम् न त्याँ भन्नु तर याँ त के हुन्च भने, कम्पलसरी, त्याँ लेख्या त छ, (कमला न्यौपाने, सहभागिता, २०६४।६।७)</td><td>देशमा कानुन छ तर कार्यान्वयन भएको छैन । नैतिकता नभएकाले लेखेको सिट पनि छाड्दैनन् ।</td></tr>
<tr><td></td><td colspan="2">विश्लेषण : प्रस्तुत वाक्य अत्यन्त जटिल छ । संयुक्त र मिश्र वाक्यको आंशिक संयोजन छ । अपूर्ण उपवाक्यहरू छन् । अर्थका आधारमा हेर्ने हो भने एउटै अङ्ग्रेजी शब्द 'कम्पलसरी' ले एउटा उपवाक्यको काम गर्नुपर्ने अवस्था छ । यसैले भन्न खोजेको कुरा वाक्यको संरचना र शब्दहरूका आधारमा भन्दा पनि अनुमानका भरमा बुझ्नुपर्ने हुन्छ । बोलीचालीका शब्दसमूहले वाक्यलाई अपूर्ण भए पनि गतिमय बनाएको पाइन्छ । जानेको जति सबै कुरा जोडेर एकैचोटि भन्न खोज्दा वाक्य संरचना नै परम्परागत व्याकरणको घेराबाहिर पुगेको देखिन्छ । 'जुन', 'भने', 'तेसैले', 'तर' जस्ता शब्दहरूको प्रयोग अपूर्णतामा टुंगिएको वा अन्यत्रै मोडिएको छ ।</td></tr>
</table>

| क.सं. | (अ)<br>**सहभागीको वास्तविक वाक्य** | (आ)<br>**उपयुक्त वाक्य** |
|---|---|---|
| १७ | अइले कस्तो छ भने एउडा डोनर ड्रिभेन ।<br>*(प्रतिभा सुवेदी, हाम्रो सरोकार, २०६४।६।४)* | अहिले दाताको चाहना-अनुरूप काम हुन्छ । |
| | विश्लेषण : नेपालीमा अपूर्ण वाक्यबाटै औपचारिक कुराकानीसमेत हुन्छ भन्ने उदाहरण यो वाक्यबाट मिल्दछ । 'अइले कस्तो छ भने' भनेर भूमिका बाँध्नसक्ने तर 'एउडा डोनर ड्रिभेन' भनेर वाक्य टुङ्ग्याइदिने प्रवृत्तिले पनि अन्दाजका भरमा कुरा बुझ्न आग्रह गर्छ । जम्मा सात शब्दको अपूर्ण वाक्यमा 'एउटा' शब्द निरर्थक रूपमा घुसेको छ । यसले बोलीचालीको भाषालाई कतिपय अवस्थामा संरचनाका हिसाबले पनि यादृच्छिक बनाउने गरेको संकेत गर्दछ । रेडियो अन्तर्वार्तामा सहभागी महिलाको बोलीमा पनि यो प्रवृत्ति देखिएको छ । यो  लैंगिक प्रवृत्ति भने होइन । | |
| १८ | पचत्तर जिल्लामा एउटा जिल्लाबाट एकजना पुरुष एक्जना मइला आउँछ यस्मा जिल्लाहरूबाट र काठमान्डुबाट चैँ धेरै साथीहरू यीँ पैलेदेखिन् यतै आर बस्नी यतै अब पडाइ अ˜ पडाइको अ अ अ सिलसिलामा या कामहर्को सिलसिलामा पनि यता धेरै हुने भएको हुनाले यताको काठमान्डुको पार्टिसिपेन्ट पनि धेरै हुन्च तर वाँहरू सपै बाइरको नै हुनुन्छ ।<br>*(सञ्जु नेपाल, युवा आवाज, २०६४।६।८)* | पचत्तर जिल्लाबाट एकजना पुरुष एक्जना महिला आउँछन् । काठमाडौंका सहभागी धेरै देखिए पनि उनीहरू बाहिरका पनि हुन्छन् । तीमध्ये कोही पढ्न र कोही कामका लागि काठमाडौं बसेका छन् । |
| | विश्लेषण : वाक्य संरचनाका दृष्टिले प्रस्तुत वाक्य लामोमात्र होइन, जटिल र व्याकरणका दृष्टिले असंगत छ । एउटै वाक्यमा धेरै कुरा भन्ने बानी यो वाक्यमा पनि देखिन्छ । यसैले वाक्य अस्पष्ट बनेको छ । एउटा वाक्यभित्र उपवाक्यमात्र होइन, अनुच्छेदमा अटाउने कुरा जबरजस्ती घुसाउन खोजिएको छ । नामपदहरूसँग 'आउँछ' समापिका क्रियाको संगति मिलेको पाइँदैन भने वाक्य निरन्तर अघि बढिरहेको सुनिन्छ । 'आउँछ' र 'यस्मा' को बीचमा शून्य संयोजक छ । 'यस्मा' पछिको वाक्यमा तीनवटा उपवाक्यहरू आश्रित छन् । अङ्ग्रेजी शब्द 'पार्टिसिपेन्ट' (सहभागी) सित 'हुन्च' क्रियाको संगति मिल्दैन । विपरीतार्थक संयोजक 'तर' पछि सहभागीलाई आदरार्थी सर्वनाम र क्रियापद प्रयोग गर्नुको पनि सिंगो कुराकानीमा तालमेल छैन । यसबाट पनि कुरा गर्न पाएपछि जथाभावी शब्द प्रयोग गर्ने र धेरै कुरा एकैपटक वा एउटै वाक्यमा अटाउन खोज्ने प्रवत्ति छर्लंग हुन्छ । यसरी लामो र असंगत प्रयोगले वाक्यलाई जटिल बनाएको छ । यस खालको प्रयोगका पछाडि लैंगिकभन्दा वैयक्तिक कारण नै प्रमुख देखिन्छ । कतिपय पुरुषले पनि यस्ता वाक्यहरू प्रयोग गरेर रेडियोमा अन्तर्वार्ता दिइरहेको सुनिन्छ । | |

| क्र.सं. | (अ)<br>**सहभागीको वास्तविक वाक्य** | (आ)<br>**उपयुक्त वाक्य** |
|---|---|---|
| १९ | ह~~ मैले सुझाव दिनुभन्दा पनि हामीलाई राज्यले कसरी के दिनुपर्छ भन्ने चैँ भन्छु, हैन ?<br>*(लालकुमारी रोका मगर, युवा आवाज, २०६४।६।१५)* | हामीलाई राज्यले के दिनुपर्ने हो त्यो भन्छु । |
| | विश्लेषण : 'भन्दा' नामयोगी र 'पनि' संयोजकले दुइटा उपवाक्यलाई भिन्नै अर्थमा देखाउन खोजे पनि यो वाक्यमा एउटै अर्थका दुईटा उपवाक्य छन् । अर्थका दृष्टिले 'सुझाव' नै दिने कुरा छ, तर 'सुझाव' दिन्न अर्थोकै दिन्छु भनिएको छ। अन्तर्वार्ताको वातावरणलाई आफू अनुकूलित गर्ने वाक्य हो यो। परम्परागत पुरुषको प्रभुत्ववादी प्रवृत्ति झल्काउने खालको यो वाक्य महिलाले पनि प्रयोग गरेको पाइएको छ । यसले शिक्षा, समाज, अर्थ, राजनीति र राज्यका सरकारी, गैरसरकारी शक्ति संरचनामा महिलाको पहुँच भयो भने उनीहरू पनि पुरुषसरह अन्तर्क्रियामा आफ्नो प्रभाव जमाउन पछि पर्दैनन् भन्ने उदाहरण यस वाक्यबाट मिल्दछ । वाक्य प्रश्नात्मक छ । संगति पनि मिलेको छ । | |
| २० | उनीहरूको लागि जस् जब हामीले परिवारमा यौडा राम्रो खालको शिक्षा दिन सक्छौं अनि त्यस्लाई त्यल्ले त्यल् समाजले त्यल्लाई हेर्ने दृष्टिकोण अलिकति राम्रो बनाउन सक्छौं अनि पक्का पनि अनि राष्ट्रले गराउन पर्ने बाध्यता हुन्छ ।<br>*(सरला भट्टराई, युवा आवाज, २०६४।६।२२)* | परिवार र समाजले कुलतमा लागेका युवालाई हेर्ने दृष्टिकोण राम्रो भयो भने राष्ट्रले पनि राम्रै गर्नुपर्ने हुन्छ । |
| | विश्लेषण : 'जब', 'अनि', 'पनि' संयोजकहरूले जोडिएको यो मिलित वाक्य संरचनाका दृष्टिले सुगठित छैन । अर्थ पनि अघिल्लो वाक्यबाट नामपदहरू लिएर बुझ्नुपर्ने हुन्छ । अभिव्यक्ति पक्ष पनि शिथिल छ । यो वाक्यले विषयवस्तुको बोध र अभिव्यक्तिमा वक्ताको पकड नभएको देखाउँछ । यसका पछाडि विभिन्न कारण हुन सक्छन् । समाजमा हुने गरेको लैंगिक भेदभावले व्यक्तिको क्षमता र आत्मविश्वासमा नकारात्मक असर पारेको पनि हुनसक्छ । यति हुँदाहुँदै पनि यस खालका वाक्य प्रयोग गर्ने प्रवृत्ति महिलाको मात्र हाइन । त्यस्तै परिस्थिति र मनस्थितिबाट गुज्रिएको जो कोहीले पनि कहिलेकाहीँ यस्तो वाक्य प्रयोग गर्न सक्छ । | |

| क्र.सं. | (अ)<br>**सहभागीको वास्तविक वाक्य** | (आ)<br>**उपयुक्त वाक्य** |
|---|---|---|
| २१ | मैले सिरुबारी टोलमा गएँ र त्यहाँ टुरमा गएर मैले देखेँ गुरुङहरूको कल्चर कस्तो हुन्छ (?) उनीरूको गेटअपदेखि लिएर उनीरूको सप्पै मतलब जुन ह्याबिटहरू सबै मान्छेसँग कसरी बोल्ने (?) उनीरूले गेसलाई कसरी यो गर्छ सम्मान गर्छ (?) त्यस्तो सप्पै थाहा पाउनु पाउँदाखेरि अनि त नि सप्पै बारीमा अ मतलब अब न्याचरल, न्याच्रल रिसोर्समात्र नभेर हामीले त्याँको ।<br>*(सम्भना तामाङ, सञ्जीवनी, २०६४।६।१०)* | मैले सिरुबारी गएर गुरुङ संस्कृति देखेँ । उनीहरूको पहिरनदेखि आनीबानीसम्म थाहा पाएँ । |
| | विश्लेषण : सरल, संयुक्त, मिश्र र मिलित सबै खालको वाक्यको संम्मिश्रण छ यसमा । कर्ता 'मैले', कर्म 'टोलमा' र क्रिया 'गएँ' बीचको व्याकरणमा कारकीय र विभक्तिगत संगति मिल्दैन । प्रश्नात्मक अभिव्यक्तिले उत्तरको अपेक्षा नगरे पनि वाक्यलाई प्रवाहमय भने बनाएको छ । 'त नि' निपात, 'मतलब' थेगो आदिले वाक्यलाई अन्तर्क्रियात्मक पनि बनाएको छ । अङ्ग्रेजी शब्दको जस्ताको तस्तै र नेपालीकृत दुवै खालको प्रयोग छ । धेरै शब्द प्रयोग र पुनरुक्ति गरेर लम्ब्याउँदै लगे पनि अन्त्यमा वाक्य अपूर्ण छ । 'सिरुबारी' लाई कुरा गर्दै जाँदा 'बारी' मात्रै पनि भनिएको छ । पूरै वाक्यमा ध्यान दिन नभ्याउने श्रोताका लागि यस खालको शब्द प्रयोगले अर्थको अनर्थ हुन पनि सक्छ । यसले अन्तर्वार्ताको गुणस्तरमा नकारात्मक असर पार्नसक्छ । प्राकृतिक स्रोतको कुरा शब्दसमूहमा मात्र सीमित छ । त्यसलाई सिरुबारी भ्रमणका बेला देख्न पाएको कुरा श्रोताले अनुमानका भरमा बुझ्नुपर्ने हुन्छ । 'पाउनु पाउँदाखेरि' भाषिकागत भेद देखाउने अभिलक्षण हो । धेरै कुरा एकैपटक लटरपटर गरेर भन्ने बानी युवापुस्तामा पनि छ भन्ने पुष्टि यो वाक्यले गर्दछ । यस्तो प्रवृत्ति कतिपय पुरुषमा पनि देखिन्छ । यसैले यसलाई लैंगिक प्रवृत्ति भन्न मिल्दैन । | |

| क्र.सं. | (अ)<br>**सहभागीको वास्तविक वाक्य** | (आ)<br>**उपयुक्त वाक्य** |
|---|---|---|
| २३ | यो यौटा मानव अधिकारको हनन हो, जुन पींडा हामीले भोगिराखेका छौं यो चाइँ एउटा राजनीतिक दलहरूले चाइँ एक्दमै उठाउनुपर्छ भन्ने चाइँ हाम्रो माग हो ।<br>*(जानुका भट्टराई, समावेशी अभियान, २०६४।६।८)* | मानवअधिकार हननको जुन पीडा हामीले भोगिराखेका छौं, त्यसलाई राजनीतिक दलहरूले उठाउनुपर्छ भन्ने हाम्रो माग हो । |
| | विश्लेषण : सुरुमा सरल, त्यसपछि मिश्र र अन्त्यमा पुनः सरल वाक्यको सम्मिश्रणबाट बनेको यो वाक्यलाई मिलित वाक्य भन्न सकिन्छ । बेचबिखनको पीडा भोगिसकेपछि संगठित भएर पीडितको नेतृत्व गर्ने संस्था प्रमुखको यो वाक्य कुनै भाषणवाज पुरुषको भन्दा कम छैन । पीडालाई अनुनासिक बनाएर 'पींडा' भनिएको छ । 'चाइँ' र 'यौटा' वा 'एउटा' जस्ता शब्दहरू दोहोरिए पनि 'एक्दमै' शब्दले अभिव्यक्तिलाई अनुभूतिको नजिक पुऱ्याउन खोजेको हुनसक्छ । अल्पशिक्षित र हदैसम्म शोषित भए पनि महिलाले मौका पाए भने सचेत तरिकाले व्याकरणसम्मत वाक्य प्रयोग गरेर आफ्ना कुरा नेपाली सञ्चारमाध्यममार्फत सार्वजनिक गर्न सक्छन् भन्ने पुष्टि यस वाक्यले गर्दछ । | |

रेडियो अन्तर्वार्तामा सहभागी विभिन्न व्यक्तिले बोलेका वाक्यहरूको विश्लेषणबाट नेपाली महिलाले बोल्ने कतिपय वाक्यका स्वरूप परम्परागत व्याकरणिक संरचनाको सीमा वा घेराबाट बाहिर समेत गइसकेका प्रस्ट हुन्छ । उनीहरू मौलिक तरिकाले छोटा छोटादेखि लामा लामा वाक्यसम्म पनि बोल्न सक्छन् । यसबाट संसार र समाजको यथार्थ प्रस्तुत गर्न हाम्रो भाषिक प्रयोग पर्याप्त छैन (मेरिल, ली र फ्राइडल्यान्डर सन् १९९० : ४१ र ४२) भन्ने पुष्टि हुन्छ । रेडियो अन्तर्वार्तामा सहभागी स्रोत व्यक्तिले पनि वास्तविकता निरन्तर परिवर्तनशील छ तर भाषाले व्यापक स्तरमा उही कुरा मात्र जनाउँछ भन्ने सिद्धहस्त पत्रकारहरूको अनुभूतिलाई आत्मसात गरेको देखिन्छ ।

पत्रकारहरू भाषाले संसारको गतिशील यथार्थलाई बोक्न नसकेको अनुभूति गर्दै दिनहुँ हतार हतारमा समाचार र विचारको प्रवाह गरिरहेका हुन्छन् । रेडियोमा यस्तो हतार घण्टा घण्टाको दरमा पनि हुनसक्छ । रेडियो अन्तर्वार्तामा भने सहभागी स्रोत व्यक्तिको भाषिक मौलिकताले संसारको गतिशील यथार्थलाई पनि झल्काउने सम्भावना रहन्छ । सहभागी महिलाले पनि प्रचलित व्याकरणमा कसिएको वाक्य गठनभित्र उनिएर मात्र आफ्ना विचार र भावनालाई जस्ताको तस्तै प्रकट गर्न नसकेका हुनसक्छन् । उनीहरूको स्वच्छन्द र मौलिक बोली त्यस्तै अवस्थाको उपज पनि हुनसक्छ । बोलीमा पाइने मौलिकता महिलामा मात्र सीमित हुन्छ भन्ने छैन । पुरुषले पनि आफूलाई लागेका कुरा स्वच्छन्द र मौलिक वाक्यमा बोल्न सक्छन् । यस सम्बन्धमा विस्तृत र गहन रूपमा अलग्गै अध्ययन गर्न पनि सकिन्छ ।

# भाषिक शैलीको निष्कर्ष र सुझाव

महिला र पुरुषलाई छुट्याउने परम्परागत लिंगभेदी भाषिक स्वरूप हराउने क्रम जारी छ । छोरीमान्छे र छोरामान्छे दुवैलाई एउटै पुलिंगबाची क्रियापद प्रयोग गर्ने चलन काठमाडौँभित्र मात्र होइन, बाहिरका स्रोत व्यक्तिमा पनि देखिन्छ । समतामूलक समाज विकासका लागि सञ्चारमाध्यमले अप्राकृतिक र परम्परागत लिंगभेदी भाषिक अवशेषहरूलाई पन्छाउँदै अघि बढ्नुपर्ने हुन्छ ।

महिला बोलीमा 'ने' ध्वनिका ठाउँमा कतै 'नी', 'पनि' को सट्टा 'नि', निपातको पनि 'नि' को थप प्रयोगले समष्टिमा 'नि' ध्वनि बढी पाइएको छ । 'पछि' को ठाउँमा 'पसि' र 'सी' को पनि प्रयोग भएको छ । 'लाग्छ' क्रियापदमा विकल्प ध्वनिको प्रयोग बढी छ । यस खालको प्रयोग पुरुषले पनि गर्न सक्छन् ।

नेपाली भाषामा अङ्ग्रेजी शब्द प्रयोग गर्नमा महिला पनि अगाडि छन् । अङ्ग्रेजीले ध्वनि र शब्ददेखि वाक्य संरचनासम्म प्रभाव पारेको छ । अङ्ग्रेजी शब्दमा नेपाली विभक्ति, बहुवचन, बहुवचनसहित विभक्ति र परस्थानिक जोडेर बोलिएको छ । निपातीकरण र पूरक अनुकरण पनि भएको छ । सामुदायिक रेडियो सगरमाथाले नेपाली भाषाको शुद्ध प्रयोगका लागि जोड दिए जस्तै अन्तर्वार्ताका क्रममा भित्रिने अङ्ग्रेजी शब्द र शब्दसमूहको भारलाई नियन्त्रित र नियमित गर्नसके राम्रो हुन्छ ।

निपातहरू लैंगिक दृष्टिले साझा भाषिक अभिलक्षण हुन् । हेयदृष्टि र घृणाभाव जगाउने खालका नकारात्मक अभिव्यक्तिबाट कसैलाई गालीगलौज गर्ने सन्दर्भमा बाहेक रेडियो अन्तर्वार्तामा निपातको प्रवाहलाई प्रभावशाली अभिव्यक्तिको रूपमा लिइन्छ । नेपाली महिलाले निपातको यथेष्ट उपयोग गरेका छन् ।

नेपाली महिला छोटादेखि अत्यधिक लामा वाक्यसम्म प्रयोग गर्छन् । छोटा वाक्यमा पनि दुई तीनवटा शब्दको निरर्थक प्रयोग गर्छन् । नेपाली महिला सरल वाक्य कम अनि संयुक्त, मिश्र र मिलित वाक्यहरू बढी बोल्छन् । कतिपय वाक्यहरू जटिल प्रकृतिका पनि छन् । पूर्ण र अपूर्ण दुवै खालका वाक्यहरू बोलचालमा आउँछन् । एउटा वाक्य सक्नासाथ अर्को वाक्यको शब्द वा संयोजक

जोडेर बोल्ने प्रवृत्ति पनि बाक्लै छ । घुसुवा ध्वनि, शब्द र उपवाक्यहरूको जथाभावी र अत्यधिक प्रयोग गरी बोल्ने शैलीलाई भने सबैले सुधार्नुपर्ने देखिन्छ ।

स्टेसन व्यवस्थापनले भाषिक दक्षता र लैंगिक सचेतता भएका व्यावसायिक रेडियोकर्मीलाई प्रोत्साहन र कमजोर सञ्चारकर्मीलाई तालिमको मौका दिई उनीहरूले लिएका अन्तर्वार्ताको निरन्तर अनुगमन गर्नुपर्ने देखिन्छ । यसो गर्दा प्रसारणमा जानुअघि नै लिङ्गभेदी भाषिक अवशेषलाई पहिल्याएर हटाउन सजिलो हुन्छ ।

श्रोताले चिने, जाने र भोगेको भाषा ग्रहण गर्दा सांस्कृतिक अभिव्यक्ति झल्किन्छ । त्यस्तो बेला लिंगभेदी कुरा पर्न गएमा तत्कालै सटिक टिप्पणी गरिदिए गलत सन्देश जाँदैन । सामुदायिक रेडियो स्टेसनहरूले समतावादी भाषिक शैली र संहिता बनाएर सोहीअनुरूप अन्तर्वार्ताको सम्पादन गरी प्रसारण गर्नसक्छन् । यसो गर्दा अन्तर्वार्तामा उखान र टुक्काका रूपमा समेत जथाभावी घुस्नसक्ने लिंगभेदी भाषिक अवशेषहरूको पुनरावृत्ति हुन पाउँदैन ।

# खुलाउनै पर्ने आधारभूत तथ्य

रेडियो अन्तर्वार्तामा सहभागी सञ्चारकर्मी र स्रोत व्यक्तिहरूबीचको संवाद शैलीमा पाइने विशेषता वा भेदभावका अवशेषको समग्र रूप र सार पक्षको निरूपण गर्ने, भूमिका अनुरूप व्यावसायिक, समतामूलक र मौलिक भाषा प्रयोग भए नभएको यकीन गर्ने र प्रसारण निर्देशिका विपरीत सामाजिक लिंगभेदी बोलीका अवशेषको पहिचान गर्ने यस खण्डको मूल उद्देश्य हो ।

संवाद शैलीको अध्ययनका लागि पनि भाषिक शैलीको जस्तै सामुदायिक एफएमको इतिहासमा एक दशकभन्दा लामो अवधिदेखि निरन्तर प्रसारणमा आइरहेको रेडियो सगरमाथा एफएम १०२ थोप्लो चार मेगाहर्जबाट महिला महिला ( एकलैङ्गिक) र महिला र पुरुष (मिश्रितलैङ्गिक) सहभागी भएका अन्तर्वार्ताका कथ्य स्वरूपलाई अध्ययन सामग्री बनाइएको छ । यो पुस्तक तयार गर्ने बेला अर्थात् २०६५ साल साउनको दोस्रो हप्तासम्म नेपालमा २९० वटा एफएम रेडियोलाई इजाजत प्राप्त (हुमागाईं : २०६५ : २), (उप्रेती : २०६५ : ६९) भइसकेको थियो । रेडियो सगरमाथाबाट २०६४ साल असोजमा साप्ताहिक कार्यक्रममा प्रसारित अन्तर्वार्तालाई मात्र (हेर्नुहोस् बक्सा नं. ४) यस खण्डमा उदाहरणका रूपमा लिएर अध्ययन गरिएको छ ।

बक्सा नं. ४ :

## उदाहरणमा समाविष्ट असोजका कार्यक्रमहरूको विवरण

| कार्यक्रमको नाम | कार्यक्रमको प्रकार | अवधि (मिनेट) | कार्यक्रमको सङ्ख्या | कुल अवधि (मिनेट) | सहभागी सङ्ख्या | |
|---|---|---|---|---|---|---|
| | | | | | महिला | पुरुष |
| सह-अस्तित्व | साप्ताहिक | ४५ | ४ | १८० | ६ | ० |
| सञ्जीवनी | साप्ताहिक | ३० | ४ | १२० | ६ | २८ |
| सफलताको गोरेटो | साप्ताहिक | ४५ | ४ | १८० | ३ | ० |
| शैली | साप्ताहिक | ४५ | ५ | २२५ | ५ | ० |
| समावेशी अभियान | साप्ताहिक | ३० | ५ | १५० | १ | ४ |
| सहभागिता | साप्ताहिक | ३० | ४ | १२० | १ | १* |
| शिक्षा डबली | साप्ताहिक | ३० | ५ | १५० | १ | २८ |
| हाम्रो सरोकार | साप्ताहिक | ३० | ४ | १२० | १ | ३ |
| उहिले बाजेका पालामा** | साप्ताहिक | ३० | ४ | १२० | ० | ४ |
| युवा आवाज | साप्ताहिक | ६० | ५ | ३०० | ३ | ३८ |
| **जम्मा** | | | **४४** | **१,६६५** | **२७** | **१९** |

स्रोत: रेडियोमा महिला बोली : समाज भाषावैज्ञानिक अध्ययनका क्रममा गरिएको कार्यक्रम अनुगमन ।

* अध्ययनमा समेटिएका पुरुष सहभागीको संख्या । कुल १९ पुरुष सहभागी स्रोत व्यक्तिमध्ये महिलामिश्रित अन्तर्वार्तामा सहभागी आठ जनामात्र समेटिएका छन् । यस तालिकामा सञ्चारकर्मीहरूलाई जोडिएको छैन । उनीहरू महिला सात र पुरुष दुई जना मात्र छन् ।

** साप्ताहिक भए पनि महिला सहभागी नै नभएको (*उहिले बाजेका पालामा*) अन्तर्वार्ताको कुनै उदाहरण यसमा छैन ।

असोजमा १० वटा साप्ताहिक कार्यक्रमका ४४ वटा अन्तर्वार्ता प्रसारणमा आए । तिनमा पुरुष मात्र सहभागी भएका र टेलिफोनमै मात्र आधारित अन्तर्वार्ता परेका छैनन् । कुल ५४० घण्टाको कार्यक्रमलाई विविध कोणबाट सीमाङ्कन गर्दा जम्मा पौने २८ घण्टाको संवाद सामग्री अध्ययनको दायरामा परेको छ । भौगोलिक आधारमा मोरङदेखि डडेल्धुरासम्म, पहाडदेखि उपत्यका, भित्री मधेस र तराई क्षेत्रसम्मका व्यक्तिहरू अन्तर्वार्तामा सहभागी छन् । वर्गीय दृष्टिले उच्चमध्यमदेखि विविध कोणबाट सीमान्तकृत महिलासम्मको सहभागिता छ । अन्तर्वार्तामा बाहुन, क्षेत्री, नेवार, जनजाति, दलित, मधेसी र मिश्रित जातीय पहिचान भएका सहभागी पनि समेटिएका छन् ।

राजधानीबाट दैनिक १८ घण्टा प्रसारण हुँदै आइरहेको रेडियो सगरमाथामा अन्तर्वार्ताका लागि निम्त्याइने व्यक्तिहरूमा क्षेत्रीय विविधता पनि बढी नै पाइन्छ । साथै, अन्तर्वार्तामा सहभागी व्यक्तिहरूको मूलथलो, जाति, धर्म, उमेर, आर्थिक स्थिति, शिक्षा, पेसागत संलग्नता (हेर्नुहोस् बक्सा नं. ५), हुर्किएको ठाउँ, बोल्नसक्ने र बुझ्नसक्ने अन्य भाषा आदिबारे मौखिक जानकारी लिएर अत्यावश्यक प्रसङ्गमा उल्लेख गरिएको छ ।

बक्सा नं. ५ :

**स्रोत व्यक्तिहरूको पेसागत संलग्नता**

| क्र.सं. | सहभागीको पेसा वा पहिचान | प्रतिशत* |
|---|---|---|
| १. | संस्था प्रतिनिधि | ५१ |
| २. | विशेषज्ञ/प्राध्यापक | ३३ |
| ३. | सामाजिक अभियन्ता | २६ |
| ४. | कामकाजी गृहिणी | १९ |
| ५. | विद्यार्थी/युवा | १९ |
| ६. | राजनीतिक नेतृत्व | १५ |
| ७. | स्वतन्त्र व्यवसायी | १५ |
| ८. | घरेलु कामदार/पीडित/सीमान्तकृत | ०४ |

स्रोत : रेडियोमा महिला बोली : समाज भाषावैज्ञानिक अध्ययन ।

* यहाँ एउटै व्यक्ति एकभन्दा बढी पेसा वा पहिचानमा रहेका कारण कुल प्रतिशत एक सयभन्दा अधिक हुन पुगेको हो ।

समाजभाषिक कोणबाट अन्तरविषयक अनुशासनमा रही वर्णनात्मक अध्ययन पद्धति अपनाइएको यस खण्डमा रेडियो अन्तर्वार्तामा सहभागी नेपाली महिलाको संवाद शैलीको वस्तुगत अध्ययन छ । यसमा मूलत: पाउल ग्राइसका अन्तर्क्रियाका चार सूत्रहरू गुणस्तर, मात्रा, सम्बन्ध र तरिकाका आधारमा समाजभाषिक विश्लेषण गर्दा लैङ्गिक सूत्रहरूको पनि आंशिक उपयोग गरिएको छ । रेडियो पत्रकारिताको सिद्धान्त, पद्धति, शैली र संहिताले भने अन्तर्वार्तामा प्रयुक्त संवाद शैलीको व्याख्या र विश्लेषणलाई सीमांकन गरेको छ ।

## गुणस्तरको कसीमा महिलाको बोली

असत्य र प्रमाणहीन कुराले संवादलाई गुणस्तरहीन तुल्याउँछ । सत्य बोल्नुपर्छ र ठहरिने कुरा गर्नुपर्छ भन्ने मान्यताले गुणस्तरीय संवादको अपेक्षा गर्दछ । सत्य सूचना पत्रकारिताको आधारभूत सर्त पनि हो । पत्रकारिताका हरेक विधामा सत्य-तथ्यलाई आधारभूत सर्तका रूपमा ग्रहण गरिन्छ ।

अमेरिकी समाचारपत्रका सम्पादकहरूको समाजले सन् १९२३ मा पत्रकारिताका सात सिद्धान्त तय गर्दा चौथो नम्बरमा सत्यता तथा यथार्थता (वेष्टली १९८० : ३८४)लाई राखेका छन् भने सन् १९८३ मा संयुक्त राष्ट्रसंघ शैक्षिक, वैज्ञानिक र सांस्कृतिक आयोग (युनेस्को) ले जारी गरेको पत्रकारिताको पेसागत नैतिकतासम्बन्धी सिद्धान्तमा 'जनताको सत्य सूचना पाउने अधिकार' लाई पहिलो नम्बरमा राखेर सत्य सूचनाको सम्प्रेषणलाई सर्वाधिक महत्व दिइएको छ (दाहाल २०५८ : २६) ।

रेडियो अन्तर्वार्ता पत्रकारिताको श्रव्य माध्यमको एउटा विधा भएकाले सहभागीबाट सत्य कुराको मात्र अपेक्षा गरिन्छ । जोसुकैबाट पनि सामान्य अवस्थामा त सत्य अर्थात् गुणस्तरीय कथनको अपेक्षा गरिन्छ भने पत्रकारिताको सशक्त र प्रभावकारी माध्यम रेडियोको जीवन्त विधा अन्तर्वार्तामा त्यो अनिवार्य नहुने कुरै भएन । रेडियो सगरमाथाको प्रसारण निर्देशिका २०६३ ले दसौँ बुँदामा उच्च व्यावसायिक मर्यादा, अभ्यास र गुणस्तर कायम राख्दै निष्पक्षता, सन्तुलन र विश्वसनीयताका सिद्धान्तको पालनामा जोड दिएको छ ।

सञ्चारकर्मी होस् वा स्रोत व्यक्ति- दुवै नै श्रोताप्रति इमान्दार हुनुपर्छ । इमान्दारी सत्यतथ्यका माध्यमबाट झल्किन्छ । कुराकानीका क्रममा असावधानी वा नियतवश कसैले असत्य बोलेको छ भने थाहा पाउनासाथ त्यसलाई सच्याउनुपर्ने हुन्छ । रेडियो सगरमाथाको प्रसारण निर्देशिका २०६३ मा गल्ती नहोस् भनेर उच्च सतर्कता अपनाउने र गल्ती भइहालेमा तत्काल गल्ती सच्याउने कुरा पनि उल्लेख छ । यस्तै, नेपाल पत्रकार महासंघसितको सहकार्यमा प्रेस काउन्सिल नेपालले जारी गरेको पत्रकार आचारसंहिता- २०६० (संशोधित तथा परिमार्जित-२०६४) मा पनि गल्ती सच्याउने तत्परतालाई समेटिएको छ । आचारसंहितामा पत्रकार र सञ्चारमाध्यमले निर्वाह गर्नुपर्ने कर्तव्यका रूपमा उल्लेख गरिएका बुँदाहरूमध्ये नवौं बुँदामा "प्रकाशन तथा प्रसारणका क्रममा भएका त्रुटि एवं गल्तीको जानकारी हुनासाथ यथाशीघ्र त्यस्तो गल्ती एवं त्रुटि सच्याउने तथा सप्रमाण खण्डन वा प्रतिक्रिया आएमा प्रस्ट भाषामा उचित स्थान दिई प्रकाशन-प्रसारण गर्नु पत्रकार तथा सञ्चार माध्यमको कर्तव्य हुनेछ (प्रेस काउन्सिल नेपाल २०६४ : ५) भन्ने लेखिएको छ ।

सत्यता र गल्ती सच्याउने तत्परता पत्रकारिताको आदर्शमात्र होइन, आचारसंहिताको परिपालना पनि हो । सञ्चारमाध्यमबाट जनस्तरमा असत्य सूचना र गलत सन्देश नजाउन् भन्ने कुरामा सदा सतर्क हुनुपर्छ । यति हुँदा-हुँदै पनि रेडियो सगरमाथाको अन्तर्वार्तामा सहभागीमध्ये कतिपयको संवादको गुणस्तरमा ढुक्क भएर विश्वास गर्न र पूर्णतः भर पर्न सकिने अवस्था छैन । समाचारकर्मीले नै अन्य फर्म्याटका कार्यक्रम पनि चलाउनुपर्ने (लुइँटेल २०६२ : २५५) स्थिति छ भने रेडियो सगरमाथाबाट प्रसारण हुने *आजका कुरा*का सञ्चारकर्मी किरण पोखरेलले *एफएम रेडियोमा हुर्कंदो अन्तर्क्रिया* शीर्षक लेखमा भने जस्तो "कार्यक्रम सिद्धिनेबित्तिकै श्रोताहरूले ... फोन गरेर प्रतिक्रिया दिने गर्छन्" (भट्ट २०६२ : ३९१) भन्ने कुरा पनि अन्तर्वार्ताको हकमा लागु भएको देखिँदैन । यस्तो अवस्थामा श्रोताले प्रतिक्रिया जनाइदिएन भने गल्ती सच्याउने तत्परता भएर पनि प्रयोगमा नआउनु स्वाभाविक हो । यो असहज स्वाभाविकताले गुणस्तरमा प्रश्न उठाउँछ ।

● *सन्दिग्ध तथ्य सुन्नेले सच्याउने*

*सञ्चारकर्मी* जस्तो समाहित शिक्षा अवस्थाको कुरा गर्दाखेरि कस्तो छ ?

*स्रोत व्यक्ति १* असमाहित शिक्षाको कुरा गर्दाखेरि सबभन्दा पहिले त अ हाम्रो सरकारको जो नीति छ, त्यो चाइँ असाध्य राम्रो छ । अ म्ह तर, हँ दुर्भाग्यवश, नीति त राम्रो छ तर तेस्को इम्प्लिमेन्टेशन कार्यान्वयन पक्ष चाइने कमजोर छ । ह बैनीले भख्खर गरेको उद्घोषणमा म अलिकति सच्याउन चाहन्छु । हअ हाम्रो देशमा प्रत्येक दसजनामा एकजना बालबालिका कुनै न कुनै किसिमका अपांगताले ग्रसित छन् । र म्ह संख्या हेर्ने हो भने बालबालिकाहरूको पपुलेशनको दस प्रतिशत हअ पड्न जान्छ तेस्मा, र तेस्मा मोटामोटी तेर लाख बालबालिकाहरू हाम्रो देशमा छन् । अ जो कुनै न कुनै अपांगता लिएर अँ ऐले बाँचिरहेका छन् । ए र, तेस्मा खालि शारीरिक अपांगतामात्रै होइन, हगि ? त्यो साडे बार लाख तपाईंले भन्नुभा छ नि, अ त्यो शारीरिकमात्रै हैन, तेस्मा आँखा नदेख्ने, ह त्यो समस्या भएकाहरू, अँ कान सुन्न नसक्ने ह समस्या भएकाहरू हैन ? अँ जस्लाई हामी बहिरा भन्ने चलन छ । त्यो मलाई शब्द मन पर्दैन । अ अनिखेर तेस्तै गरिकन ह यो बौद्धिक अपांगता भएका भाइबैनीहरू र शारीरिक अपांगता भएका भाइबैनीहरू मोटामोटी यो चार किसिमका । तर अ सरकारबाट कस्तो भाको छ भने अ विभिन्न किसिमका ह डिफिनिशन हगि ? अ परिभाषा पनि निकालिएको छ, जुन एकदम छर्लंग छ । र, मैले भनिहालेँ कार्यान्वयन पक्ष चाइने कमजोर छ । जस्ले गर्दाखेरि समाहित शिक्षाको राम्रो नीति हुँदाहुँदै पनि तेस्मा अपांगता भएका भाइबैनीहरू अइलेसम्म चइने अटाएका छैनन् ।

**(*शिक्षा डबली,* २०६४ असोज २ गते)**

***विश्लेषण***

प्रस्तुत उदाहरणमा सहभागी सञ्चारकर्मी र स्रोत व्यक्ति दुवै महिला हुन् । अपांगता भएका केटाकेटीलाई पढाइने समाहित शिक्षाका बारेमा सञ्चारकर्मी शान्ता बस्नेतले

भूमिका बाँधिसकेपछि स्रोत व्यक्ति नूपुर भट्टाचार्यलाई विषयगत प्रश्न गरेको देखिन्छ । उत्तरका क्रममा सञ्चारकर्मीको कथनलाई जनाउ दिएरै सच्याइएको छ । यसबाट गुणस्तरीय जानकारीका दृष्टिले सञ्चारकर्मीको गृहकार्य कमजोर देखिन्छ भने स्रोत व्यक्तिले गलत सूचना सच्याइदिएको छ । स्रोत व्यक्तिले भौतिक तथ्यलाई मात्र होइन, विषय-वस्तुलाई पनि मानवीय धरातलमा उभ्याएर सूक्ष्म तरिकाले बुझेको पाइन्छ । अन्तर्क्रियात्मक, स्पष्ट र क्रमबद्ध अभिव्यक्तिले श्रोताको ध्यान तान्ने भएकाले मात्रा पनि ठीकै देखिन्छ । यसमा व्याकरणका दृष्टिले भाषिक कमी-कमजोरी छन् तर पनि सत्य-तथ्यका कोणबाट स्रोत व्यक्तिको संवादलाई गुणस्तरीय मान्नुपर्दछ । यसबाट महिला एकातिर विशेषज्ञका रूपमा गुणस्तरीय सेवामात्र होइन, परामर्श संवाद पनि गर्न सक्छन् भन्ने पुष्टि हुन्छ भने अर्कातिर यो विशेषता लैंगिक नभएर वैयक्तिक भएको कुरा सञ्चारकर्मीको भाषिक र विषय-बोधको स्तरले देखाउँछ ।

यस खालको सचेतता कतिपय सञ्चारकर्मीले कायम राख्न नसकेका उदाहरण पनि छन् । कार्यक्रम *शैली, सहअस्तित्व, सञ्जीवनी* आदिका कतिपय अन्तर्वार्तामा पनि कतै न कतै यस्तो अनुभव हुन्छ ।

### ● *तथ्यपरक भईकन पनि लैंगिक अन्धता*

| | |
|---|---|
| *सञ्चारकर्मी* | एक तिहाइ उठाउने त छँदैछ हैन ? |
| *स्रोत व्यक्ति* | अँ, |
| *सञ्चारकमी* | मुख्य कुरा त के भने संसदमा |
| *स्रोत व्यक्ति* | हजुर, |
| *सञ्चारकर्मी* | आउने चाइँ एक तिहाइ आइपुग्नुन्च कि आइपुग्नुन्न ? |
| *स्रोत व्यक्ति* | समस्यै यहींनेर छ । अहिले अब बन्दसूचीलाई हेर्दाखेरि हँअँ बन्दसूचीको जुन चाइने विधेयकमै प्रस्ट किटान गरेर ह~ राखेको छ~ ~ । जस्तै अब बन्दसूचीमा मदेसीबाट, दलितबाट, उत्पीडित जाति, आदिवासी जनजातिबाट भनेर पिछडिएको |

क्षेत्र अन्य भनेर चाइने अ˜ ˜ जुन पर्सेन्ट तोकिएको छ, त्यस्मा मइला-पुरुष, मइला-पुरुष दिनैपर्छ । त्यसो भएको हुनाले पचास पर्तिसत चइने पुरुष उम्मेदवार हुन्छ भने पचास पर्तिसत चइने महिला उम्मेदवार हुन्छ । यसमा समस्या छैन । तर अब जहाँसम्म चइने यो भूगोल अँ भूगोलमा चाइनी अब हँ˜ त्यस्तो खालको किटान गऱ्या छैन । दुवैतिर तेत्तीस पर्सेन्ट भनेको हुनाले चइनी अ˜अ˜ भूगोलमा चइनी थोरै भए पनि पुग्छ भन्ने खालको पनि छ । अ˜ यसो गर्दाखेरि चइनी हामीले बन्दसूचीको पचास पर्सेन्ट मैला उम्मेदवार भए पनि जित्ने त होइन त्यो ट ; ट्यो नाम मात्रै पचास पर्सेन्ट मैला उम्मेदवार हो । जसरी पुरुषहरूको पचास पर्सेन्ट नाम हुन्छ । तर अब अँ˜ ˜ जितिने क्रममा ट अब आडि मात्रै भयो भने पनि पचिस पर्सेन्ट हुन्छ ।

*सञ्चारकर्मी* तर बन्दसूचीमा बन्दसूची

*स्रोत व्यक्ति* तेस्ले गर्दाखेरि त आठ पर्सेन्ट मात्रै

*सञ्चारकर्मी* बन्दसूचीमा जाँदाखेरि त नि एक

*स्रोत व्यक्ति* हजुर,

*सञ्चारकर्मी* एक दुई तीनबाट गएर जाँदाखेरि तीन नम्मरमा मइला भो'नि छ नम्मरमा जाँदाखेरि त फेरि अर्को मइला हुन्चे नि त । त्योभन्दा पचास पचास भयो भने त पचासै जनाको पनि चालीसभन्दा घटि त नहुन सक्च नि त हइन र ?

*स्रोत व्यक्ति* चालीससम्म त गारै हुन्छ पुक्न˜ ˜ । अब हिसाब किताब गर्दाखेरि ल˜ पच्चीस पर्सेन्ट किन मैला-पुरुष, मैला-पुरुष त हाल्नै पऱ्यो । एकजना मइला एकजना पुरुष आउने भो । तेसो गर्दाखेरि पच्चीस पर्सेन्ट मइला भनुँ न, पच्चीस पर्सेन्ट मइला चैने बन्दसूचीबाट । अनि तेसो गर्दाखेरि आठ पर्सेन्ट बाँकी हुन्छ । अब आठ पर्सेन्ट त भूगोलबाट दिनैपर्छ, अँ˜ ˜ तेसो भएपछि मात्रै तेत्तीस पर्सेन्ट अँ˜ को स्थितिमा आउँछ ।

***(सह-अस्तित्व, २०६४ असोज ५ गते)***

## *विश्लेषण*

यो स्रोत व्यक्ति महिला र सञ्चारकर्मी पुरुषबीचको संवाद हो। अनावश्यक शब्द र ध्वनिले अलमल्याउन खोजे पनि तथ्यका दृष्टिले यो संवाद गुणस्तरीय छ। संवादको शैली सुरुमा अल्पतम प्रत्युत्तरको छ र बीचमा आइसकेपछि पालो लिने-दिने क्रममा तँछाड-मछाड देखिन्छ। स्रोत व्यक्ति अष्टलक्ष्मी शाक्य र सञ्चारकर्मी किरण पोखरेल दुवैमा सत्यप्रतिको सचेतता र विश्लेषणको क्षमता जोडका तोड देखिन्छ। अस्पष्टता हटाउने र यथार्थ प्रस्टचाउने दिशामा यो संवाद लक्षित छ। त्यति हुँदा-हुँदै पनि सार्वजनिक रूपमा महिलालाई अपमान गर्ने क्रियापद 'हुन्चे' प्रयोग गरेर सञ्चारकर्मीले अर्को कोणबाट लैंगिक चेतनाको गुणस्तरचाहिँ खस्काएको पाइन्छ। त्यसले दिने गलत सन्देशमा सावधानी राख्न सकिएन भने राजनीतिक रूपमा युग परिवर्तन नै भएर महिलाले राज्य पुनर्संरचनामा समानुपातिक स्थान पाए पनि दोस्रो दर्जाकै रूपमा हेर्ने सामन्ती प्रवृत्तिले निरन्तरता पाउने निश्चित छ। अन्तर्वार्ताको विषय र मुलुकको अग्रगामी परिवर्तन प्रक्रियाले अवश्य पनि गलत प्रवृत्तिको निरन्तरतामा क्रमभंगता खोजेको छ। सत्यभित्रको यस अनुद्घाटित सत्यलाई भने प्रस्तुत उदाहरणले आत्मसात् गर्न सकेको पाइएन।

*सह-अस्तित्वबाट प्रसारित* प्रस्तुत अंशमात्र होइन, *सञ्जीवनी, शैली, सहभागिता, युवा आवाज* आदि कार्यक्रमबाट प्रसारित अन्तर्वार्ताका केही अ~ र अंशसमेत यस खालका छन्। *शैली* को एउटा अंगमा त सञ्चारकर्मी रूपा न्यौपानेले "महिला भएपछि लज्जास्पद हुनुपर्छ, '... चोथाले हुन्छे....' भन्ने कुरा गरेर सुरुमै भाषा र भाव दुवै पक्षको गुणस्तरमा कमजोरी प्रदर्शन गरेको देखिन्छ। त्यसमा स्रोत व्यक्ति कान्ता रिजालको लैंगिक सचेतताले भने सत्य र प्रमाणसिद्ध कुरा उठाएर संवादको गुणस्तर जोगाएको पाइन्छ। उनले गरुढ पुराणमा भएका तर समाजमा लुकाइएका महिलासम्बन्धी अत्यन्त सकारात्मक कुरालाई यसरी व्यक्त गरेकी छन्,

*...त्यै गरुर पुरानमा के लेखिएको रैस भने, मान्छे मर्च हैन ? मान्छे मरिसकेपछि चैं के यो यमराजको दूतले लिन आउँछ। लेर गैसकेपछि चैने अँ के रे चित्रगुप्ता, चित्रगुप्ताले खाता पल्टाएर हेर्च हैन ? खाता पल्टाएर हेरिसकेपछि अब उल्ले चैं अँ निर्णयका लागि श्रवणकोमा पठाउँछ भन्या रैछ हैन ? अनि ... श्रवणले हेरिसकेपछि अन्तिम निर्णय चैं नारीकोमा पठाउँच किनभने नारीको चैं सूक्ष्म दृष्टि हुने हुनाले उस्बाट गल्ती हुँदैन भनेर त्यो निर्णय चैं त्यसरी हुन्च र अनि बल्ल, को नर्क जाने को स्वर्ग जाने भन्ने त्यहाँ त्यसरी लेखिएको रैस भने त्यो त*

*नारीबाट गल्ती हुँदैन र नारी चैं डिसिजन मेकिङमा भनौं न एउडा यौडा निर्णायक भूमिका खेल्न सक्षम हुन्छिन् भन्ने त धर्मशास्त्रले पनि प्रमाणित गरेको छ, तर यस्ता कुराहरू चैं समाजमा आएनन् के ।*

**(*शैली*, २०६४ असोज २३ गते)**

- ***अनुवादले जन्माएको अलमलमा बेवास्ता***

नेपाली महिलाको प्रजनन स्वास्थ्यको अवस्थाबारे २०६४ साल असोज २६ गते प्रसारित *सह-अस्तित्व* कार्यक्रमअन्तर्गतकै एउटा अन्तर्वार्तामा सञ्चारकर्मी र स्रोत व्यक्ति– दुवैमा महिलामात्र सहभागी छन् । संवादका क्रममा डाक्टर लता वज्राचार्यले “अँ अवगत होला पइले ए ५३८ एकलाख वन थाउजेन्ड पर बर्थ पर लाइव बर्थ हुन्थ्यो भने ऐले २८१ भएको छ ।” भनेर गलत कुरा गरिरहेको स्पष्ट सुनिन्छ । ‘एक लाख’ लाई अङ्ग्रेजीमा ‘वन थाउजेन्ड’ भनेर गलत अनुवाद गरिएकाले पदीय आधारमा जिम्मेवार र विषयका आधारमा विशेषज्ञले नै भनेको भए पनि मातृमृत्यु दरका तथ्यहरू स्वत: सन्दिग्ध भएका छन् । सञ्चारकर्मी नीरा रानाभाटले पनि श्रवण सचेतता र गल्ती सच्याउने तत्परता देखाएको पाइँदैन । विषयगत प्रश्न सोधिएको उक्त अन्तर्वार्तामा अनावश्यक, अशुद्ध र आगन्तुक शब्द, शब्द समूह र असंगत वाक्यको सहारा लिइएको छ । त्यसरी पनि प्रश्नअनुसारकै उत्तर दिन भने खोजिएको छ । दुवै महिला सशक्त हैसियतमा सञ्चारमाध्यममा संवाद गरिरहेका भए पनि अपेक्षित र आधारभूत गुणस्तर कायम राख्नबाट चुकेका छन् । मात्रा, सम्बन्ध र तरिकाका दृष्टिले भने सो दिन प्रसारित अन्तर्वार्ताको संवाद शैलीलाई सामान्य नै मान्न सकिन्छ ।

- ***अनुपयुक्त शब्द तर इमानदार अभिव्यक्ति***

अर्कोतिर २०६४ असोज १० गते प्रसारित *सञ्जीवनी* कार्यक्रममा रहेको एउटा अन्तर्वार्ताको कुरा गर्दा त्यसमा अनुपयुक्त शब्दको प्रयोगलाई संवादका क्रममै सञ्चारकर्मी दुर्गा कार्कीले सच्याउन खोजेकी छन् । पुरुष स्रोत व्यक्ति र महिला सञ्चारकर्मीको सहभागिता रहेको *सञ्जीवनी* कार्यक्रमको अन्तर्वार्ताका कतिपय संवाद अंशमा लामा र प्रभावहीन वाक्य छन् । अङ्ग्रेजी र भाषिकागत प्रभावले वाक्यमा परम्परागत लैंगिक संगति पनि हराएको छ । पर्यटन क्षेत्रमा पुरुषभन्दा

महिलालाई बढी 'विश्वास' गरिन्छ भन्ने सत्यलाई स्रोत व्यक्ति मनोज तामाङले 'चलाख' शब्द प्रयोग गरेर कता-कता अर्कै तरिकाले अभिव्यक्त गर्न खोजेको पाइन्छ । सो अभिव्यक्तिमा शब्दले साथ नदिए पनि उदाहरणका माध्यमबाट सत्य प्रदर्शित भएको छ । इमानदार अभिव्यक्तिका हिसाबले कतिपय महिलामात्र होइनन्, जनजातिका पुरुष पनि गुणस्तरीय संवादकर्ताका रूपमा देखिएका छन् । यसमा सञ्चारकर्मी महिलाको श्रवण सचेतताले सकारात्मक भूमिका खेलेको छ । 'महिला चलाख हुँदैनन् भन्ने होइन, विश्वासिलो बढी हुन्छन्' भनेर सामान्य सचेत गराइएपछि स्रोत व्यक्तिले सजिलो गरी 'एकदम विश्वासिलो बढी हुन्छ' भन्दै पर्यटन क्षेत्रमा महिलालाई धेरै विश्वास गरिने कुरा थप उदाहरणसहित स्पष्ट गरेको पाइन्छ ।

### ● *भाव छ सवल, भाषा भने कमसल*

महिलाले महिलाको अन्तर्वार्ता लिने *सफलताको गोरेटो* कार्यक्रममा संवादका कतिपय अंश छोटा प्रश्न र प्रश्नअनुरूपकै उत्तर दिने शैलीका पनि छन् । २०६४ असोज ११ गते प्रसारित संवादको एउटा अंशमा उत्तर दिने बेला स्रोत व्यक्तिको *इमोसन* पनि जोडसँग प्रकट भएको छ । लैंगिक भेदभावको अनुभूतिबाट अङ्ग्रेजी हुन् कि नेपाली- सबै खालका शब्दलाई कता-कता मिसाउन खोजेको देखिन्छ । "...जाँ पनि महिला कम छ । एक्डमै कम । एक्डमै । अँ त्यै हो घडले न्यासिलिटी नदिनी ।" चित्रकार सुषमा राजभण्डारीसँग सञ्चारकर्मी उर्वशी वस्न्यातले ब्याडमिन्टनमा भएको व्यक्तिगत रुचि र त्यसमा महिला सहभागिताको कुरा उठाउँदा यसरी लैंगिक भेदभावको जरोसम्म पुगेर उत्तर दिइएको पाइन्छ ।

स्रोत व्यक्तिले प्रयोग गरेको भाषाको वर्णप्रयोगदेखि उच्चारणसम्मको कमजोरीले भने सो कार्यक्रममा प्रयुक्त संवादको गुणस्तरलाई खस्काइदिएको छ । 'परापूर्वकालदेखि' हुनुपर्नेमा 'पूरा पर्वकालदेखि' समेत भनिएको छ । काठमाडौंली भाषिकाको प्रभावबाट सिर्जित शब्दहरू पनि प्रयोग भएका छन् । 'एक्डमै', 'घड्ले', 'टीजमा' जस्ता कतिपय शब्द मात्रै हेरेर अर्थ लगाउने हो भने सो दिन प्रसारित *सफलताको गोरेटो*को संवाद निरर्थक पनि लाग्न सक्छ । कतिपय संवादका अंशको प्रस्तुति भने एकदम इमानदार छ । कतिपय प्रसंगमा संवादले प्रकट गर्न खोजेको लैंगिक भेदभावको अनुभूत सत्यको घनीभूत अभिव्यक्तिले गुणस्तरलाई धेरै हदसम्म जोगाएको मान्न सकिन्छ । अहिलेसम्म यस खालका सत्यलाई सार्वजनिक गर्ने गुणस्तरीय क्षमता महिलामा मात्रै देखिएको छ ।

# मात्राको तराजुमा महिलाको बोली

'चाहिने कुरा बोल्नू र नचाहिने कुरा नबोल्नू' भन्ने सार्वभौम मान्यताको सञ्चार क्षेत्रमा अत्यन्त ठूलो महत्त्व छ । यसले कुराकानीलाई कत्तिको सूचनात्मक बनाउने भन्ने कुराको संकेत गर्दछ । आवश्यक पर्ने जति सूचनात्मक बनाउने र आवश्यकभन्दा बढी सूचनात्मक नबनाउने (यादव र रेग्मी २०५८ : ३१४) सूत्रको प्रयोग गरेर बोलियो भने सुन्नेलाई पनि सजिलो हुन्छ । अनावश्यक कुराले संवादलाई उद्देश्यविहीन बनाउँछ । अन्तर्वार्ताको तथ्य, अनुभूति, अभीष्ट र विचारलाई पनि खजमज्याउँछ । अन्तर्वार्तामा यी चार पक्षका बीचमा उपयुक्त संयोजन गर्न पनि मात्राको महत्त्वपूर्ण भूमिका हुन्छ ।

रेडियो अन्तर्वार्ताका क्रममा सञ्चारकर्मी र स्रोत व्यक्ति– दुवैले श्रोतालाई ध्यानमा राखेर आपसमा कुराकानी गर्नुपर्छ । रेडियो समयप्रति एकदमै संवेदनशील माध्यम हो । अन्तर्वार्तामा पनि समयको अनुशासन (पौडचाल २०६० : ५०) लागू हुन्छ । संवादको मात्रालाई समयले पनि निर्धारण गर्दछ । कार्यक्रमको लक्ष्य र प्रश्नले अपेक्षा गरेभन्दा कम वा बढी, अस्पष्ट र घुमाउरो जानकारीले रेडियो संवादलाई सञ्चारकर्मी र स्रोत व्यक्तिबीचको निरर्थक हल्लामा परिणत गर्न सक्छ । नेपाली महिला मात्राका दृष्टिले कत्तिको सचेत भएर अन्तर्वार्तामा सहभागी हुन्छन् त ? यसको जवाफ खोज्ने क्रममा भेटिएका तथ्य पनि मिश्रित खालका छन् ।

**● *गलत रैछ बढी बोल्ने लैंगिक पूर्वाग्रह***

*सञ्चारकर्मी* कस्तो हुँदैछ आन्दोलन ऐले ?

*स्रोत व्यक्ति १* के कस्तो अब, पैला त ठिकै अब कस्तो ठिक भनौं ? घाइते भए । रोगले बिमारले ऐले अब कस्तो भयो हँ, अब ऐले हँ, तीन दिन भएको छ वार्तामा बोलाएको । या साँच्ची गरी हो, या झुटा गरी हो । यो यत्तिको चिप्लैर पठाउनी हो, या हाम्रो कुरा नि सिद्धिनी हो । अब हाम्रो वार्ता, हाम्रो माग पूरा नभइकन हामी घर फर्कनी जस्तो छैन ।

*सञ्चारकर्मी*　　माग पूरा गरारै जानी ?

*स्रोत व्यक्ति १*　　अँ अँ माग त पूरा गरारै जानी हामी ।

***(सह-अस्तित्व*, २०६४ असोज १९ गते)**

### *विश्लेषण*

मध्य र सुदूरपश्चिम क्षेत्रमा रहेका सीमान्तकृत समुदायका महिला रमा वादी, बेलु वादी र कलावती भाटसँग काठमाडौंमा भएको सामूहिक छलफलबाट उदाहरणार्थ लिइएको प्रस्तुत संवादमा खुला प्रश्न सोधिएको छ । उत्तर पनि त्यस्तै छ । सञ्चारकर्मी नीरा रानाभाटले स्रोत व्यक्ति वादी नेतृसँग गरेको कुराकानीको प्रस्तुत अंश मात्राका हिसाबले ठीकै देखिन्छ । पहिलो उत्तरमा के भन्ने र के नभन्ने भन्ने अलमल छ । भन्नुपर्ने कुरा धेरै छन् भन्ने पनि बुझिन्छ । आधा मिनेट लगाएर बोलिएका कुराहरू अन्य वक्ताका तुलनामा कमै छन् । स्रोत व्यक्तिको बोलीको प्रवाह र मध्य-पश्चिमेली भाषिकाको भेदसित सञ्चारकर्मी अनुकूलित हुन खोजेको देखिन्छ । यस किसिमले मात्रा ठीकै भएका संवादका अंश निकै कम भेटिन्छन् ।

यस संवादमा सन्देश पक्ष सबल छ । स्रोत व्यक्तिले अधिकारको खोजीका लागि गरिएको आन्दोलनको अवस्था बताउने क्रममा जति पनि वर्णन, विवरण दिन सक्ने मौका पाउँदा-पाउँदै पनि आन्दोलनको अन्तिम लक्ष्य व्यक्त गरेर कुरा रोकेको पाइन्छ । प्रस्तुत संवादको गुणस्तरमा प्रश्न उठाउने ठाउँ देखिँदैन भने सम्बन्ध र तरिका सामान्य नै छन् । नेपालको मध्य-पश्चिमेली बोलचालका शब्द र शैली मिसिएको उक्त संवादले काठमाडौंली श्रोतालाई नयाँपन दिन्छ । यसले महिला मौका पाउनासाथ फतर-फतर गर्दै बढी बोल्छन् भन्ने परम्परागत पूर्वाग्रहलाई पुष्टि गर्दैन । यो व्यक्तिको लिङ्गमा होइन, आनीबानीमा भरपर्ने कुरा हो । यसलाई लैंगिक विशेषताका रूपमा लिएर सामान्यीकरण गर्न चाहिँ हुँदैन ।

*सह-अस्तित्व* मा निम्त्याइएका बादीहरूमात्र होइन, *शैली* मा निम्त्याइएकी सीता थापाका जवाफ पनि यस खालका छन् । उनीहरूको जवाफ सम्बन्ध र तरिकाका

दृष्टिले पनि उपयुक्त र स्वाभाविक छ । *हाम्रो सरोकार, सञ्जीवनी, समावेशी अभियान* आदिका केही अन्तर्वार्ताका कतिपय अंशमा पनि यस्तो विशेषता रहेको पाइएको छ ।

**● *कम बोल्ने लैंगिक पूर्वाग्रह पनि गलत***

*सञ्चारकर्मी* तपाईं पन्ध्र दिनको तालिम लेर~ उद्योग सञ्चालन गर्न पुग्नुभयो । हैन ? कसरी यो सम्भव भयो ?

*स्रोत व्यक्ति* खासमा चैं मेरो कस्तो भयो भने अ~ अब के भन्ने शोखले भन्ने कि के भन्ने ? शोखकै हिसाबबाट भनुँ पैला त । मलाई चैं कस्तो भयो भने पैला अब बच्चाहरू सानो हुँदाखेरि तेति बाहिर अ~ काममा जान पनि नमिल्ने खालको सिचुएसन थियो र मेरो घरमा । बच्चा~लाई छोडेर जान नमिल्ने भयो । तेल्ले गर्दाखेरि कस्तो भयो भने यसै शोखैशोखमा मलाई पकाउन असाध्यै इन्ट्रेस लाग्ने हो त्यसैकारणले गर्दाखेरि अब पकाएर बस्ने गर्ने अनि त्यै उस्मा चाइँ म पनि अब त्यै थरीथरी भेराइटीहरू बनाउने । तेस्तो गर्ने । मान्छेहरू आउँदा ख्वाउने त्यो यौडा यस्तो खालको उ थियो । पछि~~ अब कस्तो भयो भने गर्दै जाँदाखेरि ल अब यसो ट्रेनिङ पनि लिराखौँ न त भनेर ~~ त्यो किसिमबाट ट्रेनिङ लिएको र पकाउँ न त त्यो गर्दा राम्रो हुन्छ भन्ने हिसाबबड सोचैं अनि तेसपछि मैले जमलेश्वर इन्स्टिच्युटमा गएँ र खासमा चाइँ बेकरीको मैले अरू ट्रेनिङहरू पनि लिएँ लिन त कन्टिनेन्टल, अरू इन्डियन अँ~ ट्रेनिङ पनि लिएँ तर खासमा बेकरीको चाइँ पन्ध्र दिनको ट्रेनिङ हो यो, त्यो लिएर अ~ अनि तेसपछि चाइँ त्यसपछि सुरु गरेँ भनुँ न तर प्रोफेसनल रूपमा हैन कि मतलब अ~~ अम् अब बनाउने मान्छेहरूलाई ख्वाउने गर्दा गर्दै गर्दा गर्दै अनि सप्पैले राम्रो छ तर मलाई आफूलाई पनि अब मतलब केही गरौँ भन्ने हिसाबबड अ~ अम् भइराख्याथ्यो । जागिरै खाने भन्ने त्यो सोचाइ पनि अलिकति घरको परिस्थितिले नमिल्ने भाकोले गर्दाखेरि तेसपछि मैले सुरु गऱ्या हो ।

***(सफलताको गोरेटो,* २०६४ असोज १८ गते)**

### *विश्लेषण*

महिला-महिलाका बीचकै अन्तर्वार्ता *सफलताको गोरेटो*बाट झिकिएको प्रस्तुत संवादमा सञ्चारकर्मी उर्वशी बस्न्यातले ६ सेकेन्डमा सोधेको प्रश्नका लागि स्रोत व्यक्ति पुष्पा शर्माले सवा-मिनेट जतिको उत्तर दिएको पाइन्छ । मात्राका हिसाबले यस संवादको उत्तर अत्यन्त लामो र जेलिएको छ । श्रोताले सम्झिएर साध्य नै नलाग्ने र नसुने पनि फरक नपर्ने जानकारीको खात छ । यसमा खुला प्रश्न पाएपछि स्रोत व्यक्तिले जसरी भए पनि धाराप्रवाह बोलिरहनुपर्छ भन्ने प्रवृत्ति देखाएको पाइन्छ । सञ्चारकर्मी र स्रोत व्यक्ति– दुवैको पछिल्लो बसोबास काठमाडौंमा छ ।

यस खालको शैलीमा बोलिरहने सहभागीहरू अरू पनि भेटिएका छन् । *हाम्रो सरोकार, सञ्जीवनी, समावेशी अभियान* आदिका केही अन्तर्वार्तामा कतै कतै त सञ्चारकर्मीले हस्तक्षेप गरिहाल्ने उपयुक्त मौका पनि पाएको देखिँदैन । कतैचाहिँ सञ्चारकर्मीले नै स्रोत व्यक्तिलाई बोल्ने मौका नै नदिई आफैंले लामो व्याख्यान छाँटिरहेको पनि भेटिएको छ । पाएका बेला जानेजति सबै कुरा तानतुन गरेर भन्ने, भनिरहेको कुरा कत्तिको सत्य, तर्कपूर्ण र सान्दर्भिक छ भन्नेतिर मतलब नगर्ने, बोल्न थालेपछि अर्काको कुरा नसुन्ने वा सकभर अर्कालाई बोल्ने पालो वा मौका नै नदिने प्रवृत्ति भएका सहभागीहरूका एकालापजस्ता संवाद पनि अन्तर्वार्तामा प्रशस्त सुनिन्छन् । खासगरी *हाम्रो सरोकार* मा सहभागी महिला, *सञ्जीवनी* मा सहभागी पुरुष, *सफलताको गोरेटो* मा सहभागी केही महिलाका संवादमा यस्ता आनीबानी झल्किएका छन् । पुरुषहरूले पनि यसरी नै घुमाइ-फिराई लामो कुरा गर्ने गरेको पाइएको छ । मात्राका हिसाबले *सफलताको गोरेटो*को प्रस्तुत अंश तथ्य, अनुभूति, अभीष्ट र विचारलाई नै खजमज्याउने गरी लामो छ भने भाषिक गुणस्तर पनि कमजोर छ । घुसुवा ध्वनि र शब्दहरूको प्रयोग गर्दै घुमाइ-फिराई कुरा गर्ने प्रवृत्तिले आवश्यक सूचनालाई समेत ओझेलमा पार्न खोजेको छ । सुन्दै जाँदा सञ्चारकर्मीले हस्तक्षेप गरिहाल्ने उपयुक्त मौका पनि पाएको देखिँदैन ।

रेडियोमा जतिसुकै प्रभावकारी तरिकाले बोले पनि एकै व्यक्तिको कुरा पौनेदेखि एक मिनेटभन्दा लामो समय लगातार आउनु राम्रो मानिँदैन । यसमा त झन् कुराको छेउ-टुप्पो कताबाट कता पुग्छ, श्रोताले एकपटक सुनेका भरमा सरर्र पछ्याउन सक्दैन । तरिकाको कमजोरीले सम्बन्ध र गुणस्तरलाई ओझेलमा

पारेको छ । मात्राका दृष्टिले पनि यसलाई सफल र सन्तुलित संवाद भन्न सकिँदैन । शिक्षित, उद्यमी तथा आत्मनिर्भर महिलाको यस प्रकारको संवाद शैलीलाई परम्परागत लैङ्गिक पूर्वाग्रहसँग जोडेर सामान्यीकरण गर्न भने मिल्दैन ।

### ● *मात्राको तराजुमा नौलो ढलपल*

महिला-महिलामात्र सहभागी हुने कार्यक्रम *शैली*को २०६४ असोज २ गते दिउँसो प्रसारित अन्तर्वार्ताको कुरा गर्ने हो भने सञ्चारकर्मी बढी र स्रोत व्यक्तिले ठीकै मात्रामा बोलेको सुनिन्छ । रेडियोका श्रोतामा सञ्चारकर्मीभन्दा स्रोत व्यक्तिका कुरा सुन्ने चाहना बढी हुन्छ । त्यस अपेक्षालाई सो दिनको संवादले पूरा गर्न सकेको छैन । त्यस खालको खुला वा विषयगत प्रश्न पनि गरिएको छैन । प्रश्नले खोजेको उत्तरमात्र दिने स्रोत व्यक्तिको संवाद-कला भने मात्रा मात्र होइन, गुणस्तरका दृष्टिले पनि उपयुक्त देखिन्छ । "आठजनालाई खाना पकाउनु हुन्च । ... अनि अरूलाई खाना पकार ख्वाउनुहुन्च, अनि बिबा गर्नु भो कि गर्नु भको छैन ?" एउटै प्रश्न दुईपटक सोधिसकेपछि मात्र प्रश्नलाई अन्यत्र मोड्ने र स्रोत व्यक्तिलाई अधीनस्थ भूमिकामा राख्न खोज्ने सञ्चारकर्मी रूपा न्यौपानेको शैली व्यावसायिक रेडियोकर्मीका दृष्टिले उपयुक्त देखिँदैन ।

अति नै कम पढेलेखेको र सिन्धुपाल्चोकको गाउँले पृष्ठभूमिबाट अधवैंसे उमेरमा लागू पदार्थको दुर्व्यसनी पतिले हदैसम्म दुर्व्यवहार गरेकाले सहन नसकी सहर पसेकी स्रोत व्यक्ति सीता थापाको जवाफले विवाहको सवालमा प्रतिप्रश्नको रूप लिन्छ, "श्रीमानले ?" सञ्चारकर्मीको प्रष्टीकरण भने यस्तो हुन्छ, "तपाईंले" । त्यसपछि हाँसोसहित सीताको जवाफ हुन्छ, "पन्ध्र वर्ष भैसक्यो" । यस खालको प्रश्नोत्तर शैलीमा स्रोत व्यक्तिको बोलीको मात्रा एकदम ठीक देखिन्छ ।

कतिपय शब्दमा ध्वनिको विकल्प प्रयोग र तान छन् । यसले काठमाडौँनजिकै पूर्वतिरको भाषिकाको झलक दिन्छ । यस संवादकी स्रोत व्यक्तिले सम्बन्ध र तरिका मात्र होइन, आफ्नोतर्फबाट गुणस्तर र मात्राको सन्तुलनसमेत कायम गरेको पाइन्छ । यसबाट रेडियो अन्तर्वार्तामा गुणस्तरीय र उचित मात्रामा संवाद गर्न बढी नै पढेको, सहरमा हुर्केबसेको र कुनै पदमा रहेको व्यक्ति नै हुनुपर्छ भन्ने परम्परागत सोचाइमा पुनर्विचार हुनुपर्ने देखिन्छ । साथै, नपढेका र गाउँघरमा रहेका महिला बढी नै बोल्छन् र उनीहरू पढा-लेखा व्यक्तिभन्दा भाषिक रूपले

कमजोर हुन्छन् भन्ने सोचाइलाई पनि सो दिन प्रसारित स्रोत व्यक्ति सीता थापाको संवादले गलत साबित गरिदिएको छ ।

यसमा दुई महिलाको आपसी कुराकानीमा आवश्यक र सही सूचनामात्र प्रयोग गरेर जवाफ दिने स्रोत व्यक्तिको विशेषता र पूर्व-तयारी नगरीकनै प्रश्न गर्न थाल्ने र श्रवण सचेतता नै नदेखाउने सञ्चारकर्मीको कमजोरी झल्किएका छन् । यसले पनि संवाद शैलीलाई समाजका कुनै वर्ग, क्षेत्र, जाति, पेसा, शिक्षा, उमेर, अवस्था, भूमिका आदिसँग जोडेर सामान्यीकरण गरिएका परम्परागत कथनहरू पुनर्विचारको घेरामा छन् र वस्तुगत आधारमा पुनर्विश्लेषण गर्नुपर्ने अवस्थामा छन् भन्नलाई बलियो आधार दिन्छ ।

● ***व्यक्तिपिच्छे बोल्ने बानी फरक***

कार्यक्रम *हाम्रो सरोकार* मा २०६४ असोज ४ गते प्रसारित अन्तर्वार्तामा दुई महिलाबीचको संवाद शैली स्पष्ट रूपमै भिन्न देखिन्छ । सुरुमा सञ्चारकर्मी शान्ता बस्नेतले प्रश्न पूरा गर्ने समय पनि पाएकी छैनन्, स्रोत व्यक्ति प्रतिभा सुवेदीलाई प्रतिक्रिया जनाउन हतार भइसकेको छ । आठ सेकेन्डमा प्रश्न सिद्धिएपछि लगातार तीन मिनेट २४ सेकेन्डसम्म स्रोत व्यक्तिमात्र एकोहोरो बोलेको बोल्यै सुनिन्छ । मात्राको हिसाबले स्रोत व्यक्तिको संवाद अत्यधिक त छँदैछ, कुरा पनि कहाँबाट पसेर कहाँ निस्कन्छ र फेरि कता लाग्छ सम्झनै गाह्रो पर्छ । यसले गर्दा सम्बन्ध र तरिका खजमजिएको छ ।

रेडियो प्रवचनको कुरा बेग्लै हो, अन्तर्वार्ता र अन्य कार्यक्रममा एउटै व्यक्ति लगातार साढे तीन मिनेटसम्म बोलिरहनु राम्रो मानिँदैन । यस उदाहरणमा सञ्चारकर्मीले स्रोत व्यक्तिलाई जतिसुकै कुरा जोडेर उत्तर दिन खोजे पनि स्वतन्त्र छाडिदिएको छ । गुणस्तरको कुरा गौण बन्न पुगेको छ । भन्दाभन्दा "मेरो आँखाले चाइँ के देखेको छ भन्दाखेरि" भन्ने जस्ता आत्मपरक र अनावश्यक वाक्यांशसमेत जोडिएको पाइन्छ । यस्ता उदाहरण अरू पनि छन् । यसले गर्दा मात्रा वृद्धि मात्र होइन, प्रसंग नै अन्यत्र मोडिन पनि सक्छ । यहाँ पनि यस्तै भएको छ । लामो कुरा गरिसकेपछि स्रोत व्यक्तिले "अनि अब यो ग्रामीण महिला तपाइँ पछि परे भनेर मलाई सोध्नु भो त्यो किन परे त्याँ धेरै कुरा छ" भनेर सञ्चारकर्मीकै प्रश्नको प्रसंग जोडेर पुनः संवादलाई तानेको पनि देखिन्छ ।

घुसुवा शब्द केलाएर साध्य छैन । पाएका बेला जानेजति सबै कुरा भन्ने र आफू बोल्न थालेपछि अर्काको कुरा नसुन्ने प्रवृत्ति यस संवादमा सहभागी स्रोत व्यक्तिमा देखिन्छ ।

महिला हकहितको काममा समर्पित भएर कुरा गर्नेले पनि "काम गर्ने कालु अँ मकै खाने भालु यस्तै के भन्छन् नि" भन्दै उखानका माध्यमबाट भने काम गर्ने र खाने –दुवै काममा पुरुष विम्बको नै प्रयोग गरेको पाइन्छ । सञ्चारकर्मी र स्रोत व्यक्ति– दुवै महिला भए पनि प्रवृत्ति समान देखिएको छैन । प्रवृत्तिलाई भूमिकाले फरक बनाएको पनि होइन । मात्राको हिसाबले त त्यो दिन प्रसारित *हाम्रो सरोकार* को संवाद सुन्न लायक पनि पाइँदैन ।

### ● *भूमिका नै बिर्सने पनि रैछन्*

कार्यक्रम *समावेशी अभियान* बाट २०६४ असोज ८ गते प्रसारित अन्तर्वार्ताको अंशलाई केलाउँदा भने सञ्चारकर्मीले आफ्नो भूमिका नै बिर्सिएको पाइन्छ । सञ्चारकर्मी प्रश्नकर्ता नभएर सहजकर्तामात्र होइन, व्याख्यातासमेत बनेको छ । यो पनि महिला-महिलाबीच मात्रै भएको संवाद हो । स्रोत व्यक्तिलाई स्टुडियोको कुर्सीमा बसाएर सञ्चारकर्मीले जानेका कुरा सुनाउने होइन, स्रोत व्यक्तिलाई बोल्न लगाउने हो । यसमा स्रोत व्यक्ति शक्ति समूहकी अध्यक्ष जानुका भट्टराईका अगाडि भने सञ्चारकर्मी प्रमिला मानन्धरले त्यो सीमा नाघेको देखिन्छ । स्रोत व्यक्ति अल्पतम प्रत्युत्तरमै रहनुपर्ने हो कि भनेर सुरु-सुरुमा अलमलमा परेको देखिन्छ । त्यसरी अलमल्याउनमा सञ्चारकर्मीको भूमिका बढी छ । पहिले त प्रश्न नै कथनको रूपमा छ । त्यसपछि पनि स्पष्ट प्रश्न नसोधी उत्तरको अपेक्षा गरिएको छ ।

स्रोत व्यक्ति बोल्न थालेपछि उसको वाक्य टुंगिन नपाउँदै आठ सेकेन्डमै सञ्चारकर्मीले कुरा मोडेको समेत छ । भूमिकाको यहाँ पनि ख्याल गरिएको छैन । सञ्चारकर्मीकै संवादको गुणस्तर हचुवा छ । "...हजारौं संस्थाहरू यस्ता छन्, हजारौं नभए सयौं त होला..." समेत भनिएको छ । सम्बन्ध र तरिका गौण बनेका छन् । फलत: मात्रा असन्तुलित छ र संवाद सफल हुन सकेको छैन । यसले पनि मात्राको हकमा लैंगिक पक्षले केही असर गर्दैन, व्यक्तिको बानीले असर गर्छ भन्ने देखाउँछ ।

# दिशा र लक्ष्यको सम्बन्धमा महिला बोली

कुनै पनि अन्तर्वार्ताका आफ्नै दिशा र लक्ष्य हुन्छन् । सोही दिशा र लक्ष्यअनुरूप जानकारी, अनुभव र विचारका साथ कुराकानीको शैलीमा रेडियो अन्तर्वार्ता अघि बढ्नुपर्छ । अन्तर्वार्ताको मुख्य लक्ष्य निश्चित विषयमा सम्बन्धित व्यक्तिकै शब्द, तथ्य, कारण र विचारहरूलाई श्रोतासम्म पुऱ्याउनु हो भन्ने कुरालाई बिर्सनु हुँदैन (मैनाली २०५९ : ८८) । सञ्चारकर्मी र स्रोत व्यक्तिको संवादको धार वा भूमिका फरक हुन्छ । सञ्चारकर्मी प्रश्नकर्ताको भूमिकामा हुन्छ भने स्रोत व्यक्ति उत्तरदाताको रूपमा । सम्बन्धका आधारमा यी दुईको संवादमा अन्तर्वार्ताको दिशा र लक्ष्यअनुरूपको प्रश्न र प्रश्नअनुरूपको उत्तर छ कि छैन हेरिन्छ ।

अन्तर्वार्ता उद्देश्यअनुरूप (पौडचाल २०६० : ४९) अघि बढ्नुपर्ने र अन्तर्वार्ताले दिशा बदल्न पनि (पौडचाल २०६० : ५०) सक्नेतिर सञ्चारकर्मी सदा सतर्क रहनुपर्ने हुन्छ । कुराकानीको सन्दर्भ र सिलसिलालाई लक्ष्यअनुरूप सही दिशामा डोऱ्याउने काम सञ्चारकर्मीको हो । यस कोणबाट रेडियो अन्तर्वार्तामा सहभागी महिला दिशा र लक्ष्यभन्दा बाहिर जाने सम्भावना अत्यन्त कम हुन्छ । त्यति हुँदा-हुँदै पनि कतिपय अन्तर्वार्तामा महिलाको मौलिकता झल्किने सम्भावनालाई पनि नकार्न सकिँदैन ।

### ● *दिशा र लक्ष्यप्रतिको सफल निर्दिष्टता*

*स्रोत व्यक्ति* अब हेर्नुस्न, बच्चासुद्द निकाल्देका हुन्चन् । बच्चाको जिम्मेवारी त उस्को बाउको हो नि ; महिलाले कसरी हेरोस् त्यो बच्चालाई ? सान्सानु कुराहरूको प्रति जागरुक गराउनु आवश्यक छ क्या ;

*सञ्चारकर्मी* बच्चामा त दुवैको अधिकार हुन्छ नि ;

*स्रोत व्यक्ति* अधिकार हुन्छ । जिम्मेवारी त उस्को बाउको हुन्छ नि त ; उस्को पालनपोसनको जिम्मेवारी त, उस्को बाउलाई जान्छ । अशिक्षित समुदायहरू जस्लाई आफ्नो कर्तव्यको बोध नै

नभएकालाई, तेस्तालाई भन्नु पर्‍यो। तिनीहरूले गर्छन् के यस्तो कार्यहरू ; उनीहरूलाई जागरुक गर्नु आवश्यक छ।

**(*सह-अस्तित्व*, २०६४ असोज १२ गते)**

***विश्लेषण***

यो मुसलमान समुदायमा धर्मका आडमा गर्ने गरिएको सम्बन्धविच्छेद (तलाक) का विषयमा केन्द्रित अन्तर्वार्ताको अंश हो। यसमा स्रोत व्यक्ति सीमा खानले श्रीमती र बच्चालाई घरबाट निकाल्ने पुरुषका गैरजिम्मेवार व्यवहारको कुरा गरेकी छन्। पालन-पोषण गर्न सक्ने आर्थिक हैसियत र पैतृक सम्पत्तिमा अधिकार नै नभएका महिलाले पतिको आवेशात्मक तलाकका कारण बच्चासहित घरबाट निकालिनुपरेपछि बच्चाको पनि बिचल्ली हुन्छ। यही कोणबाट स्रोत व्यक्तिले बाबुको जिम्मेवारीको कुरा उठाएको देखिन्छ। सञ्चारकर्मी नीरा रानाभाटले पनि बच्चामाथि आमाको पनि अधिकार हुने कुरा सम्झाएकी छन्। जिम्मेवारी र अधिकारको कोणबाट उठाइएका दुवैका कुरा सम्बन्धविच्छेदकै सेरोफेरोमा अघि बढेका छन्। यसैले सम्बन्धका दृष्टिले यो संवाद सफल छ। गुणस्तरमा खोट छैन। मात्राका हिसाबले सन्तुलित छ। तरिकाका दृष्टिले पनि संवाद अनुपयुक्त छैन। दोहोरो अन्तर्क्रियात्मक अभिव्यक्ति र बोलचालको शैलीले संवादलाई सजीव बनाएको छ। यसबाट निर्दिष्ट विषयमा केन्द्रित रहेर कुराकानीलाई तार्किक निष्कर्षतिर अघि बढाउन पनि महिलाहरू सक्षम छन् भन्ने पुष्टि हुन्छ। यस खालका संवादका अंश अन्य कार्यक्रममा पनि छन्।

***● प्रश्न र उत्तरको रसायनमा खोट पनि***

*सञ्चारकर्मी २* जस्तो यो अब, निर्वाचन नजिकिँदै छ कतिपय यसबारेमा बेखबर छन् अझ बाहिरतिर जाने विशेष गरी महिला अब ती महिलाले कसरी अब आत्मसम्मानको पर्व बनाउनुपर्छ त ?

*स्रोत व्यक्ति २* अब, महिलाले पनि निश्चय पनि घर पनि महिलाको लागि हो बच्चा हेर्ने कुरा पनि महिलाको लागि प्यारो नै हुनुपर्छ। प्यारो छ पनि तर त्यसको साथसाथै एउटा राज्य सञ्चालनमा

सहभागिताको कुरा पनि महिलाको लागि प्राथमिकताको केन्द्र बन्नुपर्‍यो । मेरो लागि पनि यो कानुन हो । संविधानसभा मेरो पनि हो भन्ने अनुभूति महिलामा पनि हुनपर्‍यो र सधैँ पुरुषले बनाइदिने, पुरुषको मापदण्डमा बनाउने, पितृसत्तात्मक र सामन्तवादी सोचलाई नै बाट ग्रसित भएर बनाउने कानुनलाई चुनौती दिने महिलाको लागि यो ठूलो मौका हो । चाहे मतदाताको रूपमा भएर होस् वा उम्मेदवारको रूपमा भएर होस् वा निर्वाचन पर्यवेक्षकको रूपमा भएर होस्, यो निर्वाचनमा हामी सक्रिय सहभागी हुनैपर्छ । यस्तो मौका भनेको जीवनमा धेरैपटक आउँदैन । पहिलोचोटि हामीले आफ्नो लागि आफैँ संविधान बनाउँदैछौँ । हामी महिला वास्तवमा यो देशको नागरिक हौँ, यो कुराको यौटा अ~~ हामीले के गर्नुपर्छ भन्दाखेरि उपभोग गर्नुपर्छ । त्यल्लाई हामीले एक्सरसाइज गर्नुपर्छ । र यो मौका हामीले गुमाउनु हुँदैन । यो मौकाको सदुपयोग गरौँ ।

**(*सञ्जीवनी*, २०६४ असोज १७ गते)** :

### *विश्लेषण*

प्रस्तुत संवाद संविधानसभामा महिलाको समावेशीकरणका विषयमा महिलाका बीचमा भएको हो । झट्ट सुन्दा आत्मसम्मानको पर्व भनिएकाले प्रश्न महत्त्वाकाङ्क्षी देखिन्छ । सञ्चारकर्मी शारदा रिजालकै केही शब्द जस्ताको तस्तै लिएर हेर्ने हो भने पनि त्यसको घेरा 'विशेष गरी' 'बाहिरतिर' गएर 'बेखबर' रहेका महिलामा सीमित छ । प्रश्न र उत्तरको रसायन त्यति नमिले पनि विषयलाई चतुरतापूर्वक निर्दिष्ट दिशातिरै लक्षित गरिएको छ । जसरी सञ्चारकर्मीले प्रश्नलाई ठीकसँग राख्न सकेकी छैनन्, त्यसरी नै स्रोत व्यक्ति सपना मल्लले पनि प्रश्नमा उनिएका शब्द-शब्दलाई वास्ता गरेकी छैनन् । उनले सामान्य भावमात्र ग्रहण गरी आफूलाई भन्न मन लागेको सान्दर्भिक कुराबाटै उत्तर सुरु गरेकी छन् । यसैले पनि मूल विषय-वस्तुसितको सम्बन्धबाट संवाद टाढा गएको भन्न सकिँदैन । एकालाप शैलीमा प्रस्तुत स्रोत व्यक्तिको संवादमा गुणस्तर सामान्य छ । मात्रा र तरिकामा खोट देखाइहाल्नुपर्ने पनि केही छैन । यस खालको संवाद गर्ने प्रवृत्ति महिला-महिलामा मात्र होइन, पुरुष-महिला मिश्रित सहभागितामा पनि देखिन्छ ।

## ● *भावको धार बदल्ने पनि छन् बीचमा*

कार्यक्रम 'शैली' मा २०६४ असोज ३० गते प्रसारित अन्तर्वार्तामा "गारोसारो त धेरै छ बैनी, है ?" भनेर स्रोत व्यक्ति नृत्य कलाकार हनी श्रेष्ठले सञ्चारकर्मी रूपा न्यौपानेसँग अस्वाभाविक नाता कायम गरेकी छन् । यसबाट स्रोत व्यक्तिलाई दिनुपर्ने आधारभूत जानकारी नै नदिईकन स्टुडियोमा लगिन्छ वा सम्पादन नै नगरीकन कार्यक्रम प्रसारण गरिन्छ भन्ने देखिन्छ । यी दुवै कुराले सञ्चारकर्मीका कमजोरीमात्र देखाएका छैनन्, अन्तर्वार्तामा भावको धार बदलेर सम्बन्धलाई कमजोर पनि पारेका छन् । संवाद शैलीमा पाइने अर्धभाषिक अभिलक्षणमध्ये नाता र सम्बोधनमात्र होइन, रस जगाउने भावपूर्ण अभिव्यक्ति पनि उल्लेख्य छन् । जहाँसम्म सम्बोधनको कुरा छ, त्यसलाई *व्यक्तिगत रूपमै लैंगिक हमला* उपशीर्षक अन्तर्गत उठाइएको छ ।

धेरैजसो महिला स्रोत व्यक्तिमा कुरा गर्दै हल्का रूपमा हाँस्ने बानी पनि देखिन्छ । विभिन्न रस जगाउने भावपूर्ण बोलीले रेडियो संवादलाई जीवन्त बनाउँछ । रेडियोमा हँसिलो गरी बोल्ने बानी पूर्वदेखि पश्चिमसम्म सबैतिरका महिलामा छ । ग्रामीण, पीडित, अति कम पढेलेखेका महिलाले त झन् दु:खको कुरा गर्दा पनि हाँसेका छन् । उनीहरूलाई सानैदेखि परिवारमा असमान तरिकाले दु:ख दिएर हुर्काइएकाले पनि यस्तो भएको हुन सक्छ । कार्यक्रम 'शैली' मा सीता थापासहित *सह-अस्तित्व* मा बेलु बादीले दु:ख र पीरका कुरा गर्दा हल्का रूपमा हाँसेका छन् । यसले कतिपय महिला दु:खलाई पनि हाँसेरै स्वीकार्छन् भन्ने समेत पुष्टि गर्दछ । यस्ता कुराले भावको धारलाई बदल्न सघाउँछन् । यसको प्रभाव नकारात्मक हुनसक्ने खतराबाट भने जोगिनुपर्ने हुन्छ ।

कार्यक्रम *शैली*मा प्रस्तुत हनी श्रेष्ठको गाह्रोसारोसित सम्बन्धित संवादका कतिपय अंशको सुरु, मध्य र अन्तलाई विचार गर्दा लक्ष्य र दिशामा तालमेल देखिँदैन । आफूलाई गाह्रो-साह्रो नपरेको कुरामा नै स्रोत व्यक्ति हनी श्रेष्ठको जोड छ । "मलाई क्यै कँइँ~~ पनि चैँ बाधा दिने चैँ आएन" भनेर उनले कुरा टुङ्ग्याएकी छन् । बीचमा एक्कासि भावको धार बदलिएको छ र सुरुको कुरालाई अनावश्यक बनाइदिएको छ । यसले संवादको केही मात्रालाई सम्बन्धहीन बनाएको छ । गुणस्तरमा विश्वास गर्न सकिने आधार खस्किएको छ । तरिकामा पनि संदिग्धताले अंशत: ठाउँ पाएको छ । प्रश्नात्मक अभिव्यक्ति र हँसिलो भावले संवादलाई

जीवन्त बनाए पनि सञ्चारकर्मीले बीच-बीचमा 'हो' र 'हजुर हजुर' भनेर अनावश्यक सक्रियता र तँछाड-मछाड प्रदर्शन गरेको पाइन्छ । यस्तो प्रदर्शनले श्रोतालाई बिच्काउने प्रबल सम्भावना हुन्छ ।

### ● *नभएको होइन इमानदार तालमेल पनि*

'युवा आवाज' बाट २०६४ असोज १५ गते प्रसारित अन्तर्वार्ता आदिवासी जनजातिका विषयमा केन्द्रित छ । उनीहरूका साझा समस्याबाट उठान भएको संवाद व्यक्तिगत सजिलो-असजिलोमा समेत प्रवेश गरेको छ । स्रोत व्यक्तिले "ठ्याक्कै भन्न चै सकिँदैन" भन्दै आफूले भोगेका समस्याको झलक दिँदै विश्लेषण पनि गरेकी छन् ।

युवा ब्राह्मण पुरुष सञ्चारकर्मी पुण्य भण्डारीभन्दा समान उमेर समूहमा पर्ने जनजाति महिला स्रोत व्यक्ति लालकुमारी रोका मगरको भाषिक क्षमता, अभिव्यक्ति कौशल र विषय विश्लेषणको धरातल उँचो छ । गुणस्तर, मात्रा र तरिकाका दृष्टिले स्रोत व्यक्तिको संवादात्मक अभिव्यक्तिमा परिपक्वता पनि झल्किन्छ । उनले "अलिकति नाक चुच्चो, चिम्सो आँखा भ'को थेप्चो नाक भ'कोहरू" भनेर अनुहारको बनोटसमेत झल्कने गरी वर्णन र "पढेको पनि हुँदैन लेखेको पनि हुँदैन, हैन ?" भनेर विश्लेषण गरी-गरी प्रश्नात्मक शैलीमा दिएको जवाफमा ज्यान छ ।

यसमा कुराकानीलाई निर्दिष्ट लक्ष्य र दिशातिर डोऱ्याउनमा भने सञ्चारकर्मीको पनि योगदान छ । "यस्तै अरू क्यै छ ?" भन्ने पूरक प्रश्न खुला छ । स्रोत व्यक्तिले जवाफलाई प्रश्नअनुरूप सजिलो-असजिलोकै सन्दर्भमा सीमित बनाएकी छन् । यसले पनि समग्र अन्तर्वार्ता र संवादका अंश-अंशको सम्बन्धसूत्र मूल दिशाबाट पर नगएको पुष्टि गर्दछ । यस खालका संवादका अंश अन्य कार्यक्रमका अन्तर्वार्तामा पनि भेट्न सकिन्छ ।

# तरिकामा यस्तो छ महिला बोली

अन्तर्वार्तामा प्रत्यक्ष सहभागीका रूपमा सञ्चारकर्मी र स्रोत व्यक्ति हुन्छन् भने अप्रत्यक्ष तर महत्त्वपूर्ण सहभागीका रूपमा श्रोता रहन्छन् । अन्तर्वार्ता गर्दा सहभागीले आफ्नो भूमिका वा योगदानमा अस्पष्ट हुनुहुँदैन, शंकास्पद कुरा पनि भन्नुहुँदैन । भूमिका बाँधेर र यता-उता घुमाएर होइन, सोझै र छोटकरीमा प्रस्टसँग भन्नुपर्छ । भन्न खोजेको कुरा सिलसिलाबद्ध गरी सुरैसँग पनि भन्नुपर्छ । रेडियो अन्तर्वार्ता पनि सामान्यत: यस्तै हुनुपर्छ ।

अन्तर्वार्तामा अस्पष्ट कुरालाई स्पष्ट पार्न पूरक प्रश्नहरू (पौडचाल २०६० : ५०) को प्रयोग गरिन्छ । संवादको तरिकामा समाजभाषाविज्ञानका लैंगिक सूत्रहरूले अंशत: प्रवेश पाउन सक्छन् । लैंगिक अन्धताको अनपेक्षित अवशेषलाई मेट्ने हो भने रेडियो सगरमाथामा स्पष्ट, सन्देहरहित, सङ्क्षिप्त र सिलसिलेबार सूत्रको घेरा छिचोलेर मौलिक तरिकाले रेडियो अन्तर्वार्तामा जीवन्त संवाद गर्ने सहभागीहरू पनि छन् ।

**● *गलत व्याख्यामा त हस्तक्षेप हुनुपर्ने नि***

*सञ्चारकर्मी* त्यो परिवर्तन जुनखालले आउनुपर्ने हो त्यो भा छैन नि, त्यो कारण चाइँ हामी पनि व्हौं ?

*स्रोत व्यक्ति १* हामी व्हौं, हामी व्हौं, त्यो पक्कै पनि हो । त्यो कसरी व्हौं भन्दाखेरि ...अघि भन्नुभो नि तपैंले जन्मेदेखि हुर्केदेखि छोरालाई र छोरीलाई छोरालाई गर्ने व्यवहारै फरक हुन्च । छोरालाई बल किन्दिने छोरीलाई पुतली किन्दिने । त्याँदेखि सुरु हुन्छ के । विकास तेसरी हुन्छ । बच्चाको दिमागको विकास तेसरी सुरु हुन्छ जस्तो लाग्छ, अनि तेसरी अँ अँ  दिमागमा त्यै घुस्दै घुस्दै घुस्दै जान्छ । अनि जब परिपक्क हुन्छ नि मान्छे, अनि क्वै चेञ्ज हुनै चाहँदैन । त्यो चेञ्ज हुँदैन के  ; समस्या भनिकै त्यै हो ।

*सञ्चारकर्मी* यौटा कुरा चइँ हामीले जसरी हुर्काउँछौं छोराछोरीबीच यौटा अब भेदभाव गर्न भएन, अबको पुस्ता र हामीभन्दा माथिल्लो पुस्ता त अलि त परिवर्तन हुनसक्छ नि ।

*स्रोत व्यक्ति १* सक्छ सक्छ सकिनुपर्छ । सकेन भने त त्यै पइलाकै जस्तो पुस्ता भइहाल्यो नि ; हाम्रो आमा, हजुरआमा त्यै पुस्ता भैहाल्यौँ नि हामी पनि ।

*स्रोत व्यक्ति २* याँनेर अलिकता म नि थप्छु ; (पालो आफैँ लिएर) मलाई के लाछ भने विचारका कुराहरू भन्दाखेरि, हाम्रा दिदीबैनीहरूलाई, चेलिबेटीलाई भन्दाखेरि हामी कमजोरै छौँ नि, हाम्ले बच्चा जन्माउन पर्च, हाम्ले दुद ख्वाउन पर्च, हाम्ले यसो गर्नपर्च अँ भन्ने कारणले सबै गर्न पर्च भन्ने कुरा लेराएर हामी कमजोर छौँ भनेर पुरुषले भन्ने गरेका कुराहरूलाई जस्टिफाई गर्नुन्च । तर वास्तविक कुरा के हो भन्दा हामी एक्दम प्राकृतिक रूपमा जाउँ । समाजको यो सबै कुराहरूले निर्माण गरेको चाइँ, आइमाई वास्तवमा जन्मिन्न, निर्माण गरिन्च । आइमाई जन्मिँदै कम्जोर भका हैनन् कि कम्जोर निर्माण गरिएका हुन् । त्यो कुराहरू मलाई कसरी हो जस्तो लाग्छ मलाई भन्देखि हेर्नुस् हाम्रो गाउँठाउँमा कुकुर हुन्च नि, कुकुर भुस्याहा कुकुरहरू हुन्छन्, त्यो यौडा कुकुरनीले बच्चा पाउँचे, अनि तेस्पछि ती बच्चाहरूलाई ख्वाउँचे, पाल्चे भनौँ न पाल्चेँ, र अर्को भुस्याआ कुकुर आएर ती बच्चाहरूलाई टोक्न खोज्यो भने बचाउँचे । अथ्वा एउडी सुत्केरी भएकी कुकुरनीले समेत आफ्नो बच्चालाई ख्वाउनी, र बचाउने गर्नसक्च । ...तेल्लाई कोई पुरुष चाइँदैन पछाडि । आफ्ना बच्चा हुर्काउनलाई, आफ्ना उस्को क्षमता ऊ पुरुषभन्दा अगाडि छ... अर्थात् एक्दमै प्राकृतिक रूपमा हेर्ने हो भने र तिनलाई तेसरी गलत ढंगले व्याख्या नगर्ने हो भने सांस्कृतिक रूपमा उसको चेतनालाई यस्तो हो भन्नी नबनाइदिनी हो भनी बच्चा बोकेर पनि पुरुषको प्रतिस्पर्द्धामा लड्न सक्चे र अगाडि आउँचे । त्यो पुरुषलाई राम्रोसँग था

छ । तेसो भएरै उनीहरूलाई यसरी सामन्ती सत्ताले सामन्ती चिन्तनले तिन्लाई पइल्यैबाड पन्छाइरहेको । उनीहरू प्रतिस्पर्द्धामा आए भने उनीहरू अगाडि हुन्चन् । त्यो भए पुरुषको सत्ता स्वात्तै गो, उपरखुट्टी लार खान नपाइनी भो, थर्काउन नपाइनी भो । तेस्भको हुनाले वास्तवमा भन्ने हो भने त, एक्दम प्राकृतिक रूपमा भन्ने हो भने त मैला अजै अगाडि छन् । तेसै आदिम युगमा मइलाले अँ अँ मातृसत्तात्मक स्थापना भाको होइन । त्यो प्राकृतिकरूपमै क्षमता भाको भर हो । तर इतिहासका पत्ता पल्टाउँदाखेरि इतिहासका पाना पल्टाउँदाखेरि खाल्टामा परेको अवस्ता हो यो । त तर यो सँधै हुँदैन । ...

***(सञ्जीवनी २०६४ असोज ३ गते)***

***विश्लेषण***

सामाजिक तथा सांस्कृतिक व्यवहारको परिवर्तनका कुरा प्रस्तुत संवादमा छन् । दुई महिला र एक पुरुष सहभागीमध्ये सञ्चारकर्मी महिलाको संवादमा स्पष्टताको कमी छ । स्रोत व्यक्ति दम्पतीमा महिलाभन्दा पुरुषमा लामो कुरा गर्ने र पालो आफैं लिएर बोल्ने प्रवृत्ति देखिएको छ । सञ्चारकर्मी दुर्गा कार्की प्रश्नकर्ताभन्दा पनि सहजकर्ताका रूपमा प्रस्तुत भएको देखिन्छ । सञ्चारकर्मीको आग्रहलाई स्रोत व्यक्ति भावना पोखरेलले समर्थन र पुष्टि गर्न खोजेको पाइन्छ । त्यही क्रममा पुरुष स्रोत व्यक्ति कुसुम ज्ञवालीले पालो आफैं लिएर दुई मिनेट २२ सेकेन्डसम्म लगातार बोलेका छन् । वक्ताको नियत खराब छैन, तर मात्राका हिसाबले अत्यधिक र गुणस्तरका हिसाबले गलत अर्थात् अवैज्ञानिक तर्क दिएर महिलालाई सक्षम हुन्छन् भनिएको छ ।

“अथ्वा एउडी सुत्केरी भएकी कुकुरनीले समेत आफ्नो बच्चालाई ख्वाउनी र बचाउने गर्नसक्च”, “...तेल्लाई कोई पुरुष चाइँदैन पछाडि”, “बच्चा बोकेर पनि पुरुषको प्रतिस्पर्द्धामा लड्न सक्चे र अगाडि आउँचे” जस्ता वाक्यले संवादको सम्बन्ध लक्ष्य-उन्मुख नै देखाए पनि महिलाको प्रजनन स्वास्थ्यप्रति देखाइनुपर्ने मानवीय दृष्टिकोणको एकदमै अभाव झल्किन्छ । सो विषयलाई पशुसित दाँजेर गैरजिम्मेवार र संवेदनहीन पितृकोण प्रस्तुत गरिएको छ ।

सही दृष्टिकोणका लागि सहभागी शिक्षित महिलाले पनि समुचित पहल गरेका छैनन् । यस संवादबाट प्रजनन स्वास्थ्यलगायतका संवेदनशील विषयमा अझै पनि सञ्चार माध्यमले मानवीय चेतनाको उदार ग्रन्थी खोल्न नसकेको पुष्टि हुन्छ ।

“गलत ढंगले व्याख्या नगर्ने हो भने” भन्दै अघि बढाइएको कुरा कतिसम्म गलत छ भन्ने कुरा चाल पाएर वा नपाएरै महिलाले खण्डन नगरेका हुन् ? श्रोताको मनमा उठ्न सक्ने यस्तो खुल्दुलीको जवाफ मिल्दैन । आफूलाई परम्पराभन्दा बाहिर देखाउन चाहने दम्पतीमा पत्नीले पनि महिलाको प्रजनन स्वास्थ्यका विषयमा सही कुरा गर्न पतिलाई सघाउनुपर्ने हो । संवेदनशील विषयमा भएको छलफललाई सही धारमा हिँडाउन र गुण नियन्त्रण गर्न सञ्चारकर्मीले पनि खासै दक्खल देखाएको पाइएन ।

तरिकाका दृष्टिले यस संवादमा तीनथरी व्यक्तिमा तीनैथरी प्रवृत्ति देखिएका छन् । एक जना पुरुष पालो आफैँ लिएर नजानेको कुरा पनि जाने जसरी भन्ने, दुई जना महिला सन्देहास्पद कुरालाई पनि हस्तक्षेप नगरी सुनिरहने, दुईमध्येकै एक महिलाले भूमिकाअनुरूपको योगदान पनि नगर्ने । अस्पष्ट कुरालाई नै स्पष्ट ठान्ने र लामो कुराको सिलसिला जोड्ने प्रवृत्तिका कारण समग्रमा यस संवादले मिश्रित तरिकाको प्रतिनिधित्व गर्दछ ।

सामाजिक तथा सांस्कृतिक व्यवहारको परिवर्तनका विषयमा गरिएको यो छलफलमा स्वाभाविक भाव तरंगको कमी छ । विचार मन्थनको अभाव छ । परम्परागत सोचको पहाडी खोँचमा व्यवहार परिवर्तनको हिउँ पगाल्न खोजिए पनि संवाद रह जसरी जमेको छ । विषयले दिनसक्ने स्वादको तिक्खरपना अन्तर्वार्ताका अंशहरूमा खासै भेटिँदैन । स्वादिला विषयमा स्वादविहीन संवाद हुनुका पछाडि पूर्व-तयारी गर्ने समयको कमीसहित कार्यक्रममा विषयअनुसारका गहकिला स्रोत व्यक्तिको पहिचान गर्न नसकिएको थाहा हुन्छ ।

यसको कारण खोतल्दा व्यवस्थापन पक्षले थोरै जनशक्तिबाट सकेसम्म बढी काम लिनुपर्ने स्टेसनको बाध्यता रहेको जनाएको छ भने रेडियो सगरमाथाका केही महिला सञ्चारकर्मीसित अनौपचारिक कुराकानी गर्दा पूर्व-तयारी गर्न पर्याप्त समय नहुने भएकाले कतिपय कार्यक्रममा कमजोरी देखिने बताएका छन् । पदका

आधारमा बोलाइएका कतिपय स्रोत व्यक्तिहरूले अन्कनाएर दिक्क बनाउनेमात्र होइन, उनीहरूसँग अन्तर्वार्ताको समय कसरी कटाउने भन्ने समस्या समेत भ्केलेका सञ्चारकर्मी पनि रेडियो सगरमाथामा छन् ।

धेरैजसो अन्तर्वार्ता सरल छन् । अनौपचारिक रूपमा सौहार्दपूर्ण कुराकानी गरेजस्ता मात्र, सहभागीहरू जसले जसरी जति बोले पनि हुने । एकले अर्कोसँग सामान्य अनुभव तथा विचार आदान-प्रदान गरे पुग्ने । सामुदायिक रेडियोमा यस्तो चल्छ पनि । मूल कुरा चाहिँ मूल प्रवाहका रेडियोहरू समाजका लागि पर्यवेक्षकमात्र हुन्छन् तर सामुदायिक रेडियोहरू समाज परिवर्तनको अभियानमा सोभ्कै सामेल हुनुपर्छ (मैनाली र अरू २०५८ : ३०) भन्ने बिर्सनु हुँदैन भन्ने नै हो ।

महिला र स्वास्थ्यका बारेमा सञ्चालित कार्यक्रम *सञ्जीवनी* मा नै भेटिएको अन्तर्वस्तु विश्लेषणको अर्धानो लैंगिक पक्षले संवादको सम्बन्धलाई निर्दिष्ट दिशामा डोऱ्याउन र लक्ष्यमा पुऱ्याउन सघाएको छैन । पायस खाएर सन्तान प्राप्त गर्ने अवैज्ञानिक पौराणिक कथ्यको प्रकारान्तर प्रभाव यस अभिव्यक्तिमा छ । यसले वैज्ञानिक युगमा पनि प्रजनन स्वास्थ्यका बारेमा सामन्ती पितृसत्तात्मक अन्धधारणा वा गलत मान्यताले रेडियो अन्तर्वार्तामा निरन्तरता पाएको पुष्टि गर्दछ । तरिकाका दृष्टिले पनि यसमा वैचारिक स्पष्टता र सङ्क्षिप्तताको अभाव छ ।

### ● *व्यक्तिगत रूपमै भएको छ लैंगिक हमला*

*सञ्चारकर्मी* जेष्ट नागरिकको मूल समस्या भन्या आर्थिक नै हो कि सामाजिक बढी छ ?

*स्रोत व्यक्ति १* (वाक्य नटुंगिँदै) हज् सब्भन्दा ठूलकुरो सामाजिक यौटा प्रतिष्टाको कुरो पनि छ ।

*सञ्चारकर्मी* अ यसो तुलना गरेर हेर्दा

*स्रोत व्यक्ति १* तुलना गरेर हेर्दा सामाजिक प्रतिष्टाको कुरा छ । अब याँ हामीले ऐले साँच्चै म पनि अब पब्लिक उसमा हेर्दाखेरि पनि स्स्याँ बुडा बुडाबुडी हेर्नुस् है ? उबीराका हुन्चन् त्यो बसमा, तर तीँ ज, जवान मान्छे टिनेजर्सका मान्छे बसिराखेका हुन्चन् ।

र हेर्नुस् न बुडाबुडी उभिराछन्, बुडाबुडीलाई छोड्दिनुस् भनेर भन्दाखेरि अँ होइन, हामी बसिराख्याछम् भन्चन् । हैन अब जस्तो ऐले सिट लेख्या छ नि, अपांगलाई सिट अरे महिलालाई सिट अरे यौउ भन्छ तर त्यो सप्पैमा सपांगै बसिराखेको हुन्छ ।

*सञ्चारकर्मी* भने शिक्षा चाइयो -

*स्रोत व्यक्ति १* शिक्षा, एजुकेसन सब्भन्दा कानुन बनार हुँदैन, इम्प्लिमेन्टेसनको पार्ट ओ दरो हुनुपरो । .... लु म बसम् न त्याँ भन्चु तर याँ त के हुन्च भने, कम्पलसरी, त्याँ लेख्या त छ, ... (बीचमा शब्द छुटाएर बोल्ने)

*सञ्चारकर्मी* भन्नाले ... जी, कुरो आयो सिभिक एजुकेसन, नागरिक शिक्षाकै

*स्रोत व्यक्ति २* नागरिक शिक्षाकै

*सञ्चारकर्मी* के छ ? तपाइँहरूको अब जेष्ठ नागरिक दिवस पनि मनाउँदै हुनुहुन्छ हैन ? विल पनि बनाइसक्नुभा छ

*स्रोत व्यक्ति २* ऐले ... म्याडमले भनेको अँ कुराहरूमा विमति अँ~ ~ गर्ने ठाउँ छैन । यो अँ एकदम ठीक कुरा हो । वास्तवमा जबसम्म नारी शिक्षा हुँदैन, नैतिक शिक्षा हुँदैन अथवा समाजमा ...

*स्रोत व्यक्ति १* महिलाको त त्यो महिलाको त साँच्चै भन्नुन्छ भनी (पालो आफैं लिएर) ट्वेन्टी फर्स्ट सेन्चुरीमा हामी पुगिराछौं तर मइलाहरूको ऐले पनि प्रोपर्टी राइटको उ छैन - हजुरआमालाई के काम भन्ने, त्यो कन्सेप्ट डेब्लप भको छ ।

*सञ्चारकर्मी* तपाईंलाई त भन्नुहुन्न घरमा ?

*स्रोत व्यक्ति १* हैन (हल्का हाँसो) । म आफू त जे अब कल्ले भन्ने र ब त ? हैन ? तेल्ले गर्दाखेरि । यो भन्ने अब मेरो त छोरी मात्त

छ । छोराले भन्ने कुरा आएन हैन ? त्यस्ले गर्दाखेरि .... सबभन्दा ल्याक अफ डिसिजन । उस्ले गर्दाखेरि चैं त्यो ऐले ड्यु टु डु टु इलटरेसी ।

*सञ्चारकर्मी* अशिक्षा ;

*स्रोत व्यक्ति १* अँ, कसरी यो कानुन के हो यो गर्मेन्टले के बनायो...

*सञ्चारकर्मी* भने पुरुष जेष्ठ नागरिकभन्दा महिला जेष्ठ नागरिक

*स्रोत व्यक्ति १* धेरै शोषित छन् नि ; उनरू पुरुष जेष्ठ नागरिकले त तै अलिकति सक्ने मान्छेले त अझै पनि अर्डर गरेर बसेका हुन्छन् तर स्वास्नीमान्छेका हकमा चैं उनीरूले तेसो इम्पोसिबल;

**(*सहभागिता,* २०६४ असोज ७ गते)**

***विश्लेषण***

प्रस्तुत संवादमा दुई पुरुष र एक महिला सहभागी छन् । स्रोत व्यक्ति कमला न्यौपानेमा पालो आफैं लिनेमात्र होइन, उछिन-पाछिन गरेर बोल्ने बानी पनि छ । हतारिने र एकैपटक धेरै कुरा गर्ने बानीले भन्न खोजेको कुरा हावादारी नभए पनि वाक्य पूरा नगर्ने भएकाले स्पष्ट हुँदैनन् । कुरा स्पष्ट गर्न सञ्चारकर्मी किरण पोखरेलले पूरक भूमिका निर्वाह गर्न खोजे पनि स्रोत व्यक्ति महिलाले नै उछिनेकी छन् । अर्का स्रोत व्यक्ति उपेन्द्र अधिकारीले महिलाकै भनाइलाई समर्थन गर्दै कुरा अगाडि बढाए पनि 'नारी शिक्षा' र नैतिक शिक्षा नभएसम्म ज्येष्ठ नागरिकका समस्या समाधान हुँदैनन् भन्ने आशयले दृष्टिकोणमा सहलियापन झल्काउँछ । कुरा स्पष्ट पार्दैन ।

स्रोत व्यक्ति पुरुषले स्रोत व्यक्ति महिलालाई 'म्याडम' शब्द प्रयोग गरेका छन् भने महिलाले 'सर' भनेकी छैनन् । यसबाट सम्बोधनको प्रयोगलाई लैंगिक नभएर व्यक्तिगत भन्न सकिन्छ । सञ्चारकर्मी पुरुषले भने स्रोत व्यक्ति महिलालाई वैयक्तिक रूपमै अपमान-बोध हुने गरी "तपाइँलाई त भन्नुहुन्न घरमा ?" भनेर पूरक प्रश्न गरेका छन् । यसको जवाफको क्रममा पहिले जोडतोडले बोलिरहेकी

समाजसेवी तथा परिपक्व महिलाको बोली नै लर्बरिएको छ । यसबाट स्रोत व्यक्ति महिलालाई पुरुषका तुलनामा व्यक्तिगत रूपमै हमला हुने गरी अनपेक्षित प्रश्न गर्ने परम्परागत पितृप्रवृत्ति सञ्चार वृत्तबाट अझै हटिसकेको छैन भन्ने पुष्टि हुन्छ । यसले अन्तर्वार्तामा होस् वा अन्य कुनै कार्यक्रममा, कसैको पनि मानमर्दन गर्नु हुँदैन र मान्छे-मान्छेबीच विभेद सिर्जना गर्नुहुँदैन (मैनाली र अरू २०५८ : ५०) भन्ने मान्यताको पालना नभएको देखाउँछ । यसलाई सामान्यीकरण गर्न भने सकिँदैन । स्टेसनको नीति पनि यस्तो छैन । यो लैंगिक अन्धताले जन्माएको वैयक्तिक कमजोरीमात्र हो ।

समग्रमा गुणस्तर, मात्रा र सम्बन्धको तालमेलका दृष्टिले संवाद ठीकै भए पनि तरिकामा प्रस्तुत संवाद नराम्ररी चुकेको छ । अपेक्षित वैचारिक र भाषिक सशक्तता नभए पनि सहभागिता र अन्तर्क्रियात्मकता भने यस संवादका सबल पक्ष हुन् ।

- ***पूरक प्रश्न पनि असफल भएपछि***

कार्यक्रम *सफलताको गोरेटो* को २०६४ असोज २५ गते प्रसारित अन्तर्वार्ता सुन्दा समयप्रति संवेदनशीलताको अभाव देखिन्छ । स्रोत व्यक्तिले आधा मिनेट बोलिसक्दा पनि भन्न खोजेको के हो- स्पष्ट बुझ्न सकिँदैन । रेडियोमा आधा मिनेट अल्मलिनु भनेको पनि श्रोताका लागि निकै लामो समय हो । सामान्यत: श्रोताको ध्यान दिने अवधि छोटो हुन्छ र उनीहरू एकैपटक धेरै कुरा ग्रहण गर्न सक्तैनन् ( मेयसनियर सन् १९८९ : २२) भन्ने मान्यता छ । सञ्चारकर्मीकै पूरक प्रश्नले पनि यसमा रहेको अस्पष्टताको मूल जडलाई पहिल्याउन सकेको छैन । कुन सिर्जना हो, कुन कुरामा रुचि हो, किन मिहिनेत गरिएको हो, श्रोता खुल्दुलीमै रहन बाध्य हुन्छ । अन्तमा "लख्खा त˜ साडीहरू बनाउँ भनेर साडीहरू बनाउन थालेँ अनि" भनिएको छ । सारी बनाउने कुरा आफैँमा सही जानकारी होइन । यसैले गुणस्तरका धरातलमा संवाद गतिलो उत्रँदैन । त्यसो भए स्नातक तहमा अध्ययनरत ती युवतीले गरेको कामचाहिँ के रहेछ त भन्ने प्रश्नको उत्तरका लागि अन्तर्वार्ताको पूरै अंश ध्यान दिएर सुन्नुपर्ने हुन्छ ।

संवादमा अङ्ग्रेजीको अत्यधिक र जनजिब्राको नेपाली शैलीको मिश्रण छ । स्रोत व्यक्ति जिसिका काफ्ले र सञ्चारकर्मी उर्वशी बस्न्यात– दुवै महिला हुन् । सञ्चारकर्मी प्रश्नकर्ताको भूमिकामा छन् भने स्रोत व्यक्ति युवा व्यवसायीका

रूपमा। सारीमा जरी भर्ने व्यवसाय गर्दै पढिरहेकी काठमाडौँवासी युवतीको संवाद गर्ने तरिकामा जानकारीको अंशभन्दा अन्तर्क्रियात्मक (रापोट) शैलीको मात्रा बढी पाइन्छ। कुरा गर्दै हाँस्ने बानी पनि छ। संवाद जीवन्त भए पनि प्रस्ट र छोटो हुन नसकेकाले अनावश्यक शङ्का जन्माएको छ र क्रमभंगताले ठाउँ पाएको छ।

### ● *भूमिकामै अलमल र गोलमाल*

कार्यक्रम *शैली* को २०६४ असोज १६ गते प्रसारित अन्तर्वार्ताको विश्लेषण गर्दा संवादको तरिका रेडियोका लागि उपयुक्त देखिँदैन। सञ्चारकर्मीको भूमिका श्रोताका जिज्ञासा र श्रोताले जान्नुपर्ने पक्षहरूको प्रतिनिधित्व गर्ने हुन्छ (मैनाली २०५९ : ८८)। श्रोताको मनमा उठ्न सक्ने प्रश्नको प्रतिनिधित्व सञ्चारकर्मीले गर्नुपर्छ भने श्रोताले बुझ्न सक्ने र सन्दर्भ मिल्ने कुरा मात्र स्रोत व्यक्तिले बताइदिनुपर्छ। स्रोत व्यक्ति दीपाश्री निरौला र सञ्चारकर्मी रूपा न्यौपाने- दुवै महिला एक-अर्काको भूमिकाका सम्बन्धमा अस्पष्ट छन्।

सञ्चारकर्मीले स्रोत व्यक्ति कलाकारलाई वाक्य टुङ्ग्याउनै नदिईकन हजुर-का-हजुर लगाएर निरन्तर हस्तक्षेप गरेको पाइन्छ। यसबाट स्रोत व्यक्ति आफूले भन्ने हो कि सञ्चारकर्मीकै 'हजुर' 'हजुर' मै मक्ख पर्नुपर्ने हो, अलमलमा परेको पाइन्छ। जवाफ छोटो छ तर त्यसको सिलसिलालाई सञ्चारकर्मीको अनावश्यक हस्तक्षेपले भंग गरिदिएको छ। स्रोत व्यक्तिसँग सञ्चारकर्मीको अनावश्यक तँछाड-मछाड पनि देखिन्छ। यसैले स्रोत व्यक्तिले अपूर्ण वाक्य प्रयोग गरेर समेत जवाफ फर्काएकी छन्। यसो गर्दा आउन सक्ने जति सूचना पनि आउन पाएको छैन। सञ्चारकर्मीले सोधेका प्रश्नको जवाफ गम्भीरतापूर्वक दिनुपर्छ भन्ने समेत मतलब नगरेर कतिपय ठाउँमा स्रोत व्यक्तिले हाँसेरै टारेको पनि देखिन्छ। यो सञ्चारकर्मीको असफलता मात्र होइन, श्रोताको अपमान पनि हो। अन्ततः रेडियो माध्यमको मात्र होइन, महत्वपूर्ण समयको पनि दुरुपयोग हो। संवादका क्रममा कसैले सुन्दैछ भन्ने ख्यालसमेत गरेको नपाइनु यस संवादको सबैभन्दा ठूलो कमजोरी हो। यस खालको संवाद *शैली* बाहेक अन्य कार्यक्रममा भेटिएको छैन।

### ● *प्रश्न नै अस्पष्ट र लम्बेतान*

कार्यक्रम 'युवा आवाज' बाट २०६४ असोज ८ गते प्रसारित अन्तर्वार्तामा चाहिँ सञ्चारकर्मी पुण्य भण्डारीले नै प्रस्ट र छोटो प्रश्न गर्न सकेका छैनन्। प्रश्न

गर्दा स्रोत व्यक्ति सञ्जु नेपाललाई “तपाईं, अब संस्थामा कार्यरत हुनुन्छ, अ मैला हुनुन्च, ... एकजना मैलाको हैसियतले” भन्दै पटक-पटक ‘महिला’ भनेर औँल्याएका छन् । तिनै सञ्चारकर्मीले एउटै अन्तर्वार्तामा सँगै सहभागी भएका अर्का स्रोत व्यक्ति कविन्द्र बुर्लाकोटीलाई भने अन्तर्वार्ताभरि कतै पनि ‘पुरुष’ भनेर औँल्याएको सुनिँदैन । यसबाट रेडियो सगरमाथामा स्रोत व्यक्तिका रूपमा निम्त्याइएका अतिथिहरूलाई लैंगिक रूपमा समान तरिकाले सम्बोधन र व्यवहार नगर्ने प्रवृत्तिका सञ्चारकर्मी पनि छन् भन्ने पुष्टि हुन्छ । अध्ययनमा समेटिएका सञ्चारकर्मी पुरुषमध्ये शतप्रतिशतमा कतै-न-कतै लैंगिक मर्यादाको संवेदनहीनता कायमै रहेको देखिनु अवश्य पनि खतरनाक संकेत हो ।

सो दिनको *युवाआवाज*को संवादका कतिपय अंशमा पुरुष सञ्चारकर्मी र महिला स्रोत व्यक्ति– दुवैको अभिव्यक्ति क्षमता अत्यन्त कमजोर छ । गुणस्तर, मात्रा र सम्बन्धलाई भाषिक कमजोरीले जितेको छ । फलतः संवाद छरितो, स्पष्ट, पत्यारिलो र सिलसिलाबद्ध हुन सकेको छैन । यसबाट संवादको तरिकाको आधारभूत गुण प्रदर्शन गर्ने क्षमतासमेत नभएकाले पनि रेडियोमा अन्तर्वार्ता लिने-दिने गर्दछन् भन्ने प्रमाणित हुन्छ । सहभागिताको विश्लेषण गर्दा संवाद गर्ने आधारभूत तरिकाको कमजोरी पनि लैंगिक नभएर वैयक्तिक प्रवृत्तिमात्र भएको पुष्टि हुन्छ ।

### ● *यौनको विषयमा बोल्दाबोल्दै ‘अम्’*

*युवा आवाज* कै २०६४ असोज २२ गते प्रसारित अन्तर्वार्तामा सञ्चारकर्मी र स्रोत व्यक्ति– दुवैको संवाद शैली भद्दा सुनिन्छ । उनीहरूले भन्न खोजेको कुरा अनुमानका भरमा बुझ्नुपर्ने हुन्छ । चाहिने कुरा छोटकरीमा भन्न सकेका छैनन् । किशोरावस्थाका बारेमा चर्चा गर्ने क्रममा एक ठाउँमा यौनको प्रसंग जोडिएको छ । सम्बन्धका दृष्टिले विषय-वस्तु बाहिर नपरे पनि संवादको गुणस्तर ओझेलमा परेको छ । “यस्मा अलिकिति परिवार, अ समाज, ह विद्यालय, हँ अँ र भनुम् न उच्च माध्यमिक विद्यालयहरूबाट नै अम् उनीहरूलाई याआम् बडी निग्रानी गरियो, निगरानीले मात्रै यो समस्याको समादान हुँदैन उनीहरूलाई यौनशिक्षा दिइयो अम् र अलिकेति अम् ।”

यसरी यौनशिक्षाको सम्बन्धमा जवाफ दिन खोज्ने स्रोत व्यक्ति सरला भट्टराईको वाक्य ‘अम्’ मा अस्वाभाविक तरिकाले टुंगिएको छ । सञ्चारकर्मी पुण्य

भण्डारीले वाक्य टुङ्ग्याउन मद्दत गरेपछि स्रोत व्यक्तिले सञ्चारकर्मीकै 'गराउनुपर्छ' भन्ने क्रियापद दोहोऱ्याएर छोडेको छ । संवाद स्पष्ट नभए पनि सिलसिला जोड्ने सक्रियता भने दुवैमा देखिन्छ । मात्राको कोणबाट संवाद असन्तुलित छैन तर पनि विषयले सहभागीलाई असहज तुल्याएको पाइन्छ । कतिपय उच्च शिक्षित युवामा अझै पनि यौनका विषयमा सामान्य चर्चा गर्ने बानीसमेत नभएको झझल्को यस संवादले दिन्छ । तरिकाका दृष्टिले यो संवाद सफल छैन ।

### ● *शिक्षा डबली को अनुकरणीय शिक्षा*

*शिक्षा डबली* को २०६४ असोज २ गते प्रसारित अन्तर्वार्तामा स्रोत व्यक्ति नूपुर भट्टाचार्यले पालो आफैँ लिएर आफ्ना कुरा राखेकी छन् । अङ्ग्रेजी शब्द तानतुन गरेर अंशतः मधेसी लवजमा बोले पनि उनले भन्न खोजेको कुरा प्रस्ट बुझिन्छ । बीच-बीचमा अर्का स्रोत व्यक्ति पुरुषले 'हजुर' भनेर सही थापेका छन् । स्रोत व्यक्ति गोरखबहादुर सिंहले पनि बीचमा पालो मागेर आफ्नो कुरा भन्न खोजेका छन् । दुवैको सक्रिय सहभागितामा संवाद अघि बढेको छ भने एकले अर्काप्रति आदरभाव दर्शाएका पनि छन् ।

बुद्धिजीवी विशेषज्ञहरूको यस संवादमा एकले अर्कालाई लैंगिक रूपले सकारात्मक र नकारात्मक- दुवै दृष्टिले हेरेको देखिँदैन । दुवै मानव हुन् र दुवै आ-आफ्ना क्षेत्रमा उत्तिकै जिम्मेवार र सशक्त छन् भन्ने देखिन्छ । छलफलका क्रममा विशेषज्ञ महिलाले स्पष्ट तरिकाले सिलसिलेवार शैलीमा एकदम नभनी नहुने कुरा मात्रै छोटकरीमा भनेर सरकारी पदाधिकारी पुरुषको चित्त बुझाइदिएकी छन् । यसैले तरिकाको दृष्टिले यसलाई उत्कृष्ट संवाद भन्न सकिन्छ । संवाद शैली उत्कृष्ट हुनुका पछाडि प्रकृतिजन्य लैंगिक कारण छ भन्ने चाहिँ होइन । यो व्यक्ति-व्यक्तिको आनीबानीमा भर पर्ने कुरा हो । लैंगिक सामान्यीकरणका प्राकृतिक र परम्परागत सोचबाट सिर्जिएका सूत्रलाई भाषा, भाव र संवाद शैलीको अप्राकृतिक र परिवर्तनशील सामाजिक परिदृश्यमा जस्ताको तस्तै लागू गर्नु उचित पनि हुँदैन । सो दिनको 'शिक्षा डबली' का कतिपय संवादका अंशबाट यस्तै बुझिन्छ ।

# संवाद शैलीको निष्कर्ष र सुझाव

रेडियो अन्तर्वार्तामा सहभागी सबै नेपाली महिलाको संवाद शैली स्पष्ट, सही, सङ्क्षिप्त र सिलसिलेवार हुन नसके पनि पर्याप्त मौलिक छ । गुणस्तर, मात्रा, सम्बन्ध र तरिकामध्ये कतै न कतै केही चुकेको देखिए पनि उनीहरूमध्ये केहीले गतिशील भाषिक र अर्धभाषिक अभिलक्षणहरूको जीवन्त र मौलिक प्रभाव दिएर श्रोतालाई अल्मल्याइराख्न सक्छन् ।

कतिपय महिला गुणस्तरीय परामर्श संवाद गर्छन् भने कतिपयले विषयगत क्षमतासमेत प्रदर्शन गर्न सकेका छैनन् । आधारभूत तथ्य र भाषा नै कमजोर भएकाले कतिपय संवाद गुणस्तरहीन, आशयविहीन, असन्तुलित र सन्देहास्पद छन् । लैङ्गिक चेतनाका कोणबाट प्रमाणहीन ठहरिने संवादले पनि गुणस्तरीय जसरी निर्वाध ठाउँ पाएका छन् । वैज्ञानिक तथ्य र लैङ्गिक चेतना दुवै कोणमा उम्दा ठहरिएकाबाहेक हावादारी संवादलाई दोहोरिन नदिनु राम्रो ।

मात्राका हिसाबले सन्तुलित संवादको कमी छ । नपढेका महिला बढी नै बोल्छन् र उनीहरू पढालेखा व्यक्तिभन्दा कमजोर भाषा बोल्छन् भन्ने सोचाइलाई गलत साबित गर्ने संवाद पनि छन् । रेडियो अन्तर्वार्तामा गुणस्तरीय र सन्तुलित मात्रामा संवाद गर्न शिक्षित, सहरिया र कुनै पदमा रहेको व्यक्ति नै हुनुपर्छ भन्ने सोचाइमा पुनर्विचारको खाँचो छ ।

सम्बन्ध र तरिकाका दृष्टिले आफ्नो भूमिकाको ख्याल नगर्ने र सही रूपमा विषय विश्लेषण गर्न नसक्नेले पनि रेडियोमा अन्तर्वार्ता लिने दिने गर्दछन् । सञ्चारकर्मी र स्रोत व्यक्ति दुवै महिला भएका संवादमा पनि गुणस्तर, मात्रा, सम्बन्ध र तरिकाका कोणबाट उनीहरूको प्रवृत्ति समान देखिएको छैन । स्टेसन व्यवस्थापनले जानेर गर्ने र गरेर जान्न खोज्ने सञ्चारकर्मीबीचको पेसागत सुझबुझ र दक्षताको खाडल भने सकेसम्म कम गरिदिनु पर्दछ ।

श्रोताको कोणबाट भूमिका, विषय र भाषामा ध्यान दिनसके पालो उछिनपाछिन गर्ने, हतारिने, एकैपटक धेरै कुरा गर्न खोज्ने, नाता कायम गर्ने, लैङ्गिक हमला गर्ने, हेप्ने, होच्याउने र घोचपेच गर्ने जस्ता गलत शैलीका संवादले स्वत: बिदा

पाउँछन् । महिलाले अनाहकमा सञ्चारकर्मी पुरुषबाट लिंगभेदी अभिव्यक्तिको तारो बन्नुपर्ने अवस्था तत्काल रोकिनुपर्छ । सुधारका लागि स्टेसन व्यवस्थापन, सञ्चारकर्मी र स्रोत व्यक्ति तयार हुनुपर्छ ।

कतिपय अन्तर्वार्तामा सञ्चारकर्मीको पूर्वतयारी, श्रवण सचेतता र सम्पादनको अभावले स्टेसनमा राम्ररी काम गर्ने र मिहिनेत गर्न मन लाग्ने वातावरण नभएकोतिर पनि सङ्केत गर्छ । महिलालाई यसो भन्छन् भन्दै अनावश्यक रूपमा मुखाले, चोथाले जस्ता शब्दसमेत प्रयोग गरी स्रोत व्यक्तिलाई त्यसैअनुरूप बोल्न उक्साउने सञ्चारकर्मीलाई रेडियो अन्तर्वार्ता शैली र लैंगिक सचेततासम्बन्धी तालिम दिएर निगरानी गर्नुपर्छ ।

सञ्चारकर्मीले उक्साए पनि लिंगभेदी शब्द प्रयोग गर्नबाट जोगिएर कुरा गर्नसक्ने सचेत स्रोत व्यक्तिहरूको पहिचान गरी उनीहरूको सहभागितालाई समय-समयमा निरन्तरता दिनसके सही सूचना र शैलीको प्रवाह भइरहन्छ । सरल, स्पष्ट, सङ्क्षिप्त र शुद्ध तरिकाले प्रश्न गर्न र सही रूपमा विषय विश्लेषण गर्न नसक्ने र अनुभवहीन अवस्थामा अन्तर्वार्तामा खटाउने र खटिने दुवै पक्षले कमजोरी घटाउँदै जानुपर्छ । प्रत्यक्षभन्दा रिकर्डेड अन्तर्वार्ता भए गुणस्तरहीन, लामा र गलत सन्देश भएका अन्तर्वार्ताका अंशलाई सम्पादन गरी प्रसारणयोग्य बनाउन सकिन्छ । सम्पादनलाई सेन्सरसिप बुझ्नु हुँदैन ।

स्टेसनको निर्देशिका र शैली निर्देशिकाको अध्ययन गरी अन्तर्वार्तामा पालना गर्ने र गराउने काम सञ्चारकर्मीको हो । स्टेसनले बेलाबेलामा शैली निर्देशिकाको परिमार्जन र तदनुरूप पालना भए/नभएबारेमा अनुगमन गर्नुपर्छ । सक्षम सञ्चारकर्मीको चयन र निरन्तर प्रोत्साहनमा ध्यान दिनुपर्छ ।

स्रोत व्यक्ति छान्नेदेखि विषय विश्लेषण गराउने सञ्चारकर्मीमा लैंगिक सचेतता र सतर्कता बढी नै हुनुपर्छ । महिला सशक्तीकरण र समानताका क्षेत्रमा काम गर्ने स्रोत व्यक्तिले संवाद शैलीलाई पूर्णत: लैंगिक समताबर्द्धक बनाउनसके सन्देश पनि सही जान्छ । 'म्यानपावर,' 'काम गर्ने कालु मकै खाने भालु' जस्ता शब्द र उखानलाई मुखमा नझुन्ड्याउनु नै राम्रो ।

# खुलाउनै पर्ने केही आधारभूत तथ्य

रेडियो अन्तर्वार्तामा सहभागी सञ्चारकर्मी र स्रोत व्यक्तिबीचको कुराकानीमा पाइने लैंगिक विशेषता वा भेदभावका अवशेषको समग्र रूप र सार पक्षको निरूपण गर्ने, भूमिकाअनुरूप व्यावसायिक, समतामूलक र मौलिक भाषा प्रयोग भए नभएको यकीन गर्ने र प्रसारण निर्देशिका विपरीत सामाजिक लिंगभेदी भाषिक अवशेषको पहिचान गर्ने मूल उद्देश्य लिएर यो खण्ड तयार भएको छ ।

यस खण्डमा लिइएका सम्पूर्ण उदाहरण सामग्रीहरू रेडियो सगरमाथाबाट २०६४ साल असोज र चैत महिनामा प्रसारित साप्ताहिक कार्यक्रममा भएका अन्तर्वार्ताका सान्दर्भिक अंश हुन् । यसका लागि महिला र पुरुष दुवै सहभागी भएका मिश्रित खालका अन्तर्वार्तालाई मात्र छानिएको छ । (हेर्नुहोस् बक्सा नं. ६)

बक्सा नं. ६ :

**उदारहणमा समाविष्ट कार्यक्रमहरूको विवरण**

| क्र.सं. | कार्यक्रमको नाम | प्रसारण मिति २०६४ साल | कार्यक्रमको कुल अवधि | सहभागी सङ्ख्या | |
|---|---|---|---|---|---|
| | | | | महिला | पुरुष |
| १ | सह-अस्तित्व | असोज ५ गते | ४५ मिनेट | १ | १ |
| २ | सह-अस्तित्व | चैत ९गते | ४५ मिनेट | १ | १ |
| ३ | सह-अस्तित्व | चैत १६ गते | ४५ मिनेट | १ | २ |
| ४ | सञ्जीवनी | असोज ३ गते | ३० मिनेट | २ | १ |
| ५ | सञ्जीवनी | असोज १० गते | ३० मिनेट | ३ | १ |
| ६ | सञ्जीवनी | चैत ७ गते | ३० मिनेट | १ | १ |
| ७ | सञ्जीवनी | चैत १४ गते | ३० मिनेट | १ | १ |
| ८ | सञ्जीवनी | चैत २१ गते | ३० मिनेट | १ | १ |
| ९ | सहभागिता | असोज ७ गते | ३० मिनेट | १ | २ |
| १० | शिक्षा डबली | असोज २ गते | ३० मिनेट | २ | २ |
| ११ | युवा आवाज | असोज ८ गते | ६० मिनेट | १ | २ |
| १२ | युवा आवाज | असोज १५ गते | ६० मिनेट | १ | १ |
| १३ | युवा आवाज | असोज २२ गते | ६० मिनेट | १ | २ |
| १४ | हाम्रो सरोकार | चैत १० गते | ३० मिनेट | ३ | १ |
| १५ | हाम्रो सरोकार | चैत १७ गते | ३० मिनेट | १ | १ |
| १६ | हाम्रो सरोकार | चैत २४ गते | ३० मिनेट | १ | १ |
| जम्मा | | | १० घण्टा १५ मिनेट | २२ | २१ |

नोट : सहभागीको वास्तविक सङ्ख्या ३३ भए पनि गणनामा ४३ पुगेको छ । एउटै सञ्चारकर्मी एकभन्दा बढी कार्यक्रममा सहभागी भएकाले कुल सहभागीको सङ्ख्या (कार्यक्रम सङ्ख्याको आधारमा) अधिक भएको हो । बक्सा नं. ३ मा यसलाई थप स्पष्ट पारिएको छ ।

यसरी संकलित सामग्रीमा जम्मा दुई महिलाले सातवटा अन्तर्वार्ता लिएका छन् भने चार पुरुषले नौवटा अन्तर्वार्ता लिएका छन् । कार्यक्रम संख्या र सञ्चारकर्मीको वास्तविक संख्या फरक छ । यसबाट सिर्जना हुनसक्ने सङ्ख्यात्मक भ्रमलाई हटाउन उनीहरूको नाम र कार्यक्रममा सहभागी भएको संख्या तालिकामा दिइएको छ ।(हेर्नुहोस् बक्सा नं. ७)

बक्सा नं. ७ :

**सञ्चारकर्मी र अन्तर्वार्ता सङ्ख्या**

| सहभागी सञ्चारकर्मी | अन्तर्वार्ता सङ्ख्या |
|---|---|
| १. किरण पोखरेल | २ |
| २. निमेष अधिकारी | २ |
| ३. दुर्गा कार्की | ३ |
| ४. भीम आत्रेय | २ |
| ५. शान्ता बस्नेत | ४ |
| ६. पुण्य भण्डारी | ३ |
| जम्मा | १६ |

समाजभाषिक कोणबाट अन्तर्विषयक अनुशासनमा रही वर्णनात्मक अध्ययन पद्धति अपनाइएको यस खण्डमा लैङ्गिक शैलीको विशेषता प्रस्तुत छ । रेडियो पत्रकारिताको सिद्धान्त, पद्धति, शैली र संहिताले लैंगिक शैलीको विश्लेषणलाई सीमाबद्ध गरेको छ । यसमा महिला महिलामात्र सहभागी भएका र पुरुष पुरुषमात्र सहभागी भएका कुनै पनि अन्तर्वार्ता समाविष्ट छैनन् । कुल सवा दस घण्टाको अन्तर्वार्ता सामग्री भएका जम्मा छवटा अन्तर्वार्ता कार्यक्रमका १६ वटा अङ्कमात्र अध्ययनको घेरामा परेका छन् । स्टुडियो, स्थलगत र टेलिफोन तीनै खालका अन्तर्वार्ताका सान्दर्भिक अंश यसमा मिसिएका छन् ।

भाषा र संवाद खण्डमा जस्तै यसमा पनि रेडियो स्टेसनको जनशक्ति व्यवस्थापन, सामान्य प्रशासन, अन्तर्वार्तामा सहभागिता सन्तुलन, आर्थिक स्रोत, प्राविधिक साधन जस्ता भौतिक पक्षको कुरा छैन । प्रसङ्ग मिल्ने ठाउँमा विषयवस्तुको मात्र चर्चा गरिएको छ ।

यस खण्डमा रेडियो अन्तर्वार्तामा सहभागी नेपाली महिला र महिलासँग भएका कुराकानीमा भेटिएका लैंगिक शैलीको वस्तुगत अध्ययन र विश्लेषण गरिएको छ । यसमा मूलतः अल्पतम प्रत्युत्तर, प्रश्नात्मक अभिव्यक्ति, पालो लिने दिने प्रवृत्ति, कुराकानीको विषय बदल्ने बानी, आत्मप्रकाशन, मौखिक आक्रमण, श्रवण र सचेतता, प्रभुत्व र पराधीनता, शिष्टता, मिलनसारिता र कोमलता, प्रशंसापरक भाषाजस्ता समाज भाषाविज्ञानका दस लैङ्गिक सूत्रका आधारमा उदाहरणसहित व्याख्या र विश्लेषण प्रस्तुत छ ।

# थोरै बोले पनि पुग्छ कतै कतै त

नेपाली भाषामा ए.., अँ, हँ, अहँ, नाईं जस्ता अर्धभाषिक स्वरूपको उच्चारण र शारीरिक हाउभाउ प्रयोग गरेर अल्पतम प्रत्युत्तर दिन सकिन्छ । यस्तै, कतिपय प्रश्न र प्रसंगमा हो वा होइन, पक्कै हो वा कहाँ हुनु ? जस्ता क्रियापद र क्रियापदावली प्रयोग गरेर पनि बोलीचाली गर्न र व्यवहार चलाउन सकिन्छ । कतिपय रेडियो अन्तर्वार्तामा कसैले बढी बोलिरहने, कसैले चाहिनेमात्रै बोल्ने र कतिपयले चाहिनेभन्दा कम बोलेर टार्ने गरेको पनि सुनिन्छ । यस शीर्षकअन्तर्गत चाहिँ सबैभन्दा कम बोलेर अन्तर्वार्तामा सहभागी हुने प्रवृत्तिको कारण, मात्रा, सीमा र अभिलक्षणका आधारमा लैंगिक पक्षको अध्ययन गरिएको छ ।

अध्ययनमा समेटिएका कुल १६ वटा अन्तर्वार्तामा सहभागी ३३ जनाको रेडियोबाट प्रसारित बोलीचालीलाई विश्लेषण गर्दा अधिकांश अन्तर्वार्तामा कतै न कतै, कसै न कसैले अल्पतम प्रत्युत्तर र अल्पतम प्रतिप्रश्नमध्ये केही न केही स्वरूपको प्रयोग गरेको पाइन्छ । यसलाई कुनै एउटा लैंगिक पृष्ठभूमिको व्यक्तिले मात्र प्रयोग गर्ने वा बढी प्रयोग गर्ने अभिव्यक्ति स्वरूप र शैलीका रूपमा लिन सकिँदैन । रेडियो सगरमाथाबाट प्रसारित अन्तर्वार्तामा सहभागीहरूको प्रवृत्तिलाई केलाउँदा यस्तो अभिव्यक्ति महिला, पुरुष र अन्य व्यक्तिको साझा अभिव्यक्ति हो भन्ने आधार प्रशस्त भेटिन्छ । सबैका लागि यो अनिवार्य अभिव्यक्ति भने नहुन पनि सक्छ ।

## ● प्रतिप्रश्न पनि थोरै

समग्रमा अल्पतम प्रत्युत्तरको प्रयोग धेरै कम र अत्यन्त छोटो समयका लागि कुनै खास प्रसंगमा मात्र भएको भेटिएको छ । अति कम बोल्ने, प्रस्ट नबोल्ने र बोल्दै नबोल्नेहरू रेडियो अन्तर्वार्ताका लागि उपयुक्त नठहरिने भएकाले पनि यस्तो प्रयोग कम भेटिएको हुनसक्छ । रेडियो अन्तर्वार्तामा जे जतिको सहभागिता हुन्छ, उनीहरू कम्तीमा सामान्य मात्रामा बोलीचाली गर्नेमध्येकै व्यक्तिको समूहमा पर्दछन् । प्रश्नकर्ता सञ्चारकर्मी हुन् या उत्तरदाता स्रोत व्यक्ति, यी दुवैको भूमिकामा कतै न कतै, कुनै न कुनै बेला अल्पतम अभिव्यक्तिको सम्भावना भने रहन्छ । यही सम्भावनाको खोजीका क्रममा देखिएको यथार्थचाहिँ के हो भने रेडियो अन्तर्वार्तामा पनि अल्पतम प्रत्युत्तरमात्र होइन, अल्पतम प्रतिप्रश्न पनि प्रयोग हुने गरेको छ । यस्तो

प्रयोग *हाम्रो सरोकार*का स्रोत व्यक्ति सङ्ग्राम लामा र *सह अस्तित्व*की स्रोत व्यक्ति भावना भट्टले प्रस्टताका लागि गरेको पाइएको छ ।

- **सहज सङ्केत**

रेडियो अन्तर्वार्तामा धेरैजसो अल्पतम प्रत्युत्तर श्रवण सचेतता दर्शाउन र आफूसँग बोलिरहेको व्यक्तिलाई सहज बनाउनका लागि सहज सङ्केतका रूपमा प्रयोग गरिएको पाइएको छ । यस्तो प्रवृत्ति महिला र पुरुष, सञ्चारकर्मी र स्रोत व्यक्ति, एउटा स्रोत व्यक्ति र अर्को स्रोत व्यक्ति दुवै खालको लैंगिक र भूमिकापरक पृष्ठभूमि भएका सहभागीमा पाइएको छ ।

उदाहरणलाई अघि सारेर कुरा गर्ने हो भने *हाम्रो सरोकार* कार्यक्रममा सहभागी स्रोत व्यक्ति नरहरि आचार्यमा सामान्यत: अल्पतम प्रत्युत्तरको प्रवृत्ति पाइँदैन । आचार्यले सञ्चारकर्मी शान्ता बस्नेतको प्रश्न आइरहँदा बीचमा लो भ्वाइसमा समानान्तर रूपले अँ, अँ र हँ, हँ गरेर भाषेतर अभिव्यक्ति प्रकट गरेको तारात्तै सुनिन्छ । त्यो प्रत्युत्तर र प्रतिपश्न दुवै होइन । त्यसबाट सञ्चारकर्मीको प्रश्नलाई स्रोत व्यक्तिले ध्यानपूर्वक सुनिरहेको भन्ने सङ्केत श्रोताले पाउँछ । यस्तै खालको प्रवृत्ति धनकुमारी सुनार, डा. सुमित्रा मानन्धर, शम्भुजन लिम्बू र सङ्ग्राम लामासितको कुराकानीका क्रममा पनि झल्किन्छ । सङ्ग्राम लामामा अल्पतम प्रत्युत्तरको लक्षण देखिँदैन तर अल्पतम प्रतिप्रश्नको प्रवृत्ति भेटिन्छ, त्यो पनि प्रस्टताका लागि ।

*हाम्रो सरोकार* कार्यक्रमका तीन अङ्कमा सहभागी पाँचजना स्रोत व्यक्तिमा तीन पुरुष र दुई महिला छन् । सञ्चारकर्मी महिलासमेत गरी कुल छजनाको अन्तर्वार्ताको विश्लेषण गर्दा अल्पतम प्रत्युत्तरको प्रवृत्ति लैंगिक नभएर मानवीयमात्र हो भन्ने पुष्टि हुन्छ । धनकुमारी सुनार र डा. सुमित्रा मानन्धरमा पनि शान्ताले प्रश्न गरिरहँदा बीच-बीचमा अँ, अँ र हँ, हँ गरेर नरहरि आचार्यमा जस्तै अल्पतम भाषेतर अभिव्यक्ति प्रकट गर्ने बानी झल्किन्छ । त्यो पनि प्रत्युत्तरका रूपमा होइन, सुन्दैछु भनेर प्रश्नकर्तालाई सहज तुल्याउनका लागि मात्र ।

*सह-अस्तित्व* कार्यक्रममा लिइएका अन्तर्वार्ताको कुरा गर्ने हो भने बीचमा कतै कतै *होइन ?* भन्ने सञ्चारकर्मी किरण पोखरेलको प्रश्नमा स्रोत व्यक्ति अष्टलक्ष्मी

शाक्यले *हो* भनेर तत्काल अल्पतम प्रत्युतर दिएको पाइन्छ । त्यसपछिको मौनतालाई अष्टलक्ष्मीको थप जवाफले नै हटाइदिएको छ । यस्तै, भावना भट्टमा एक तहसम्म अल्पतम प्रत्युत्तर दिने बानी देखिन्छ । निमेष अधिकारीको प्रश्नलाई *हजुर* मात्रै भनेर जवाफ दिएपछि निमेषले कुरा थपेर प्रश्न गर्छन् अनि मात्र भावनाको लामो जवाफ आउँछ ।

*सहअस्तित्वकै* अर्को अन्तर्वार्ता सुन्दा स्रोत व्यक्ति अणबहादुर खड्का र ललिता सिजापति दुवैमा कतै पनि अल्पतम प्रत्युत्तरले काम चलाउने बानी पाइँदैन । निमेषको प्रश्न आएपछि जसलाई लक्षित गरिएको हो, उसले आफ्ना कुरा खरर आफ्नै तरिकाले राखेको पाइन्छ । खड्का र सिजापति दुवै शिक्षण पेसामा संलग्न भए पनि संविधानसभा निर्वाचनका बेला स्वयंसेवीका रूपमा निकै खटेर काम गरेको अनुभव अन्तर्वार्ताका क्रममा सुनाउँछन् । आफूलाई लागेका कुरा भन्ने क्रममा खड्काभन्दा सिजापति बढी यथार्थवादी देखापर्छिन् । जे होस्, अल्पतम प्रत्युत्तरको प्रवृत्ति लैंगिक र पेसागतमात्र होइन भन्ने कुरा नरहरि आचार्यदेखि ललिता सिजापतिसम्मका अन्तर्वार्ताका उदाहरणलाई केलाउँदा पनि प्रस्ट हुन्छ ।

**● असीमित घेरा**

अल्पतम प्रत्युत्तरको प्रवृत्ति कुनै वर्ग, पेसा, लिंग, भूगोल, भूमिका, उमेर, जाति आदि कुनै पनि सामाजिक वृत्तमा बाँधिएको पाइँदैन । सञ्जीवनी कार्यक्रमका पाँच अङ्कमा सहभागी आठजना स्रोत व्यक्ति र दुईजना सञ्चारकर्मीबीचको एकल र समूह अन्तर्वार्ता सुन्दा पनि यसको पुष्टि हुन्छ ।

यो प्रवृत्तिको प्रयोग सबैमा समान रूपमा पनि फेला पर्दैन । स्रोत व्यक्ति शर्मिला कार्कीले सञ्चारकर्मी भीम आत्रेयको प्रश्नमा स्पष्ट हुनका लागि अल्पतम प्रतिप्रश्न गरेको र एकाध ठाउँमा *हजुर, हो* भनेर अल्पतम प्रत्युत्तर दिएको पाइन्छ । सिंगो अन्तर्वार्तामा सोधिएका कुल प्रश्नमध्ये अन्तिमको एउटा प्रश्नका लागि मात्र शर्मिलाले *धेरै नै । धेरै नै । संघर्ष गर्नुपर्छ ।* भनेर क्रिया विशेषण र क्रिया पदावलीमात्र प्रयोग गरी जवाफ दिएको पनि पाइन्छ । यस्तै, सञ्चारकर्मी दुर्गा कार्कीको प्रश्नमा *प्रतिनिधित्वको भएन* भन्ने अभिव्यक्ति आउँदा स्रोत व्यक्ति उदय नेपाली श्रेष्ठले *हजुर* मात्र भनेका छन् भने बेला-बेलामा अल्पतम प्रत्युत्तरको पनि सहारा लिएका छन् ।

स्रोत व्यक्ति दुर्गा सोब र भीम आत्रेयको एकल अन्तर्वार्तामा दुर्गाले भने कतै पनि अल्पतम प्रत्युत्तर दिएको पाइँदैन । घरको सहकार्यका विषयमा स्रोत व्यक्तिहरू कुसुम ज्ञवाली र भावना पोखरेलसित दुर्गा कार्कीले गरेको समूह अन्तर्वार्तामा भावनामा कम बोल्ने र कुसुममा लामो कुरा गर्ने बानी देखिन्छ । यी दम्पतीमध्ये भावनामा मात्र यदाकदा अल्पतम प्रत्युत्तरको प्रवृत्ति भेटिन्छ । पदावलीमा मात्र वा छोटो वाक्यमा सीमित रहेर जवाफ दिने त्यो प्रवृत्ति जागरण नेपालकी शर्मिला कार्कीसँग मिल्दोजुल्दो छ ।

यस्तै, दुर्गा कार्कीले नै स्रोत व्यक्तिहरू अनन्तकुमारी तामाङ, मनोज तामाङ र सम्झना तामाङसँग पर्यटन व्यवसायका विषयमा गरेको सामूहिक कुराकानी सुन्दा सुरुमा मनोज र सम्झनाले लो भ्वाइसमा अल्पतम प्रत्युत्तर दिएको पाइन्छ भने कुरा गर्दै गएपछि उनीहरू खुल्दै गएर लामो कुरा गर्न थालेका हुन्छन् । अनन्तकुमारीमा अल्पतम प्रत्युत्तर दिने बानी देखिँदैन । यसरी सञ्जीवनी कार्यक्रममा लिइएका अन्तर्वार्ताको पनि समग्र अध्ययनबाट निस्कने निचोड के हो भने अल्पतम प्रत्युत्तर लैंगिक विशेषता नभएर वैयक्तिक गुणमात्र हो । कुनै पेसा, जाति, भूगोल, संस्कृति, शिक्षा, भूमिका, माध्यम, उमेर, अवस्था, मनोदशा, आर्थिक स्थिति आदिले पनि यो प्रवृत्तिलाई लैंगिक वा अन्य कुनै समूहको घेरामा मात्र बाँध्न सक्दैन भन्ने कुरा अध्ययनमा परेका अन्तर्वार्ताका विविध तथ्यले पुष्टि गर्दछन् ।

### ● अति नै कम प्रयोग

रेडियो अन्तर्वार्तामा अल्पतम प्रत्युत्तर शैलीको प्रयोग अति कममात्र हुने गर्दछ । कार्यक्रम *सहभागिता* र *शिक्षा डबली*मा लिइएका समूह अन्तर्वार्ताको कुरा गर्ने हो भने उपेन्द्र अधिकारी र कमला न्यौपानेसित किरण नेपालले गरेको कुराकानी होस् वा नूपुर भट्टाचार्य, गोरखबहादुर सिंह र लवप्रसाद त्रिपाठीसँग शान्ता बस्नेतले गरेको कुराकानी, अल्पतम प्रत्युत्तरको प्रवृत्ति समान भेटिँदैन । उपेन्द्र र कमलामात्र होइन, नूपुर, गोरखबहादुर र लवप्रसाद कसैमा पनि अल्पतम प्रत्युत्तर दिने अभिलक्षण अन्तर्वार्तामा पाइँदैन । सबैमा कतै न कतै *अँ, अँ* र *हजुर, हजुर* भन्ने खालको अल्पतम अर्धभाषिक अभिव्यक्तिपरक सक्रियता भने झल्किन्छ ।

कार्यक्रम *सहभागिता*मा जेष्ठ नागरिक र *शिक्षा डबली*मा समाहित शिक्षाका बारेमा भएका समूह छलफलमा तीन महिला र चार पुरुष सहभागी छन् ।

त्यसमा महिला र पुरुष दुवैमध्ये कसैले अल्पतम प्रत्युत्तर दिने गरेका छन् भने कसैले नदिने गरेको पनि पाइन्छ। यसबाट पनि नेपाली भाषामा अल्पतम प्रत्युत्तरलाई लैंगिक विशेषताका रूपमा ग्रहण गर्न सकिदैन भन्ने कुरा पुष्टि गर्नलाई बल मिल्छ ।

● **वैयक्तिक अभिलक्षणमात्र**

अल्पतम प्रत्युत्तरको प्रयोग वैयक्तिक अभिलक्षणमात्र हो । युवा आवाज कार्यक्रमका तीन अङ्कमा सहभागी छ जनामध्ये तीन महिला र तीन पुरुषको अभिव्यक्तिलाई ध्यान दिएर सुन्ने हो भने पनि यसको पुष्टि हुन्छ । तीनै महिला स्रोत व्यक्तिको भूमिकामा छन् भने तीनमध्ये एक पुरुष सञ्चारकर्मीका रूपमा तीनवटै कार्यक्रममा सहभागी छन्। नेपाल युवा संस्था (आयोन) का सचिव कविन्द्र बुर्लाकोटी, आयोनकै कार्यक्रम अधिकृत सञ्जु नेपाल, आदिवासी जनजाति महासंघमा कार्यरत म्याग्दीकी लालकुमारी रोका मगर, सहरका युवाबारे चासो राख्ने चितवन भरतपुरकी सरला भट्टराई र ग्रामीण युवाका बारेमा जानकारी भएका रुकुम खाराका अमरबहादुर ओलीमध्ये कसैको बोलीमा पनि अल्पतम प्रत्युत्तरको प्रवृत्ति पाइएको छैन ।

सरलाको तुलनामा अमरको बानी छोटो जवाफ दिने खालको चाहिँ छ । यसबाट प्रस्ट हुने सङ्केत के हो भने नेपाली युवामा अल्पतम प्रत्युत्तरको प्रवृत्ति ह्रासोन्मुख छ । उनीहरू रेडियोमा कुराकानी गर्दा यस्तो अभिलक्षण प्रयोग गर्न चाहँदैनन् । यो विशेषता महिलामात्र होइन, पुरुषमा पनि उत्तिकै लागू हुन्छ । विविधताले भरिएको समतातिर उन्मुख नेपाली समाजमा समाजभाषालाई प्रभाव पार्ने कुनै पनि परम्परागत मानक तत्वले लैंगिक विभाजनका भाषिक अभिलक्षणहरूलाई निरन्तरता दिन अनकनाइरहेको अनुभव गर्न सकिन्छ । कुनै लैंगिक समूहको मात्र अभिव्यक्ति शैलीका रूपमा स्थापित अभिलक्षणहरू लोपोन्मुख हुने या तिनको रूपान्तरण भएर सनातनीकरण हुने भाषिक प्रक्रिया जारी रहन्छ। रेडियो अन्तर्वार्तामा सहभागी युवाको अल्पतम प्रत्युत्तरको सवालमा पनि यो क्रम जारी रहेको सङ्केत देखिन्छ । नेपाली भाषाका सन्दर्भमा अहिले अल्पतम प्रत्युत्तरको समग्र प्रवृत्ति लैंगिक नभएर नितान्त वैयक्तिक अभिव्यक्तिको अभिलक्षणमात्र भएको प्रमाणित भएको छ ।

# कति छन् कति उत्तर नखोज्ने प्रश्न पनि

अभिव्यक्तिलाई प्रश्नात्मक बनाउनु भनेको उत्तरको अपेक्षा गर्नुमात्र होइन, जीवन्तता प्रदान गर्नु पनि हो । कतिपय प्रसंगमा यसले लाक्षणिकता पनि थप्न सक्छ । यसैले अन्तर्वार्ताका क्रममा स्रोत व्यक्तिले दिने जवाफमा पनि प्रश्नात्मक अभिव्यक्तिको प्रयोग भए नभएको केलाउन सक्ने प्रशस्त ठाउँ रहन्छ । उत्तरको अपेक्षा नै नगरी प्रयोग गरिने प्रश्नात्मक अभिव्यक्तिले अन्तर्वार्तामा जीवन्तता सँगसँगै अन्तर्क्रियात्मकता पनि थप्दछ ।

कुराकानीका क्रममा प्रयोग हुने *ए हो ?, हो र ?, हैन त ?, है ?, हगि ?, हैन कि क्या हो ?, होला र भन्या ?, कहाँ हुनु नि ?, किन नहुनु त नि ?* भन्ने खालका प्रश्नात्मक अभिव्यक्ति पुरुषले भन्दा महिलाले बढी प्रयोग गर्ने परम्परागत विश्वास छ । पश्चिमा मुलुकमा यस्तो अभिव्यक्तिको सहाराले महिलामा रहेको सहयोगात्मक धारणा प्रकट हुने तर्क पनि गरिएको छ ।

नेपाली भाषामा रेडियो अन्तर्वार्ताको साङ्केतिक सन्दर्भलाई लिएर भन्नुपर्दा यो अभिव्यक्ति महिलामा मात्र सीमित छैन । महिला पुरुष दुवैले प्रश्न गर्दा मात्र होइन, आफ्ना कुरा भन्ने वा जवाफ दिने बेलामा समेत विभिन्न शैलीमा मौलिक तरिकाले प्रश्नात्मक अभिव्यक्तिको सहारा लिएका पाइएको छ । त्यसमा पनि पेसागत प्रभाव, अन्तर्क्रियात्मक, प्रतिप्रश्न र प्रश्नभित्र पनि प्रश्नात्मक शैलीको प्रयोग स्पष्टतः खुट्याउन सकिन्छ ।

**● पेसागत प्रभाव शैली**

अन्तर्वार्तामा सहभागीहरूको बोलीलाई केलाउँदा कतिपयमा प्रवचन, भाषण, व्याख्यान र बहस जस्ता पेसागत कथनशैलीमा प्रश्नात्मक अभिव्यक्ति थप्ने गरेको पनि पाइएको छ । *हाम्रो सरोकार* कार्यक्रमका तीनवटा अन्तर्वार्तामा सहभागी छ जनामध्ये तीन पुरुषमा यस्तो शैली देखिएको छ । प्रश्न आएपछि प्रश्नकै पदावलीलाई समातेर जवाफ दिने बानी नरहरि आचार्यमा छ भने शब्दलाई समातेर जवाफ दिने बानी सङ्ग्राम लामामा छ । जे होस्, पेसागत प्रभावका दृष्टिले महिलाको अभिव्यक्तिलाई केलाउँदा कार्यक्रम *सहअस्तित्व*मा स्रोत व्यक्तिका

रूपमा सहभागी अष्टलक्ष्मी शाक्यमा यस खालको अभिव्यक्ति भेटिन्छ । उदाहरणका लागि शाक्यको भनाइका केही अंश :

> *हामीले भनेको के भन्दाखेरी अब मइलाहरू पइलो कुरा त के प्रस्ट हुनुपर्‍यो भने पार्टीहरूमा मइलाहरू पनि छन् है उम्मेदवार हुनसक्ने, ... अब भूगोलमा पनि समस्या के देखिराछु मैले भन्दाखेरी..... राजनीतिक समस्याले गर्दाखेरी नि, है ? यी तमाम कुराहरू पनि गौन भैराखेको छ के अब त । ... मेरो एक्दम प्रस्ट धारणा के छ भन्दाखेरी पैलो कुरा .... अनि यो जिम्मेवारीलाई चैं हामीले इमान्दारीपूर्वक पूरा गर्नुपर्छ कि पर्दैन ? मेरो प्रश्न ।*

नरहरि आचार्यको भनाइका केही अंश :

> *समावेशीकरण त अब के भयो भनेदेखिन् त्योभन्दा धेरै अगाडि गयो टाइम । किन ? मुलुक पनि धेरै अगाडि गयो ।.... हँ थानीय सरकारको अदिकार कति हुनी, गाउँ सरकारको र हँ तेसपछाडि प्रादेशिक सरकारका अधिकारहरू के के हुने ? र तेसपछाडि हँ अनि मात्रै बाँकी रहेका केही हँ विषयहरू सङ्घीय सरकार अर्थात् केन्द्रीय सरकारको अधिकार हुने भन्ने ढंगले हँ यौटा अधिकारको बाँडफाँड पनि गरौं र अनि .... संरचनागत परिवर्तनकै दिशामा यो गयो र यो एक प्रकारले पुनर्संरचनाको घोषणापत्र पनि बन्या छ ।*

शम्भुजन लिम्बूको भनाइका केही अंश :

> *.... के हुँदा छुवाछूत हुने, तेल्लाई कति दण्ड हुने, त्योबाड कति सजाय गराउने भन्ने कुरो चैं त्यो फेरि ऐनमा हुनुपर्ने हुन्च । ... तर ऐलेसम्म कति कार्यान्वयनमा भयो त ? कति एप्लाईहरू उजुरी भयो*

*त ? काँ काँ कार्यान्वयन भो, कति सजाय भयो भन्ने कुरो तपाइँ रेयर्ली मात्रै पाउनुहुन्च । ... तपाइँकै सवाल, कानुन र बेवहारमा किन फरक पऱ्यो भन्ने सवालमा आऊँ । अब रह्यो बेवहारमा किन कार्यान्वयन हुँदैन ? भन्दाखेरी तपैंको एक्जुकिसन गर्ने कमिटीमा तपैंको कानुन कार्यान्वयन गर्ने क्षेत्रमा, कानुनलाई चैं लागू गर्नुपर्छ भन्नी विवादमा चैं जबसम्म त्यो समुदाय, ... उल्ले सोचेबमोजिम कार्यान्वयन नहुने रैछ भन्ने कुरो चैं हाम्रो प्राक्टिसले पनि देखाइसक्या छ ।*

यस्तै, सङ्ग्राम लामाको भनाइका केही अंश :

*यो घोषणापत्रकै कुरा गर्नपर्दा, माओवादीको चैं कुरा गर्नपर्दाखेरि अ, उस्ले चैं के भन्या छ भन्दाखेरी, ...यौडा चैं के छ भन्दाखेरी यो जातीय अहंकार, ... अर्को चैं उस्ले अ यो क्षेत्रीय विभेदको कुरालाई उल्ले उठाएको छ । जस्तो अब यो क्षेत्रीय विवाद भन्नाले उसले के इंगित गर्न खोजे जस्तो लाक्च भन्दाखेरी ...जसले चैं, हिमाली भाग भन्नोस्, हैन ? तेस्तै अब यो पच्छिमको चैं सेती-महाकाली, भेरी कर्णालीदेखि लिएर सबै क्षेत्रमा चैं यो काठमान्डू केन्द्रित सोचले, ...*

उक्त चारै जनाको प्रश्नात्मक अभिव्यक्तिमा पेसागत प्रभाव भेट्न सकिन्छ । यसखालको अभिव्यक्तिले प्रश्नकर्ताको ध्यान तानिरहन र कथनलाई स्पष्ट पार्न मद्दत पुऱ्याएका छन् । रेडियो अन्तर्वार्ताको सन्दर्भमा सहभागी सञ्चारकर्मीमात्र होइन, श्रोतालाई पनि केही हदसम्म आकर्षित गर्न यस खालको अभिव्यक्तिले सघाउने विश्वास गर्न सकिन्छ । यस खालको अभिव्यक्ति पुरुष स्रोत व्यक्तिले बढी प्रयोग गरेको पाइएको छ ।

## ● अन्तर्क्रियात्मक शैली

अन्तर्वार्ताका क्रममा आफ्नो भनाइलाई अन्तर्क्रियात्मकता प्रदान गर्नमा महिला अगाडि देखिएका छन् । *हैन ?* र *हगि ?* जस्ता पर्यायवाची प्रश्नपरक क्रियापद प्रयोग गर्ने तर उत्तरको अपेक्षा नै नगरी भनाइलाई निरन्तरता दिइरहने शैली अधिकांश अन्तर्वार्तामा प्रयोग भएको छ । १६ वटा अन्तर्वार्तामा सहभागी १७ महिलामध्ये बहुसंख्यकले कतै न कतै यो शैलीको प्रयोग गरेका छन् भने केही पुरुषले पनि महिलाले जसरी नै आफ्नो भनाइलाई अन्तर्क्रियात्मक तथा जीवन्त बनाउने प्रयास गरेका पाइएको छ ।

*हाम्रो सरोकार* कार्यक्रममा सहभागी धनकुमारी सुनारले प्रशस्त, डा. सुमित्रा मानन्धरले सामान्य, शम्भुजन लिम्बू र सङ्ग्राम लामाले ज्यादै कम मात्रामा प्रश्नसहितको अन्तर्क्रियात्मक अभिलक्षण प्रयोग गरेको पाइन्छ । कार्यक्रम *सहअस्तित्व*मा सहभागी भावना भट्ट र ललिता सिजापतिमा सामान्य र अष्टलक्ष्मी शाक्यमा नगण्य प्रश्नात्मक अभिव्यक्तिसहित अन्तर्क्रियात्मक शैली भेटिन्छ भने अणबहादुर खड्काको बोलीमा यस्तो प्रवृत्ति छैन ।

*सञ्जीवनी*मा सहभागी शर्मिला कार्की, अनन्तकुमारी तामाङ र सम्झना तामाङले *हैन ?* भन्ने प्रश्नात्मक अभिव्यक्तिको पर्याप्त प्रयोग गरेको पाइन्छ भने उदय नेपाली श्रेष्ठ, दुर्गा सोब, मनोज तामाङ, भावना पोखरेल र कुसुम ज्ञवालीमा प्रश्नात्मक अभिव्यक्तिमा जवाफ दिने बानी अत्यन्तै कम वा शून्यप्राय: भेटिन्छ ।

कार्यक्रम *युवा आवाज*का स्रोत व्यक्ति कविन्द्र बुर्लाकोटी र सञ्जु नेपालमा पनि सोधिएका कुरा प्रश्नात्मक अभिव्यक्ति प्रयोग नै नगरी सामान्य तरिकाले सरर्र बताउने बानी देखिन्छ । *युवा आवाज*कै स्रोत व्यक्ति लालकुमारी रोका मगरमा प्रशस्त र सरला भट्टराईमा केही मात्रामा प्रश्नात्मक अभिव्यक्तिको अभिलक्षण भेटिन्छ भने अमरबहादुर ओलीमा यस्तो प्रवृत्ति छैन ।

यस्तै, कार्यक्रम *सहभागिता* सुन्दा कमला न्यौपानेमा अन्तर्क्रियात्मक शैली बढी र उपेन्द्र अधिकारीमा केही कम पाइएको छ ।

कार्यक्रम *शिक्षा डबलीको* कुरा गर्ने हो भने नूपुर भट्टाचार्यमा *हगि ?* भन्दै सञ्चारकर्मीसँग नातासमेत कायम गरेर कुरा गर्ने बानी छ भने लवप्रसाद त्रिपाठी र गोरखबहादुर सिंहमा जसरी तसरी सही थाप्ने र नीति, लक्ष्य र छिटफुट कार्यक्रमको सफलतामा अल्मलिँदै बचाउ शैलीमा आफ्नो भनाइ राख्ने प्रवृत्ति भेटिन्छ । यसबाट जुनसुकै पृष्ठभूमिका भए पनि समग्रमा आफ्नो भनाइलाई यथार्थपरक भएर जीवन्त शैली प्रदान गर्नमा पुरुषभन्दा महिला अगाडि रहेको पुष्टि हुन्छ ।

**● प्रतिप्रश्नपरक शैली**

अन्तर्वार्तामा सहभागीमध्ये केहीमा *किन नसक्ने ?* र *कल्लाई मन नपर्ने होला र ?* भने जस्ता प्रतिप्रश्नपरक प्रश्नात्मक शैलीमा कुरा राख्ने बानी पनि भेटिएको छ । प्रतिप्रश्नपरक शैलीका विविध अभिलक्षणले कुराकानीलाई फरक तरिकाले प्रस्तुत गरेर अन्तर्वार्ताको धारलाई भावनाको नजिक पुऱ्याउन मद्दत गर्न सक्छन् ।

कुल १७ महिलामध्ये कार्यक्रम *सञ्जीवनी*का शर्मिला कार्की, अनन्तकुमारी तामाङ र सम्झना तामाङको बोलीमा यस्तो अभिलक्षण भेटिएको छ । कुल १६ पुरुषमध्ये कसैले पनि अन्तर्वार्तामा यस्तो शैलीमा कुरा गरेको पाइएन । यसबाट कतिपय महिला रेडियो अन्तर्वार्तामा परम्परागत पुरुष शैलीभन्दा फरक तरिकाले पनि आफ्नो अभिव्यक्ति दिन चाहन्छन् भन्ने सजिलै बुझ्न सकिन्छ । यस सन्दर्भमा धनकुमारी सुनारको अभिव्यक्ति पनि उल्लेख्य छ :

*जस्तो गिरिजाप्रसाद कोइरालालाई समानुपातिकको जरुरत छ त ?*

वक्ताको विचारलाई बलियो तरिकाले समर्थनयोग्य बनाउन यस खालको प्रश्नात्मक अभिव्यक्तिले पनि सघाउन सक्छ । नेपालीमा यस्तो खालको भाषिक अभिव्यक्तिको सहारा लिन पनि महिला चुकेका छैनन् । यो अभिव्यक्ति शैली महिलाका लागि मात्र बनेको भने होइन । पुरुषले पनि आफ्नो अभिव्यक्तिलाई यस्तै तरिकाले प्रस्तुत गर्न सक्छन् ।

## ● प्रश्नभित्र पनि प्रश्नात्मक शैली

अन्तर्वार्ताको जवाफमा मात्र होइन, प्रश्नभित्र पनि प्रश्नात्मक शैलीको प्रवेश हुनसक्छ । यस खालको प्रयोग कार्यक्रम *सञ्जीवनी*मा सञ्चारकर्मी भीम आत्रेयले गरेको पाइएको छ । प्रश्न गर्ने क्रममा पनि *हैन ?* भनेर मूलप्रश्नभित्र अन्तर्क्रियात्मक प्रश्न घुसाइएको छ । यसले प्रश्नलाई कठोर र निरस हुनबाट जोगाउन र सजीवता प्रदान गर्न सक्छ । साथै, बेलैमा स्रोत व्यक्तिको ध्यानलाई मूल प्रश्नतिर तान्न पनि मद्दत गर्दछ ।

जागरण नेपालकी अध्यक्ष शर्मिला कार्कीसँग लिइएको अन्तर्वार्तामा सोधिएको एउटा प्रश्नमा यसरी प्रश्नभित्र पनि सहज तरिकाले प्रश्नात्मक शैलीको प्रयोग गरिएको छ :

> *जितेर आउने हो अथवा होइन, त्यो भन्नी स्थिति छैन, हैन ? अब उठेका उम्मेदवारले जितिहाल्छन् भन्ने पनि छैन । अब दलहरूले गर्नपर्ने अभ्यास चाईं के त ?*

कुल १६ वटा अन्तर्वार्तामध्ये एउटामा सञ्चारकर्मी पुरुषले यस्तो शैलीमा प्रश्न गरेको पाइएको छ । थोरै भए पनि यस खालको प्रवृत्तिको साङ्केतिक महत्त्व हुन्छ । यसबाट कतिपय पुरुष रेडियो अन्तर्वार्तामा परम्परागत शैलीभन्दा फरक तरिकाले समेत आफ्नो प्रश्नलाई प्रस्तुत गर्न चाहन्छन् भन्ने बुझ्न खासै गाह्रो पर्दैन । भाषिक शैलीमा सरलताका साथै अर्थपूर्ण वैकल्पिक प्रयोगको क्षमताले सञ्चारकर्मीलाई लक्षित वर्गमा स्थापित गराइराख्न मद्दत पनि गर्दछ । यस खालको सीपलाई सञ्चारकर्मी महिलाले पनि आत्मसात गर्न सक्छन् ।

# पालो लिने दिने बानी र व्यवस्थापन

एकल अन्तर्वार्तामा सञ्चारकर्मीले प्रश्न गरेपछि स्रोत व्यक्तिले जवाफ दिने पालो आउँछ । स्रोत व्यक्तिको जवाफ सकिएमा वा बीचैमा बरालिएको अनुभव भएमा सञ्चारकर्मीले पालो आफैँ लिएर अन्तर्वार्तालाई उद्देश्यमूलक धारमा अघि बढाउँछ । समूह अन्तर्वार्तामा चाहिँ अलि फरक हुन्छ । सञ्चारकर्मीले जुन स्रोत व्यक्तिलाई लक्ष्य गरेर प्रश्न गरेको हुन्छ, त्यही व्यक्तिले जवाफ दिने पालो पाएको मानिन्छ र अरूले कुरा सुनिरहेका हुन्छन् ।

पालो पाएको स्रोत व्यक्तिले कुरा गरिरहेका बेला अर्को स्रोत व्यक्तिले कहिलेकाहिँ सञ्चारकर्मीले दिने पालो नपर्खीकन बीचैमा सक्रिय भएर बोल्ने वा प्रतिक्रिया जनाउने अवस्था पनि आउन सक्छ । पालो व्यवस्थापनको काम सञ्चारकर्मीको हो ।

अन्तर्वार्ता लिँदा सञ्चारकर्मीलाई सबैभन्दा पहिला आफ्नो भूमिकाको (मैनाली २०६० : ९५) ख्याल गर्न सिकाइन्छ । रेडियो सगरमाथाका कतिपय अन्तर्वार्तामा भने प्रश्नकर्ता र उत्तरदाताले आफ्नो भूमिका अनुकूलको अनुशासनमा नरहेका उदाहरण पनि छन् ।[1] रेडियो अन्तर्वार्तामा यस्तो प्रयोग र सम्भावनाको पृष्ठभूमिमा पालो लिने दिने प्रवृत्तिले पनि विशेष महत्त्व राख्दछ ।

अध्ययनमा समेटिएका एकल र समूह गरी कुल १६ वटा अन्तर्वार्तामा सहभागी १७ महिला र १६ पुरुषको पालो लिने दिने प्रवृत्तिलाई ध्यान दिएर केलाउँदा कतिपय अन्तर्वार्तामा पालो लिने दिने कुरा खासै समस्याको रूपमा आएको जस्तो लाग्दैन । आधा घण्टादेखि एक घण्टासम्मका साप्ताहिक कार्यक्रममा समेटिएका अन्तर्वार्तामा आक्कलझुक्कल रूपमा कतै कतै पालो लिने दिने समस्याको कुशल व्यवस्थापन हुनुपर्ने ठाउँ भने नभएका होइनन् ।

१. यो कुरा स्वतन्त्र रेडियोको एक दशक : विकास, बहस र सामाजिक सरोकार भन्ने पुस्तकमा प्रकाशित रेडियो अन्तर्वार्तामा नेपाली महिलाको संवाद शैली शीर्षकको यसै अनुसन्धाताले तयार पारेको लेखमा उदाहरणसहित चर्चा गरिएको छ । पुस्तक मार्टिन चौतारीले २०६५ मा प्रकाशनमा ल्याएको हो ।

कतिपय अन्तर्वार्ताका केही ठाउँमा सञ्चारकर्मी आफैं पनि तँछाडमछाड र उछिनपाछिनको सार्थकमात्र होइन, निरर्थक प्रतिस्पर्धामा समेत उत्रिएको देखिन्छ। पालो लिने दिने कुरामा महिला र पुरुषको आनीबानी फरक छ या समान ? यस शीर्षकअन्तर्गत सञ्चारकर्मीबाट निर्देशित र स्वयं निर्देशित गरी दुईटा आधारमा लैंगिक प्रवृत्तिको आँकलन गरिएको छ।

● **सञ्चारकर्मी निर्देशित**

स्वभावैले सबै अन्तर्वार्ताका सबै स्रोत व्यक्तिको अधिकांश पालो सञ्चारकर्मी निर्देशित छ। यति हुँदाहुँदै पनि कतिपय अन्तर्वार्तामा सञ्चारकर्मी र स्रोत व्यक्ति बीचमै केही सेकेन्डका लागि भए पनि प्रश्न र उत्तरका क्रममा उतारचढाव र तँछाडमछाडको स्थिति देखिएको छ।

*हाम्रो सरोकार* कार्यक्रमको समूह अन्तर्वार्तामा सहभागी स्रोत व्यक्तिहरू धनकुमारी सुनार, डा. सुमित्रा मानन्धर र शम्भुजन लिम्बूमध्ये सञ्चारकर्मी शान्ता बस्नेतले जसलाई पालो दिएको हो, सामान्यत: उसैले बोलेको पाइन्छ। डा. ओम गुरुङसँग शान्ताले टेलिफोनमा कुरा गरेका बेला स्टुडियोमा रहेका सङ्ग्राम लामाले हस्तक्षेप गर्दैनन्, न त कुनै आवाज नै दिन्छन्। शान्ताले नाम लिएर प्रश्न राखेपछि मात्र सहभागिता जनाउने बानी सङ्ग्राम लामाको देखिन्छ।

कार्यक्रम *सहअस्तित्व*को कुरा गर्दा छिटोछिटो बोल्ने बानी भएका निमेष अधिकारी र भावना भट्टको एकल अन्तर्वार्तामा निमेषले प्रश्न गर्दा पनि स्रोत व्यक्तिलाई वाक्य टुङ्ग्याउनै नदिई उछिनेको जस्तो सुनिन्छ। अणबहादुर खड्का र ललिता सिजापतिसितको चैतमा प्रसारित समूह अन्तर्वार्तामा पनि ललिताले बोल्दाबोल्दै बीचैमा निमेषले प्रतिप्रश्न गरेको पाइन्छ, त्यो पनि हेपेको भनेर छर्लंगै अनुभव हुने गरी।

ललिताले प्रश्नको उत्तर दिँदै जाँदा ....*मइलालाई सजिलो भा'छ बुजाउनलाई, जति धेरै बुज्नेलाई गाह्रो भाको छ बुजाउन* भनेर सास लिन पनि नपाउँदै निमेषले ठाड्ठाडै *कसरी गारो भो त, धेरै बुज्नेले त झन् सजिलो होला नि त,* भनेका छन्। कुल ४५ मिनेटको कार्यक्रममा समेटिएको अन्तर्वार्ताको यो संवादको अंश २५ मिनेट बितिसकेपछि १५ सेकेन्ड पनि नपुग्दै सकिएको छ। यसरी अन्तर्वार्ता दिन आउनेलाई हतोत्साहित वा अपमान गर्नु हुँदैन (मैनाली २०६० : ८९) भन्ने मान्यतालाई निमेषले यहाँनेर बिर्सिएका छन्। उनले यस खालको व्यवहार अणबहादुरसित भने कतै पनि देखाएको पाइँदैन। यसले दिने लैंगिक विभेदको सन्देश गम्भीर र आपत्तिजनक छ। यसो गर्न रेडियो सगरमाथाको प्रसारण

निर्देशिकाले पनि छुट दिएको पाइँदैन ।[२] जे होस्, अन्तर्वार्तामा लैंगिक विभेदकारी अवशेषको पुनरावृत्ति हुने गरेका दुर्लभ उदाहरणमध्ये यो पनि एउटा हो । यो पालो लिने दिने प्रसंसँग जोडिएर आएको छ ।

कार्यक्रम *सञ्जीवनी*का पाँच अन्तर्वार्तामध्ये शर्मिला कार्की र भीम आत्रेयको प्रश्नोत्तरमा भने कतै पनि उछिनपाछिन गर्ने प्रवृत्तिको प्रभाव छैन । भीमले दुर्गा सोबसित गरेको अन्तर्वार्तामा पनि पालो लिने दिने कुरामा समस्या भएको देखिँदैन । सञ्चारकर्मीले दिएको पालो र स्रोत व्यक्तिले दिएको जवाफका बीचमा कतै पनि क्रमभंगता छैन ।

यस्तै, उदय नेपाली श्रेष्ठसित दुर्गा कार्कीले लिएको अन्तर्वार्तामा पनि अधिकांश समय पालो लिने दिने कुरामा हानथाप देखिँदैन । पालो लिने दिने कोणबाट कार्यक्रम *युवा आवाज*का तीनवटा अन्तर्वार्तालाई सुन्दा कविन्द्र बुर्लाकोटी, सञ्जु नेपाल, लालकुमारी रोका मगर, सरला भट्टराई र अमरबहादुर ओलीमध्ये कसैले पनि सञ्चारकर्मी पुण्य भण्डारीको निर्देशनलाई बेवास्ता गरेका छैनन् । पालो लिने दिने कुरामा उनीहरू कसैमा पनि समस्या देखिँदैन । समग्रमा पालो उत्तिकै जस्तो पाएर पनि सरलाको तुलनामा अमरबहादुरले कम बोलेका चाहिँ छन् ।

कार्यक्रम *सहभागिता*का सञ्चारकर्मी किरण पोखरेलको स्रोत व्यक्ति उपेन्द्र अधिकारीसँग जत्तिको प्रतिस्पर्धा छ, त्यत्तिकै प्रतिस्पर्धा सोही अन्तर्वार्ताकी अर्की स्रोत व्यक्ति कमला न्यौपानेसित पनि देखिन्छ । *शिक्षा डबली*को कुरा गर्ने हो भने पनि स्टुडियोमा रहेकी स्रोत व्यक्ति नूपुर भट्टाचार्यले पालो आफैँ लिएर पनि बोलेको पाइन्छ भने टेलिफोनमा रहेका गोरखबहादुर सिंह र लवप्रसाद त्रिपाठीले पालो आफैँ लिएका छैनन् ।

२. रेडियो सगरमाथाको प्रसारण निर्देशिका २०६३ ले महिला, बालबालिका, दलित र जनजातिसँग सम्बन्धित विषयलाई महत्वका साथ प्रसारण गर्ने र विभिन्न जातजाति, धर्म, वर्ण र सम्प्रदायका बीच वैमनस्यता ल्याउने र समाजमा दुर्भावना फैलाउने विषयमा कार्यक्रम प्रसारण नगर्ने नीति लिएको छ । साथै, सामाजिक न्यायका पक्षमा उभिँदै रेडियो सगरमाथाले सबै खाले भेदभाव र अन्यायका विरुद्ध सशक्त आवाज उठाउने र आवाजविहीनहरूको आवाज भएर निमुखा, असक्त र पछि पारिएका वर्ग तथा क्षेत्रको हितका लागि सामाजिक वकालत गर्ने काम रेडियो सगरमाथाले गर्ने कुरा निर्देशिकामा नै उल्लेख छ ।

यसबाट देखिने स्पष्ट सङ्केत के हो भने रेडियो अन्तर्वार्तामा पालो लिने दिने अनुशासनको जिम्मा सञ्चारकर्मीमा रहन्छ र अधिकांश स्रोत व्यक्तिले त्यसको पालना गरेका छन् । यसमा सञ्चारकर्मी र स्रोत व्यक्तिहरूको लैंगिक पृष्ठभूमिभन्दा व्यक्तिगत बानीबेहोरा, जिम्मेवारी वा भूमिका र विषयबोधको स्तरले सकारात्मक र नकारात्मक प्रभाव पार्ने गरेको देखिन्छ ।

- **स्वयं उत्प्रेरित**

एकल होस् वा समूह, दुवै खालका अन्तर्वार्ताका कतिपय प्रसंग र अवस्थामा स्रोत व्यक्तिहरूले स्वत:स्फूर्त रूपमा स्वयं उत्प्रेरित भएर बीचैमा आफ्ना कुरा राखेको वा प्रतिक्रिया जनाइहाल्ने गरेको पनि पाइएको छ । सञ्चारकर्मी निर्देशित भएर पालो लिने दिने प्रवृत्तिका तुलनामा स्वयं उत्प्रेरित भएर बीचमा बोल्नेको संख्या भने धेरै कम छ । कतिपय अवस्थामा स्रोत व्यक्ति आफैँ सकसकाएर पालो नपर्खिइकनै हानथाप गरेर बोल्ने गरेका उदाहरण पनि उल्लेख्य छन् ।

*हाम्रो सरोकार* कार्यक्रममा नरहरि आचार्य र सङ्ग्राम लामासित शान्ता बस्नेतले गरेको एकल अन्तर्वार्ताका क्रममा शान्ता र नरहरिका बीचमा पाँच सात सेकेन्डका लागि भए पनि प्रश्न र उत्तरमा तँछाडमछाड भएको पाइन्छ भने सङ्ग्रामसितको अन्तर्वार्तामा त्यस्तो उछिनपाछिन प्रवृत्तिले स्थान पाएको छैन । यस्तै, धनकुमारी सुनार र डा. सुमित्रा मानन्धरले अन्तर्वार्ताको बीच-बीचमा कतै-कतै स्वयं उत्प्रेरित भएर सङ्क्षिप्त प्रतिक्रिया जनाएको सुनिन्छ भने उनीहरूसँगै रहेका शम्भुजन लिम्बूमा त्यसरी बीचमा आफैँ उत्प्रेरित भएर प्रतिक्रिया जनाइहाल्ने प्रवृत्ति देखिँदैन ।

कार्यक्रम *सहअस्तित्व*मा अष्टलक्ष्मी शाक्य र किरण पोखरेलबीचको एकल अन्तर्वार्ताका कतिपय ठाउँमा दुवैले एउटा वाक्यका लागि पनि शब्द शब्दमा स्वयं उत्प्रेरित भएर पालो लिएको जनाउ नै नदिई हानथाप गर्दै कुरा अघि बढाएका छन् ।

कार्यक्रम *सञ्जीवनी*का लागि दुर्गा कार्कीले लिएको दुईटा समूह अन्तर्वार्तामध्ये एउटामा भावना पोखरेलसँग कुरा भइरहँदा कुसुम ज्ञवालीले पालो आफैँ लिएर बीचमा लामो कुरा गरेको पाइन्छ भने अर्को समूह अन्तर्वार्तामा अनन्तकुमारी तामाङसँग बोलिरहेका बेला सम्झना तामाङले बीचमा पालो आफैँ लिएर अल्पतम भए पनि सहभागिता

जनाएको पाइन्छ । *सञ्जीवनी*कै छुट्टाछुट्टै समूह अन्तर्वार्तामा सहभागी भावना पोखरेल र मनोज तामाङले भने कतै पनि पालो आफैँ लिएर एक शब्द पनि बोलेको सुनिँदैन ।

कार्यक्रम *युवा आवाज*को कुरा गर्ने हो भने पनि प्रश्न सुनिरहेका बेला सरला भट्टराईले बीच बीचमा हजुर भन्ने गरेको पाइन्छ भने अमरबहादुर ओलीमा यस्तो भन्ने बानी पनि निक्कै कम रहेको देखिन्छ ।

*शिक्षा डबली*मा नूपुर भट्टाचार्यलाई सुरुमै पालो दिएर सञ्चारकर्मी शान्ता बस्नेतले समूह अन्तर्वार्ताको थालनी गरे पनि टेलिफोन सम्पर्कमा रहेका गोरखबहादुर सिंह र लवप्रसाद त्रिपाठीसँग बीच बीचमा आफैँ पालो लिएर नूपुरले सम्बन्धित कुरालाई अघि बढाउन सघाएको पाइन्छ ।

यी उदाहरणलाई आंशिक रूपमा सरसर्ती बुझ्दा कतै कतै महिलाले मात्र स्वयं उत्पेरित भएर बढी नै प्रतिक्रिया जनाइहाल्ने हुन् कि जस्तो देखिएको छ । समग्रमा विश्लेषण गर्दा पुरुषले पनि बेला मौकामा यस्तो प्रवृत्ति देखाउने गरेका कुरा बिर्सन मिल्दैन । स्वयं उत्प्रेरित भएर पालो आफैँ लिनेमात्र होइन, वाक्य नटुंगिँदै हानथाप गर्ने र अल्प कुरा गर्दै अघि बढ्ने प्रवृत्ति पनि लैंगिक नभएर वैयक्तिक हो । यो कुरा बुझ्न सहभागीको विविधतायुक्त सामाजिक पृष्ठभूमि, विषयबोध, जिम्मेवारी, तात्कालिक अवस्था र भूमिकाले पनि सघाउँछ ।

# मौलिक रैछ विषय बदल्ने तरिका पनि

कुनै निश्चित विषयमा खास उद्देश्यका लागि समय सन्दर्भसँग जोडेर रेडियो अन्तर्वार्ता लिने वा दिने गरिन्छ । अन्तर्वार्ताका क्रममा स्रोत व्यक्तिका स्वभाव र चलाखीहरू भिन्न भिन्न हुनसक्छन् (मैनाली २०६० : ९०) भन्दै सञ्चारकर्मीलाई एकदम सचेत रहन सिकाइएको हुन्छ । स्रोत व्यक्तिले सामयिक विषय र प्रसंगलाई श्रोता अनुकूल नभएर आफ्नो स्वार्थ अनुकूल मोड्न सक्छन् । यस्तो सम्भावनालाई परास्त गर्न सञ्चारकर्मी हर्दम चनाखो हुनुपर्ने हुन्छ ।

सामान्यत: कुराकानीको विषय बदल्ने बानीमा महिलाभन्दा पुरुष अगाडि हुन्छन् भन्ने प्रमाण पश्चिमी भाषाको अध्ययनमा भेटिएको छ । नेपालको सन्दर्भमा चाहिँ के छ त ? यही प्रश्नको दसी प्रमाण यस शीर्षकअन्तर्गत खोज्ने प्रयास गरिएको छ ।

सामुदायिक रेडियोका लागि लिइने अन्तर्वार्तामा सामान्यतया औपचारिकताको आवश्यकता पर्दैन (पौड्याल २०६० : ४९)। यसो भनिए पनि अनौपचारिक कुराकानीमा जस्तो विषय बदल्ने कुरा रेडियो अन्तर्वार्तामा सहज छैन । अध्ययनमा समेटिएका १६ वटा अन्तर्वार्ताका ३३ सहभागीमध्ये जम्मा एक जनाले मात्र एक ठाउँमा विभिन्न प्रसंग जोड्ने क्रममा विषयान्तर हुन गएको छ ।

*सहभागिता* कार्यक्रममा सहभागी कमला न्यौपानेले वृद्धहरूका हकहितका विषयमा कुरा जोड्दै जोड्दै फोहरमैलामा समेत पुऱ्याएकी छन् । सञ्चारकर्मी र अर्का स्रोत व्यक्तिले त्यसलाई छलफलमा निरन्तरता दिएका छैनन् । यसमा कमलाको लैंगिकभन्दा पनि वाक्य नै पूरा नगरी हतारिएर बोल्ने वैयक्तिक आनीबानीले प्रभाव पारेको देखिन्छ । यसरी वाक्य नै पूरा नगरी हतारिएर बोल्ने बानी कतिपय पुरुषमा पनि हुनसक्छ ।

जे होस्, विषय बदल्ने बानीका आधारमा अन्तर्वार्ताको सर्सर्ती अध्ययन गर्दा प्राप्त भएका मौलिक तथ्यलाई गहिराईमा पुऱ्याउने, प्रसंग जोड्ने, प्रश्नको धार मोड्ने र प्रश्न नै फरक गर्ने गरी चारवटा उपशीर्षकमा विभाजन गरी प्रस्तुत गरिएको छ ।

## ● प्रसंग जोड्ने

अन्तर्वार्ताको मूल विषयमा विभिन्न प्रसंग जोड्ने कुरामा महिला र पुरुषको सहभागिता बराबरै देखिएको छ । जातिभेद रंगभेद उन्मूलन दिवसको सान्दर्भिकता र संविधानसभा विषयमा भएको *हाम्रो सरोकार* कार्यक्रमको समूह अन्तर्वार्तामा राष्ट्रिय महिला आयोगकी सदस्य धनकुमारी सुनार र डा. सुमित्रा मानन्धरले विभिन्न प्रसंग जोडेर मूल विषयलाई व्यापक परिवेशमा उभ्याउन खोजेका छन् । धनकुमारीको विचारमा नेपाली कांग्रेसका सभापति गिरिजाप्रसाद कोइरालाको लागि समानुपातिक सूचीको आवश्यकता छैन । उनको प्रश्न छ, *मतलब हिजो अब... के गर्न खोजिरा छ ?*

यस्तै, डा. सुमित्रालाई अन्तरिम संविधान कतिजना नेपालीको हातमा परेको छ भन्ने खुल्दुली लागेको पाइन्छ । यसै प्रसंगमा उनले भाषादेखि सूचनाको पहुँचसम्मका कुरा उठाएको पाइन्छ । *त्यो सूचना आप से आप चैं खुरुर्र जाँदैन के, हैन ?* यसो भन्दै उनले मिडियामा कुरा पुऱ्याएर *एफएमहरूलाई बधाई* दिनसमेत भ्याएको सुनिन्छ । यसो गर्दा कुरा मूल विषयबाट टाढा गएको छैन तर कुराको समेटाई भने व्यापक भएको छ ।

प्रसंग जोड्नमा *सहअस्तित्व* कार्यक्रममा सहभागी अणबहादुर र ललितामात्र होइन, निमेषको सक्रियता पनि उत्तिकै देखिन्छ । संविधानसभाका स्वयंसेवीहरूसँग स्वयंसेवाकै विषयमा गरिएको अन्तर्वार्तामा शिक्षण पेसाको अनुभवको प्रसंग जोडिएपछि घरको कामको तेहरो जिम्मेवारीको प्रश्न पनि सोधिन्छ ललितालाई ।

यस्तै, *सहअस्तित्व* र *सहभागिता* कार्यक्रममा अन्तर्वार्ता लिने किरण नेपालमा प्रसंग जोडेर प्रश्न गर्ने र *शिक्षा डबली*का सहभागी गोरखबहादुर सिंहमा प्रसंग जोडेर जवाफ दिने प्रवृत्ति देखिन्छ । यस्तो प्रवृत्तिले विषयप्रतिको प्रष्ट चेतनालाई कत्तिको बोक्न सक्यो वा सकेन, वास्तविकताप्रतिको जनधारणालाई कत्तिको सार्वजनिक गर्न सक्यो वा सकेन भन्ने देखाउँछ । यी कुरा कार्यक्रम मूल्यांकनको बौद्धिक र गुणस्तरको पाटोसित जोडिने पक्ष हुन् । यस अध्ययनबाट भने सामुदायिक रेडियो अन्तर्वार्तामा मूल विषयसँग जोडिएका प्रसंगहरू उठाएर कुराकानी अघि बढाउने काममा सञ्चारकर्मी र स्रोत व्यक्ति दुवैको सक्रियता हुने र त्यसका लागि कुनै एउटा लैंगिक समुदायको मात्र योगदान नरहने गरेको कुरा प्रस्ट हुन्छ ।

● **गहिराइमा पुऱ्याउने**

कतिपय स्रोत व्यक्तिमा अन्तर्वार्ताको विषयलाई गहिराइमा पुऱ्याएर कुराकानी गर्ने बानी देखिएको छ । प्रसंग जोडेर कुरा अघि बढाउनेहरूले नै कुराकानीको मूल विषयलाई गहिराइमा समेत पुऱ्याउने गरेको पाइएको छ । जातिभेद रंगभेद उन्मूलन दिवसको सान्दर्भिकता र संविधानसभा विषयमा भएको *हाम्रो सरोकार* कार्यक्रमको समूह अन्तर्वार्तामा राष्ट्रिय महिला आयोगकी सदस्य धनकुमारी सुनारको अनुभवमा राज्यसंरचनामा कर्मचारीतन्त्रले कामै गर्न नदिने वातावरण सिर्जना गरिरहेको छ । उनको भनाइ छ :

> *ब्युरोक्रेसीको पक्षबाट ... ऐले चाइँ त्यो पनि मैले महसुस गरिराछु के ; ठ्याक्क कामै गर्न नदिने वातावरण, हैन ? त्यो सिर्जना गर्दिने ।*

यस्तै, डा. सुमित्रा मानन्धरको सोचाइमा नेपालमा जातिभेद समस्या उन्मूलनका लागि संविधानसभा सहायक हुनसक्ने भए पनि त्यसको प्रतिनिधित्वका कारण झनै खतरनाक स्थिति आउनसक्ने देखिएको छ । उनको भनाइ छ :

> *विभिन्न खालको मान्छेहरू त्याँ एडप्ट चैं भएन भने त्यो संविधान त फेरि पनि विभेदपूर्ण नै, अब कति कालसम्म चैं पुक्ने हो ? त्यो चैं एक्दमै खतरनाक जस्तो चैं ऐले भइरा चैं ऐले सचेत हुनपर्ने नि ;*

अन्तर्वार्ता दिने क्रममा यसरी विषयलाई व्यापकता प्रदान गर्दै यथार्थको गहिराइमा पुऱ्याएर भनाइ राख्ने व्यक्ति नगण्य छन् ।

विषयलाई व्यापकता प्रदान गर्ने पुरुषहरू पनि अन्तर्वार्तामा सहभागी नभएका होइनन्, तर महिलाको दृष्टिकोणको गहिराइका अगाडि उनीहरूको दृष्टिकोण त्यही गहिराइमा पुग्न सकेको देखिँदैन । समाजमा लैंगिक हिसाबले तुलना गर्दा पुरुष अत्यधिक सुविधा प्राप्त भएकाले उनीहरूलाई यथास्थितिमा आंशिक र कागजीमात्रै परिवर्तन भए पनि पुग्ने मनस्थितिमा भेटिएका हुनसक्छन् । महिला

भने अब प्राकृतिक भेदलाई विशेषताका रूपमा परिभाषित गर्दै सामाजिक विभेदलाई निमिट्यान्न पार्नुपर्ने कुरामा विश्वास गर्न थालेका छन् । यसैले जे भएको छ त्यत्तिमै मात्र सन्तोष मान्न सक्ने अवस्थामा उनीहरू छैनन् ।

अप्राकृतिक विभेदको अन्त्य र समतामूलक न्यायिक समाज स्थापनाको लागि अब राज्यसंरचना र कार्यशैलीमा आमूल परिवर्तनको चाहना महिलाका लागि नैसर्गिक भइसकेको छ । यसैले समताको विषयमा महिला सहभागी पुरुषभन्दा व्यापक अनुभव र गहिरो चिन्तन बोकेर प्रस्तुत भएका हुनसक्छन् । यस खालको प्रवृत्ति थोरैमा मात्र देखिए पनि यसले दिने साङ्केतिक मूल्य युगान्तकारी छ ।

### ● प्रश्नको धार मोड्ने

कतिपय अवस्थामा स्रोत व्यक्तिले प्रश्नको धारलाई नै मोडेर जवाफ दिएको पाइएको छ । कुनै पनि विषयमा गरिएको अन्तर्वार्तामा सञ्चारकर्मी र स्रोत व्यक्तिको अनुभवको स्तर र वैचारिक तरंग नमिलेको अवस्थामा यस्तो प्रवृत्तिले प्रश्रय पाउँछ । मूल विषयकै सेरोफेरोमा रहेर पनि प्रश्नकर्ताको वैचारिक धारलाई मोडेर जवाफ दिनेमा महिला र पुरुष दुवैको सहभागिता छ ।

यस सन्दर्भमा कार्यक्रम *सञ्जीवनी*की स्रोत व्यक्ति दुर्गा सोब र *सहअस्तित्व*का स्रोत व्यक्ति अणबहादुर खड्काको जवाफ दिने तरिका तुलनीय र उल्लेखनीय छ । मतदाताले शिक्षक शिक्षिकामध्ये कसलाई बढी सहयोग गरेका छन् भन्ने आशयको निमेषको प्रश्नमा अणबहादुरको जवाफको थालनी यसरी हुन्छ :

> *मतदाताहरूले अर्बˇ सहयोग त हामीलाई अ लोकल यस यस प्रसंग यो यौटा ऐतिहासिक यौटा महायज्ञ हो । संविधानसभाको चुनाव भनेको अैलेअसम्म नभको देसमा यौटा प्रजातान्त्रिक उस्मा लोकतन्त्रका लागि हो यौटा नागरिक भको हुनाले हामीले सक्दो यस्लाई सफल पार्ने किसिम्ले हामी हिँड्योम् । यस्को सम्पूर्ण अब आफ्नो कर्तव्य निभाउने हो भोलिको रिजल्टको बारेमा यसको खासै अब हाम्ले यै भनेर हुन सक्दैन हैन ?*

एकातिर यस्तो छ भने अर्कातिर समानुपातिक प्रतिनिधित्वमा दलित र महिला विषयमा गरिएको अन्तर्वार्तामा भीम आत्रेयले *दबाब नपुगेको हो ?* भनेर सोधेको प्रश्नमा दुर्गा सोबको जवाफको सुरुआत यस्तो छ :

> *दबाब त अब यस्तो हो, दबाब तपाइँको कस्तो हो अब दबाब खोजेको, अब तपाइँको के रे ऐले मदेसी आन्दोलनले गरे जस्तो दबाब खोज्या हो कि अथ्वा कस्तो हो दबाब भनेको ? हाम्ले त दबाबको कुरा गर्नुहुन्छ भने ऐले हाम्रो सारा शक्ति खर्च भको नै हाम्रो दबाबमूलक कार्यकरममै हो ।*

यी दुई उदाहरणहरूका आधारमा अन्तर्वार्तामा प्रश्नको धार मोड्ने प्रवृत्तिलाई केलाउँदा एउटामा यथास्थितिवादी अर्थात् विभेदकारी र अर्को परिवर्तनकारी अर्थात् समतावादी अवधारणाको पृष्ठभूमिले काम गरेको स्पष्ट हुन्छ । शिक्षक अणबहादुर सहयोगको कुरालाई सहलिया ढंगले महायज्ञसँग जोडेर रिजल्टमा पुऱ्याउँदा पनि सहज जस्तै देखिन्छन् । यस्तो लाग्छ, प्रश्नको आधारमा जवाफ दिनुभन्दा आफूले जानेका कुरा सुनाउनु छ उनलाई ।

दुर्गा सोबको जवाफले दिने सन्देश चाहिँ अर्कै छ । उनी संविधानसभामा प्रतिनिधित्वका लागि दलित र महिलाको दबाब नपुगेको कुरा स्वीकार्न तयार छैनन् । उनको अभिव्यक्तिमा प्रश्नकर्ताले दलित आन्दोलनको इतिहास र वर्तमानको यथार्थ नबुझेको भाव सवल भएको छ ।

अन्तर्वार्ताको तयारी गर्दा नै सञ्चारकर्मीले ख्याल गर्नुपर्ने कुरा हो, विषयवस्तुमाथिको जानकारी पर्याप्त भयो कि भएन ? (मैनाली २०६० : ९०) यसमा तयारी पक्ष कमजोर देखिएको छ । फलत: अणबहादुरले प्रश्नको धारलाई सामान्य मात्र मोडेर आफूलाई लागेका कुरा जोडेका छन् भने दुर्गाले उल्टो नै हुने गरी मोडेर भुत्ते तुल्याउँदै गलत सावित गरिदिएकी छन् । यसबाट रेडियो अन्तर्वार्तामा विषयान्तर नै हुने सम्भावना एकदम कम भए पनि धार परिवर्तन प्रवृत्तिको आयाम भने गहन र व्यापक हुने गरेको छर्लंग हुन्छ । यस खालका उदाहरण अन्य अन्तर्वार्ताका सहभागीको अभिव्यक्तिमा पनि भेट्न सकिन्छ ।

एउटा पुरुषले पुरुषलाई सोधेको र अर्को पुरुषले महिलालाई सोधेको भए पनि प्रश्न गर्ने र प्रश्नको धार बदल्ने तथ्यमा देखिने अन्य सामाजिक विशेषताहरू भने लैंगिक नभएर पेसागत र वैयक्तिकमात्र पनि हुनसक्छन् । जे भए पनि रेडियो अन्तर्वार्तामा सामान्यत: पुरुषले प्रश्नलाई पालो पाएको रूपमा बुझ्ने र महिलाले विषयवस्तुको गम्भीरतालाई पनि ख्याल गर्ने कुराचाहिँ मननीय छ ।

**● प्रश्नको विषय नै फरक गर्ने**

एउटै अन्तर्वार्तामा सँगसँगै रहेका सहभागीमध्ये एकजनालाई सोधिने प्रश्न र अर्को व्यक्तिलाई सोधिने प्रश्नको विषय नै फरक गरेको पनि पाइन्छ । अन्तर्वार्ता लिइने व्यक्तिको क्षमता, अवस्था र सक्रियताका आधारमा यसो गर्नु स्वाभाविक पनि हो । अध्ययनका क्रममा यो कुरालाई त्यति सहज र स्वाभाविक तरिकाले मात्रै लिन सकिने देखिएन ।

असोजको *युवा आवाज*को एउटा अङ्कमा सहभागी चितवनकी सरला भट्टराई र रुकुमका अमरबहादुर ओलीलाई बसोबासका आधारमा सञ्चारकर्मी पुण्य भण्डारीले सुरुमै क्रमश: सहरी युवाका बारेमा र ग्रामीण युवाका बारेमा बोल्ने भनेर कित्ताकाट गरेका छन् । दुवै क्षेत्रका युवाको समस्या बताउन भनेपछि सरला र अमरबहादुरलाई पुण्यले फरक फरक विषयमा प्रश्न गरेको पाइन्छ ।

सरलालाई लागू पदार्थ, यौन र यौनशिक्षाका विषयमा सोधिन्छ भने अमरबहादुरलाई राजनीति, द्वन्द्व, बेरोजगारी विषयमा प्रश्न गरिन्छ । सहर र गाउँ सबैतिर मिल्ने राजनीति, बेरोजगारी, लागू पदार्थ, यौन, यौनशिक्षा आदि विषयलाई संयोजन गरेर दुवै स्रोत व्यक्तिबाट जवाफ खोतल्न पनि सकिन्थ्यो । सिद्धान्तत: अन्तर्वार्ताकार श्रोताको प्रतिनिधि हो (मैनाली २०६० : ८८) भने उसले श्रोताका जिज्ञासा र श्रोताले जान्नुपर्ने पक्षहरूको प्रतिनिधित्व गर्नुपर्ने हुन्छ । अध्ययनका क्रममा भने सञ्चारकर्मीलाई बदलिँदो समाजका श्रोताले आफ्नो प्रतिनिधि ठान्न नसक्ने स्थिति पनि भेटियो । संयोगमात्र होइन भने सरला र अमरबहादुरलाई सोधिएका फरक प्रश्नले गर्ने सङ्केत लैंगिक दृष्टिले अत्यन्त विभेदकारी छ । अमरबहादुरलाई सोधिएका राजनीतिक,

आर्थिक प्रश्नहरू सरलालाई किन सोधिएन र सरलालाई सोधिएका शैक्षिक र शारीरिक प्रश्नहरू अमरबहादुरलाई किन सोधिएन भन्ने प्रश्नले युगान्तकारी मोडमा आइपुगेका सचेत श्रोतालाई धेरैतिरबाट घोचिरहन्छ । यसबाट महिलालाई आर्थिक, राजनीतिक कुराबाट टाढै राख्ने र शारीरिक, शैक्षिक कुरामा मात्र सीमित देख्ने परम्परावादी पितृसत्तात्मक सोचको धङधडीले सञ्चारकर्मीलाई छाडिनसकेको पुष्टि हुन्छ ।

जम्मा ६ दशमलव २५ प्रतिशत अन्तर्वार्तामा यसखालको उदाहरण भेटिए पनि यसले सञ्चारमाध्यममा अझै पनि सुधार्न नसकिएका लैंगिक विभेदकारी त्रुटिका अवशेषको प्रतिनिधित्व गरेको छ । रेडियो अन्तर्वार्तामा सहभागीहरूको विषय बदल्ने बानीसँग जोडिएका पक्षहरूको मात्रै बृहत्, बहुआयामिक र गहन लैंगिक अध्ययनको पृथक सम्भावना पनि देखिएको छ ।

# आत्म प्रकाशन : मौकामा चौका हान्ने पनि

कुनै पनि अन्तर्वार्ताको स्रोत व्यक्ति हुनु भनेको जो कसैले पनि आफूलाई व्यक्तित्वका रूपमा उभ्याउनु पनि हो । त्यसरी उभिएका बेला कुनै पनि व्यक्तित्वले आफूलाई व्यक्तिगत रूपमा प्रकट गर्ने वा निजत्वलाई सार्वजनिक गर्ने खालका विभिन्न भाषिक अभिलक्षणको प्रयोग गरेका हुन्छन् । अन्तर्वार्ताकारले श्रोताको प्रतिनिधित्व गर्ने हुँदा अन्तर्वार्तामा कतै पनि म भन्ने व्यक्ति वाचक शब्दलाई त्याग्न सक्नुपर्छ (मैनाली २०६० : ८९) भन्ने मान्यता छ ।

यसो भए पनि सामुदायिक रेडियोमा अन्वेषणात्मक, विश्लेषणात्मक र भावुक जुनसुकै खालको अन्तर्वार्तामा पनि सहभागीले आफ्ना समस्या बताउने, अनुभव सुनाउने र समस्यामा परेकालाई सहानुभूति प्रकट गर्ने सम्भावना रहन्छ । यस्ता कुरामा पश्चिमी मुलुकका महिला अनौपचारिक रूपमा पनि पुरुषभन्दा अगाडि रहेका कुरा विभिन्न भाषिक अनुसन्धानबाट सिद्ध भएका छन् ।[३] नेपालमा चाहिँ आत्मप्रकाशनको लैंगिक प्रवृत्ति कस्तो छ त ? यसबारे रेडियो अन्तर्वार्ताको अध्ययन गरी केही साङ्केतिक अभिलक्षणहरू पत्ता लगाइएको छ । ती अभिलक्षणहरूलाई विचार र प्रतिक्रिया अनि काम र मौकाका आधारमा दुई भागमा छुट्याएर लैंगिक दृष्टिले विश्लेषण गरिएको छ ।

**● विचार र प्रतिक्रियामा म**

रेडियो सगरमाथाका अन्तर्वार्तामा अनुभव, समस्या र सहानुभूतिभन्दा पनि विचार र प्रतिक्रियाका लागि आत्म प्रकाशक भाषिक अभिलक्षणको प्रयोग गरिएको पाइएको छ । कतिपय सहभागीले *म, मलाई, मैले, मेरो* आदि आत्मवाची सर्वनाम

---

३. डेबोरा टानेनले सन् १९९१ मा र के. डिन्डिया र एम. एलेनले सन् १९९२ मा गरेको अध्ययनबाट यो कुरा पत्तो लागेको हो । यो कुरा विकिपेडिया सन् २००८ मा सोसियोलिङ्गिवस्टिक्समा दस लैंगिक सूत्रहरूअन्तर्गत् उल्लेख भएको पाइन्छ ।

प्रयोग गरेर आफूलाई लागेको कुरा वा आफ्नो वैचारिक पक्षलाई सार्वजनिक गरेका छन् । कसै कसैले चाहिँ *म* का ठाउँमा *हामी* प्रयोग गरेका छन् । कसै कसैले चाहिँ ती दुवै अभिलक्षण प्रयोग नगरेर पनि आत्म प्रकाशन गर्न सकेका छन् ।

अधिकांश अन्तर्वार्तामा विचार र प्रतिक्रियाका लागि आत्म प्रकाशन गर्ने सहभागी भेटिएका छन् । *म के देख्छु भन्देखि, मलाई तेस्तो लाग्च है* भन्ने खालका उपवाक्य प्रयोग गरेर कार्यक्रम *सञ्जीवनी*मा शर्मिला कार्कीले आफ्ना कुरा राखेकी छन् भने *मलाई के लाग्छ भने* भन्ने शैलीमा शम्भुजन लिम्बूले कार्यक्रम *हाम्रो सरोकार*मा आफ्ना विचार प्रकट गरेका छन् । *तेसैले भनेँ नि मैले, मलाई भन्नुहुन्छ भने, मलाई शङ्का लागेको के छ भने, ...* भनेर दुर्गा सोबले कार्यक्रम *सञ्जीवनी*मा अलि कडा लवजमा पनि आफ्ना भनाइ राखेकी छन् । सरला भट्टराईले कार्यक्रम *युवा आवाज*मा *जस्तो मलाई लाग्छ* भन्ने खालको सकारात्मक र नरम अभिलक्षणदेखि *मेरो मान्यता छैन* भन्नेसम्मको नकारात्मक र कठोर भाषिक अभिलक्षण पनि प्रयोग गरेको पाइएको छ । कार्यक्रम *युवा आवाज*मै लालकुमारी रोका मगरले चाहिँ *मैले सुझाव दिनुभन्दा पनि* भनेर प्रतिक्रिया जनाउँदा जनाउँदै पनि सुझाव दिएको पाइएको छ ।

*हाम्रो सरोकार* कार्यक्रममा नरहरि आचार्यले *म* नभनेरै पनि *अभियानमा लागेको व्यक्तिको नाताले* भन्ने शैली प्रयोग गरेर नेपाली काँग्रेसको घोषणापत्र बनाउने काममा आफ्नो संलग्नतालाई प्रकारान्तरले आफैँ पनि प्रकट गरेका छन् ।

यी उदाहरणलाई केलाउँदा रेडियो अन्तर्वार्ताका माध्यमबाट अनुभव सुनाउने, समस्या बताउने र सहानुभूति प्रकट गर्नेभन्दा पनि विचार र प्रतिक्रियाका लागि आत्म प्रकाशन गर्ने कुरा सामान्य देखिएको छ । महिला र पुरुषले प्रयोग गर्ने आत्म प्रकाशनका भाषिक अभिलक्षणहरूमा लैंगिक विभेदको परम्परागत अवशेष मेटिँदै गएको छ । बहुसंख्यक महिला व्याकरणले स्त्रीलिंगी मानेका इकारान्त क्रियापद प्रयोग गर्ने गरी आत्म प्रकाशन गर्न चाहँदैनन् वा गर्दैनन् । आत्मप्रकाशनको प्रवृत्ति चाहिँ लैंगिक नभएर अन्य कारणले सार्वजनिक गरिने वैयक्तिक कुरा मात्र हो ।

● **काम र मौकामा म**

अन्तर्वार्तामा कसै कसैले विचार र प्रतिक्रियाका अतिरिक्त काम वा संलग्नता दर्शाउने कुरामा आत्मप्रकाशन गरेका छन् । कसै कसैले चाहिँ मौका पाएको बेला भनिहाल्नुपर्छ भने जसरी जबरजस्ती आफ्नो शिक्षा र कामलाई सार्वजनिक गरेको देखिन्छ ।

रुकुमका अमरबहादुर ओली आफ्नो कामसित जोडिएको संलग्नतालाई *म आफू आयोनमा, मानवअधिकार शान्तिसमाजमा ...* भनेर कार्यक्रम *युवा आवाज*मा प्रकट गर्छन् भने सरलाले पनि सोही अन्तर्वार्तामा पटक-पटक *म* भनेर आफ्नो संलग्नताबारे बताएको पाइन्छ । आफ्ना कुरा बताउँदाको सरलाको स्वर भने अरू कुरा गर्दाको भन्दा दबेको सुनिन्छ ।

इन्जिनियरिङ क्याम्पससितको संलग्नता जोड्दै कार्यक्रम *सञ्जीवनी*को अन्तर्वार्तामा कुसुम ज्ञवालीले *संस्कृति स्थापित गर्न पनि म घरको काम गर्छु* भनेका छन् भने *म कानुनको विद्यार्थी भको हुनाले* भन्दै नजानिँदो तरिकाले अन्य सहभागीका अगाडि आफूले कानुन पढेको र बढी नै जानेको भाव दर्शाइहाल्ने लोभ *हाम्रो सरोकार* कार्यक्रममा सहभागी शम्भुजन लिम्बूमा देखिन्छ । यस खालको लोभ सोही अन्तर्वार्तामा सहभागी विद्यावारिधि गरिसकेकी डा. सुमित्रामा भने देखिएको छैन । तर, *मैले पनि अ मास्टरसम्म गरेको छु* भनेर शिक्षक अणबहादुरले कार्यक्रम *सहअस्तित्व*मा सोद्धै नसोधिएको कुराको उत्तर दिएर आत्मप्रकाशनको छटा प्रदर्शन गरेका छन् । उनलाई व्यक्तिगत रूपमा कहिल्यै नचिनेको श्रोताले पनि उनको त्यस खालको अभिव्यक्तिमा मपाइँत्वको अनावश्यक गन्ध पाउँछ । उनीसँगै अन्तर्वार्तामा सहभागी भएकी ललितामा भने यस खालको अभिवृत्ति पाइँदैन ।

आत्मप्रकाशनको प्रसंगमा महिलाचाहिँ तुलनात्मक रूपले पछि परेका हुन् कि जस्तो देखिएको छ । उनीहरूले जान्दै नजानेर हो वा पढ्दै नपढेर हो वा भन्ने कुरै नभएर हो वा भन्न मन नलागेर हो अथवा केले हो यसै भन्न सकिने स्थिति छैन । सामान्यतः आफ्नाबारेमा आफैँ भन्दै हिंड्नेलाई कुनै पनि समाजमा असल व्यक्तिका रूपमा हेरिँदैन । त्यसमाथि महिलालाई पुरुषका तुलनामा सानै

उमेरदेखि पछाडि खिचेर हुर्काइने भएकाले पनि उनीहरूमा आफ्ना कुरा भन्नुपर्दा सङ्कोच लागेको हो कि भन्ने ठाउँ पनि छ । यस खालको सङ्कोच कतिपय पुरुषमा पनि देखिन्छ । नरहरि र सरलाजस्ता सहभागीको आत्मप्रकाशन शैलीलाई गौर गरेर सुन्ने हो भने *असल व्यक्ति* र *महिला तत्वसँग* जोडिएको सामाजिक मान्यताले पनि प्रभाव नपारेको होला भन्न सकिन्न । त्यससम्बन्धमा विस्तृत रूपमा चाहिँ छुट्टै अध्ययन गर्नुपर्ने हुन्छ ।

पाएका बेला सार्वजनिक आह्वान गर्ने कुरामा भने महिला पनि पछि परेको पाइँदैन । नूपुर भट्टाचार्यले *शिक्षा डबली*मा *म आग्रह गर्न चाहन्छु* भन्दै समाहित शिक्षाका बारेमा कुरा राखेको पाइन्छ । यसका पछाडि उनी महिला हुनुभन्दा पनि उनको पदीय आधार, विषयवस्तुको संवेदनशीलता, अवस्था आदिले बढी प्रभाव पारेको हुनसक्छ । निश्चय नै महिला पदीय जिम्मेवारीलाई संवेदनशील भएर बहन गर्न चाहन्छन् भन्ने कुरा भने गोरखबहादुर, लवप्रसाद र नूपुरको समूह अन्तर्वार्तालाई ध्यान दिएर सुन्ने हो भने प्रमाणित हुन्छ । आत्मपरक शैलीमा सार्वजनिक आग्रह गर्ने नूपुरको कुरा पनि सोही क्रममा अपांग बालबालिकाप्रति कल्याणकारी भावनाले प्रेरित भएर आएको हो, मपाइँत्व प्रदर्शनका लागि होइन भन्ने स्पष्टै बुझ्न सकिन्छ ।

## मौखिक आक्रमणको रेडियो संस्करण

सामान्यत: धम्की, चिच्याहट, अट्टहास, मनपरि बोल्ने र नामै किटेर बोल्ने प्रवृत्तिलाई समाज भाषाविज्ञानले मौखिक आक्रमण मान्दछ । सामुदायिक रेडियोको शैली अनौपचारिक हुन्छ । भाषा आक्रामक हुनुहुँदैन । यसका लागि कुन तान, लय, यति र गतिमा बोल्ने भन्ने (मैनाली २०६० : ६३) कुरा समेत तय गरिएको हुन्छ । यसैले रेडियो सगरमाथाका अन्तर्वार्तामा पनि समाज भाषाविज्ञानले जुन खालको भाषालाई मौखिक आक्रमण मानेको छ, त्यो स्तरको प्रयोग हुनसक्ने कल्पना गर्न सकिँदैन । रेडियो संहिताले त्यस खालको अभिव्यक्तिलाई प्रसारणयोग्य पनि ठान्दैन ।

कार्यक्रम प्रसारणमा कसैको मानमर्दन गर्न हुँदैन (मैनाली र साथीहरू २०५८ : ५०) भन्ने आधारभूत मान्यता नै छ । यो कुरा रेडियो अन्तर्वार्तामा पनि उत्तिकै लागू हुन्छ । सञ्चारकर्मीले प्रश्न गर्दा भद्रता र सौहार्दता देखाउनु पर्छ (पौड्याल २०६० : ४९) भन्ने मान्यता पनि बलियो छ । यसो भनेर रेडियो अन्तर्वार्तामा सहभागीबीच एकले अर्कालाई मौखिक आक्रमण नै गर्न सक्दैनन् भन्ने विश्वास गरिहाल्न पनि हुँदैन । मौखिक आक्रमणको रेडियो संस्करण भिन्दै प्रकारको हुन्छ ।

सामान्य अवस्थामा मौखिक आक्रमण मानिने कतिपय कुरा रेडियो अन्तर्वार्तामा शिष्टाचारपूर्ण सङ्केत पनि हुनसक्छ । स्रोत व्यक्तिको नाम लिएर बोलाउनु रेडियो अन्तर्वार्तामा परिचयका लागि मात्र होइन, पालो दिनका लागि पनि आवश्यक ठानिन्छ । सामान्यत: अर्धभाषिक र भाषेतर लवजले भेदभाव गरिएको छैन भने त्यसलाई शिष्टाचारपूर्ण सङ्केतका रूपमा बुझ्नुपर्ने हुन्छ ।

अध्ययनको दायरामा परेकामध्ये ६२.५ प्रतिशत अन्तर्वार्तामा कसैले पनि कसैलाई मौखिक आक्रमण त छाडौं, भावनात्मक चोट पुऱ्याउने प्रयास पनि गरेको पाइएको छैन । बाँकी ३७.५ प्रतिशत अन्तर्वार्तामा भने एकाध ठाउँमा मौखिक आक्रमणको रेडियो संस्करण भेट्न सकिन्छ । त्यसलाई अनायासको क्षणिक प्रतिक्रिया, नरम शैलीमा गरम कुरा, प्रश्नको धारमा आक्रमण र ठुङ्ने प्रश्नको चोट गरी चारवटा छुट्टाछुट्टै उपशीर्षकमा विभाजन गरेर विश्लेषण गरिएको छ ।

● **अनायास उत्पन्न क्षणिक प्रतिक्रिया**

*हाम्रो सरोकार* कार्यक्रममा नरहरि आचार्यले नेपाली कांग्रेसको घोषणापत्रमा समावेशीको कुरा गर्दै जाँदा शान्ता बस्नेतले *जस्तो यहाँले भन्नुभयो समावेशीकरणको मुद्दा भन्दा चैँ कांग्रेसले तयार गरेको घोषणापत्र, केही अगाडि नै रहेको छ भन्ने कुरा यहाँले उठाइहाल्नुभयो,* भनेपछि एक्कासि स्वरलाई सामान्य तहभन्दा माथि उठाएर *कांग्रेसले मात्रै होइन* भन्न पुगेको सुनिन्छ । त्यसको असर शान्तामा यसरी पर्छ, उनी *अनि* मात्रै भनेर चूप रहन पुग्छिन् । उनले प्रतिवाद नगरिदिएपछि नरहरिको स्वर तत्कालै सामान्य तहमा झर्न पुगेको छ । उनले,

> *यो अनि के भने राज्जे नै ऐले समावेशीई यो सन्दर्भ भनेको हिजोको यौटा प्रसंगमात्रै थियो । अब यो यतिधेरै ढंगले संरचनागत परिवर्तन हुनी भो र संरचनाले नै सहभागिता रप्रतिनिधित्वलाई सुनिश्चित गर्नी भयो । हँ, ती कारणहरूले गर्दा समावेशी यौटा सामान्य कम्पोनेन्ट अथवा सामान्य यौडा विषय मात्रै बन्न पुक्यो अब चैँ ।*

भनेर सम्झाउन खोजेका छन् । एक्कासि उक्लिएको उनको स्वर झरेर सम्झाउने शैलीमा उत्रिएको आधा मिनेटपछि मात्र शान्ताले अर्को प्रश्न गरेकी छन् । यो सब कुरा कार्यक्रम सुरु भएको पाँच मिनेटदेखि ३० सेकेन्डबीचमा अनायासै भइसकेको छ ।

अन्य अन्तर्वार्तामा कसैले पनि कसैलाई अनायासको क्षणिक प्रतिक्रिया जनाएको पाइएको छैन । उक्त उदाहरणलाई पनि सञ्चारकर्मीको भूमिकामा रहेकी महिलालाई स्रोत व्यक्ति पुरुषले डक्ल्याएको भनेर बुझ्न सकिँदैन । आफूले भनेको कुरा नबुझेको ठानेर नरहरिले एक्कासि प्रतिक्रिया जनाएका रहेछन् भन्ने कुरा त्यसपछिको शान्ताको मौनता र नरहरिको सम्झाउने शैलीले प्रकट गर्दछ ।

यस खालको स्थिति अन्तर्वार्ता लिने पुरुषले पनि व्यहोर्नुपर्ने हुनसक्छ र महिलाले पनि ठूलो स्वरमा पुरुषसँग प्रतिवाद गर्ने सम्भावना रहन्छ । कुल १३ मिनेट ३० सेकेन्डको एकल अन्तर्वार्तामा अन्यत्र कतै नरहरि र शान्ताका बीचमा एकले अर्कालाई कुनै पनि तरिकाले आक्रमण गर्ने नियत राखेको पाइएको छैन । सोही

कार्यक्रममा घोषणापत्रमा समावेशीकरणकै विषयमा शान्ताले उर्मिला अर्यालसित लिएको अन्तर्वार्तामा पाइने जस्तो सहज सक्रियता भने यस अन्तर्वार्तामा पाइएको छैन ।[४] जे होस्, नरहरि र शान्ताबीचको उक्त उदाहरण अनायास उत्पन्न क्षणिक प्रतिक्रियामात्र हो, लैंगिक हमला नै भने होइन ।

## ● नरम शैलीमा गरम कुरा

नरम शैलीमा गरम कुरा गरी एकले अर्कालाई आक्रमण र प्रत्याक्रमण गर्ने खालको सङ्केत पनि कमै मात्र पाइएको छ । उदाहरण खोज्दै जाँदा फेरि पनि *हाम्रो सरोकार* कार्यक्रममै पुग्नुपर्ने हुन्छ । त्यसको समूह अन्तर्वार्तामा सहभागी स्रोत व्यक्तिहरूमा यस्तो अभिलक्षण भेटिएको छ । कानुन व्यवसायी शम्भुजन लिम्बूले आफूलाई सोधिएको प्रश्नको जवाफमा लामो कुरा गर्दै बडो होसियारीपूर्वक नरम शैलीमा फरकपन नल्याइकनै अन्य स्रोत व्यक्तिहरू र सञ्चारकर्मीलाई लक्ष्य गर्दै

> *तेस्मा कानुनको विद्यार्थी भको हुनाले म हेर्छु तर हामी नागरिक म्याएमहरूले, मेडिया पर्सनहरूले कति हेर्नुभको छ त्यो मलाई था छैन ।*

भनेका छन् । यस्तै,

> *अब हामीले अधिकार, बढी अधिकार खोज्दै जाँदाखेरी कैलेकाइँ फेइलियर पनि हुनसक्छ, हैन ?*

भनेर पनि राज्यले एक तिहाइ प्रतिनिधित्व र समान अधिकारको प्रतिबद्धता जनाएर पनि कार्यान्वयन नगरेको पृष्ठभूमिबाट प्रताडित महिलामाथि अर्कै प्रकारले उनले आक्रमण गरेका छन् । यसमा ठाडै हेप्ने, होच्याउने, चिच्याउने, कराउने अभिलक्षण छैन । नाटकीय उदाहरणहरू प्रस्तुत गर्दाबाहेक यस्तो तरिकाले रेडियो अन्तर्वार्तामा सोझै कोही प्रस्तुत हुन पाउँदैन पनि ।

४. उर्मिला अर्यालसितको अन्तर्वार्ता महिला महिलाका बीचमा मात्र भएकाले यस अध्ययनमा भने समावेश भएको छैन ।

शम्भुजनले शान्त स्वरले नरम शैलीमा विस्तारै बोलेर पनि सहभागी महिलाको अध्ययन, अनुभव र ज्ञानको स्तरलाई मात्र आक्रमण गर्न खोजेका छैनन्, महिलाले समान अधिकार खोज्नु पनि बढी हो भन्ने सन्देशसमेत दिन खोजेका छन् । यसले समताप्रति सचेत युगका संवेदनशील श्रोतालाई नमीठो अनुभूतिमा डुबाउँछ । उनको कुरालाई तत्काल कसैले पनि प्रतिकार नगरेको सुन्दा अन्यत्र जस्तै रेडियो अन्तर्वार्तामा पनि महिलाहरूले बढी नै सहे जस्तो पनि देखिन्छ । वास्तविक कुरा भने त्यसो होइन । अन्तर्वार्ता सुन्दै जाँदा स्रोत व्यक्ति महिलाले पनि इँटको जवाफ पत्थरको शैलीमा फर्काएका छन् । धनकुमारीले आफ्नो पालामा प्रसंग मिलाएर भित्तो पुऱ्याउँदै भन्छिन्,

> *तर अब के भयो भने नि, हामी गाली गर्दा गर्दा के भयो भने खालि हामी गाली नै मात्र गर्ने (स्रोत व्यक्ति सुमित्राको हाँसो) अथ्वा हैन ? नेगेटिभ मात्रै क्या जस्ले पनि नेगेटिवै सोच्ने वा नेगेटिवै गर्ने खालको प्रवृत्ति नै बनिसक्या छ । यद्यपि यो, फेरि यो राज्यले नै गराको हो क्या, यो चाइँ । यसको दोष अरूलाई छैन । हैन, तेल्ले गर्दाखेरी चाइने अब अँ हामी पोजेटिवै हुनुपर्छ । पोजेटिवै सोच्नुपर्छ, हैन क्यै गरौँ भन्ने अभियानमा सबै लाग्नुपर्छ भन्ने हो, तर अब हामीलाई अब विश्वास चाइने कम भइराको स्थिति चाइँ छ । है फेरि । रियालिटी चैँ त्यै हो । हैन ? गर्छ कि गर्दैन त ? अजसम्म गरेन भने कैलेसम्म गर्छ त भन्ने खालको त्यो चैँ छ ।*

शम्भुजनले धनकुमारी, डा. सुमित्रा र शान्तालाई आफूले जत्तिको कानुन नपढेका मान्छे भन्न खोजेकाले त्यसको जवाफ तत्कालको प्रतिक्रियाका रूपमा नभए पनि डा. सुमित्राले नबिर्सिइकन आफ्नो पालामा भाषासँग जोडेर घुमाइफिराइकन पटक-पटक दिएकी छन् । एकपटक उनी भन्छिन् :

> *अब यो अन्तरिम संविधान आएछ, कतिजना मान्छेको चैँ हातमा चैँ त्यो अन्तअन्तरिम संविधान हात पऱ्या छ ? र अनि कतिओडा भाषामा पऱ्या छ ? हैन ?*

अर्कोपटक यसरी भन्छिन् :

> *...तेस्कारणले चैँ त्यो बेलामा चैँ अब जो जो यो अलिकति जानेका मान्छेहरूले चैँ तेस्लाई चैँ अब त्यो माध्यम त्यो सबै जन्ताको चैँ अँ राइट भन्या राइट टु इन्फर्मेसन अब के के भैराको छ भनेर । अब त्यो अब अब त्यो हरेक मान्छेले चैँ त्याँ खोज्दै खोज्दै आउने चैँ कुरा त मिलेन ।*

अर्कोपटक पनि उनी भन्छिन् :

> *उनीहरूको सबैको ठाउँमा चैँ त्यो सूचना दिनुपर्ने नि ? त्यो सूचना आप से आफ चैँ खुरुर्र जाँदैन के, हैन ?*

यसबाट शम्भुजनले प्रतिकारै गर्न नपाउने गरी विभिन्न प्रसंग जोडेर गरिएका कुरा आफैँमा बलिया जवाफ भएका छन् ।

यसबाट विद्यावारिधिसम्म पढेलेखेका, अनुभव र ज्ञानले खारिएका जिम्मेवार महिलालाई पनि पाएका बेला पुरुषले सार्वजनिक रूपमै चुनौती दिन चुक्दैनन् भन्ने छर्लंग हुन्छ । जातीय पृष्ठभूमि हेर्ने हो भने शम्भुजनमा यस्तो प्रवृत्ति नदेखिनु पर्ने हो तर उनमा राज्यले लामो समयसम्म अवलम्बन गरेको केन्द्रीकृत एकात्मक सामन्ती पितृसत्ताको लिंगभेदी अवधारणा र व्यवहारले दुष्प्रभाव पारेको देखिन्छ । युगान्तकारी परिवर्तनको मोडमा पुगिसकेका शिक्षित र सक्षम महिला भने त्यस खालको विभेदकारी विराशतबाट मुक्त हुन चाहन्छन् । यही लैंगिक दृष्टिविन्दुका कारण उनीहरूबीचमा नरम शैलीमा भए पनि गरम कुरा गर्ने प्रवृत्तिको विकास भएको छ । यसलाई परम्परागत समाजमा रहेको मौखिक आक्रमणको रेडियो संस्करण मान्न सकिन्छ ।

### ● प्रश्नको धारमा आक्रमण

अन्तर्वार्ताका क्रममा सञ्चारकर्मी र स्रोत व्यक्तिहरूका बीचमा विषय, अनुभव, ज्ञान र भावको तरंग मिलेन भने प्रश्नको धारमा भने पनि आक्रमण हुनसक्छ । त्यसरी गरिने आक्रमण पनि अन्यत्र गरिने मौखिक आक्रमणको शैलीमा हुँदैन ।

अध्ययनमा परेका अन्तर्वार्तामध्ये १८.७५ प्रतिशतमा प्रश्नको धारमा आक्रमण गर्ने सहभागीहरू संलग्न भएका पाइएको छ । एकल अन्तर्वार्तामा *सञ्जीवनी*का स्रोत व्यक्ति शर्मिला कार्की र दुर्गा सोबमा यस्तो अभिलक्षण देखिएको छ भने समूह अन्तर्वार्तामा *शिक्षा डबली*का स्रोत व्यक्तिहरू गोरखबहादुर सिंह र लवप्रसाद त्रिपाठीमा भेटिएको छ । अन्य सहभागीमा यस खालको प्रवृत्ति शून्यप्राय: नै छ ।

गोरखबहादुरले समाहित शिक्षासम्बन्धी शान्ताको प्रश्नको धारमा सुरुमै तीव्र असहमति प्रकट गरेर आफ्ना कुरा राख्न खोजेका छन् । आधा घण्टाको कार्यक्रममा २० मिनेट ४५ सेकेन्ड छलफल भइसकेपछि समेत उनी भन्छन्,

> *यस्मा कस्तो छ भने हामीले वर्तमान, मैले कसरी पनि हेर्चु भने यो विषयमा... ... ...पहिले र अहिले हाम्रो अवस्था के छ ? ...तर पनि हाम्रो विगत हेर्दाखेरि ऐले हामी यस विषयमा यसबारेमा धेरै काम गरिसकेका छौँ । ...मलाई लाग्छ जो यो (काम) स्पिडमै भा छ ।*

बीच बीचमा आएका प्रतिप्रश्न पनि कडा छन् उनका । त्यसको प्रतिरक्षामा सञ्चारकर्मी शान्ता होइन, अर्की स्रोत व्यक्ति नूपुरले पालो आफैँ मागेर शिष्टतापूर्वक यथार्थ कुरा राखिदिएकी छन् । त्यसपछि भने शान्तालाई आक्रमण गर्न खोज्ने गोरखबहादुर नूपुरलाई *हजुर हजुर* भन्दै पछि हटेर प्रश्नको लाइनमा उभिन पुगेका छन् ।

नूपुरका गहकिला कुरा सार्वजनिक हुँदै गएपछि श्रोताका अगाडि गोरखबहादुरका कुरा फितला प्रमाणित हुँदै जान्छन् । त्यसको अनुभूति श्रोताले मात्र होइन, वक्ताले पनि गरेको पाइन्छ । लवप्रसादको अभिवृत्ति पनि केही हदसम्म गोरखबहादुरसँग मेल खाने खालको देखिन्छ । अन्तर्वार्तामा कुरा राख्ने नूपुरको कूटनीतिक र अपांग बालबालिकाप्रति संवेदनशील शैलीका अगाडि कागजी कर्मकाण्डमा मात्रै रमाउने सरकारी पदाधिकारीहरू टङ्चिन बाध्य भएका छन् ।

कार्यक्रम *सञ्जीवनी*मा सहभागी शर्मिला कार्कीको कुरा गर्ने हो भने उनले भीम आत्रेयको आधाभन्दा बढी प्रश्नको धारमा आक्रमण गरेर मात्र जवाफ दिएको पाइन्छ । भीमले *महिलाको आँखामा छारो हाल्ने काम भइराछ त्यसोभए* भनेको

सुन्नासाथ *छारो हाल्ने कामभन्दा पनि ...*भन्ने उपवाक्यबाट उत्तर दिन थालेको पाइन्छ । यस्तै, *महिलाको आफ्नै कमजोरी हो ?* भन्ने आशयको प्रश्नमा *कमजोडी यसलाई नभनौँ...* भनेको पनि सुनिन्छ । *छैन भनेर एकदम जिरोई छ भन्न मिल्दैन...* अर्को एउटा प्रश्नमा यस्तो जवाफ आएको छ । *कस्तो ? राम्रो कुरामा भन्न खोज्नुभएको कि, के असर पार्छ ?* भनेर गरिएको प्रतिप्रश्न पनि प्रश्नको धारमै आक्रमण गर्ने तरिकाको छ । अन्त्यमा आएको प्रश्नमा समेत शर्मिलाले *तेस्तो हुन सक्दैन । ग्यारेन्टी हुन सक्दैन ।* भनेर अन्तर्वार्ता टुंग्याइदिएकी छन् ।

कार्यक्रम *सञ्जीवनी*कै सहभागी दुर्गा सोबले पनि भीमका कतिपय प्रश्नमा यस्तै खालका उत्तर दिएको पाइन्छ । उनले *हैन, यसो छ..., हैन, यस्तो छ ... अब यस्तो छ ...* भन्ने जस्ता नकारात्मक अभिव्यक्तिबाट प्रश्नको धारलाई मोड्न खोजेको पाइन्छ । यसबाट के कुरा प्रस्ट हुन्छ भने कतिपय महिला महिलासम्बन्धी विषयमा पुरुष सञ्चारकर्मीका प्रश्नबाट सन्तुष्ट हुन सक्ने अवस्था छैन । विषय नै नबुझेर वा विषयलाई गहिरोसित नबुझेर वा बुझ पचाएर पुरुषहरू र कतिपय महिला समेतले स्रोत व्यक्तिको बुझाइको स्तर अनुरूपको प्रश्न राख्न नसकेका हुन्, यसै भन्न सकिँदैन ।

एकातिर यस्तो छ भने अर्कोतिर सरकारी पदमा रहेका पुरुष प्रगति विवरणको कागजी प्रतिवेदनभन्दा बाहिरको यथार्थ कुरामा सञ्चारकर्मीहरूले प्रश्न नै नउठाइदिए हुन्थ्यो भन्ठान्छन् । फलत: दुवै खालका स्रोत व्यक्तिले प्रश्नको धार मोड्ने प्रयास गर्दछन् । यसबाट देखिने लैंगिक पक्षचाहिँ के हो भने बहुसंख्यक महिला स्रोत व्यक्ति जुनसुकै विषयलाई बढी व्यावहारिक तरिकाले जिम्मेवार भएर इमान्दारीपूर्वक उठाउन चाहन्छन् र त्यसरी उठाइएको प्रश्नलाई रुचाउँछन् । महिलाको तुलनामा पुरुषमा यो प्रवृत्ति कम देखिएको छ । त्यसैको प्रतिक्रियास्वरूप अन्तर्वार्तामा विषय बदल्न नसके पनि प्रश्नको धार बदल्ने अभ्यास हुने गरेको देखिन्छ ।

### ● ठुङ्ने प्रश्नको चोट

अन्तर्वार्तामा स्रोत व्यक्तिलाई सहज हुने प्रश्नमात्र नसोधिन सक्छ । त्यसका लागि सम्बन्धित स्रोत व्यक्तिले कुनै बेला गरेको कमजोरी वा बदमासी लुकाएको हुनुपर्छ । कतिपय महिलाका हकमा भने यो कुरा लागू भएको पाइँदैन । निर्दोष

र निरपराध हुँदाहुँदै पनि उनीहरूलाई महिला भएकै कारण कोसेर प्रश्न गर्ने सञ्चारकर्मी पनि भेटिएका छन् ।

रेडियो अन्तर्वार्तामा के प्रश्न गर्ने भन्दा पनि कसरी प्रश्न गर्ने भन्ने कुराले महत्व राख्नसक्छ (पौड्याल २०६० : ४५)। कतिपय अवस्थामा प्रश्न सोध्ने सञ्चारकर्मीको तरिकाले पनि समाजमा व्याप्त लैंगिक अर्थ बोकेको पाइन्छ । रेडियो संहितामा भाषा तथा सम्बोधनले सबैलाई समान अनुभूति प्रदान गर्न सक्नुपर्छ र मान्छे मान्छेबीच विभेद सिर्जना गर्न हुँदैन (मैनाली र साथीहरू २०५८ : ५०) भन्ने मान्यता छ । यस खालको मान्यतालाई लत्याएर महिलालाई ठुँग्ने प्रश्न गर्नेमा सञ्चारकर्मी पुरुष अगाडि देखिएका छन् । उनीहरूले विभेदपूर्ण व्यवहारहरूलाई संशोधन गरी वैज्ञानिकता र आधुनिकताको मूलप्रवाहमा स्वाभाविक रूपले क्रियाशील हुनुपर्ने (मैनाली २०५९ : ५२) सामुदायिक रेडियोको विशेषतालाई अझै पनि पूर्णत: आत्मसात गर्न सकेको पाइँदैन ।

*सहभागिता* कार्यक्रमको समूह अन्तर्वार्तामा किरण पोखरेलले कमला न्यौपानेलाई र सहअस्तित्व कार्यक्रमको एकल र समूह दुवै अन्तर्वार्तामा निमेष अधिकारीले ललिता सिजापति, भावना भट्ट आदिसँग गरेका प्रश्न लैंगिक दृष्टिले ठुँग्ने खालका छन् । ज्येष्ठ नागरिकका बारेमा कुरा गर्ने क्रममा कमलाले नातिनातिनाबाट समेत हजुरआमाले लैंगिक विभेदको सामना गर्नुपर्ने मार्मिक कुरा उठाउँदा किरणले एक्कासि व्यक्तिगत रूपमा नै लैंगिक हमला हुने गरी उडाएर प्रश्न गरेका छन् । अरू बेला कतै पनि नलर्बरिएको कमलाको बोली त्यतिबेला लर्बरिएको छ । ( उदाहरण संवाद शैलीअन्तर्गत उल्लेख छ ।)

यस्तै, निमेषले अणबहादुरलाई गरेको प्रश्न र ललितालाई गरेको प्रश्नबाट लैंगिक समताको सन्देशभन्दा विभेदको खाडल बढाउन खोजेको देखिन्छ । उनले ललितालाई सोधेको एउटा प्रश्न :

> *विद्यालयमा पनि विद्यार्थीहरूले चैँ पुरुष शिक्षकहरूलाई भन्दा मइला शिक्षिकाहरूलाई चैँ अलि नटेर्ने, हेपाहा प्रविधि गर्छन् । यो आम जनताले, सर्वसाधारणले नि त्यै गर्‍या हो, ललिताजी ?*

ललिताले दिएको यसको जवाफ नकारात्मक छ। यस्तो हुँदाहुँदै पनि निमेष थप्छन् :

> *विशेष गरेर मइलाको भएको कारणले तपैंले केइ दु:ख पाउनुभएन ?*

यस प्रश्नमा पनि महिला भएपछि सुख पाउनु हुँदैन, दु:खै पाउनुपर्छ भन्ने पूर्वाग्रहले गाँजेको देखिन्छ निमेषलाई। यसको जवाफ पनि उनले खोजेको भन्दा विपरीत आएको छ। भावनालाई पनि त्यसरी नै सोधिएको छ :

> *तीसजनामध्ये बारजना महिलाहरू हुनुहुन्छ, तपाईंहरू सोभै पर्यवेक्षणमा जाँदाखेरि कस्तो अप्ठेरो अनुभव गर्नु भाछ ? ....(बीचैमा) जम्मा मतदाताहरूमध्ये चैं मइला मतदाताहरूको संख्या बढी छ। अब मतदाताहरूमा चैं यो मतदाता शिक्षाको कतिको, ज्ञान कतिको पाउनुभा छ त ? मइलाहरूले चैं विशेष गरी ? ....विशेष गरेर महिला मतदाताहरूलाई चाहिँ शिक्षा कसरी दिनुपर्ला ?*

निमेषका यस्ता प्रश्नलाई भावनाले कत्ति पनि मन पराएको पाइँदैन। उनले उत्तर दिएको तरिकाबाटै श्रोताले यो कुरा चाल पाउँछन्। यसबाट के प्रस्ट हुन्छ भने रेडियो अन्तर्वार्तामा कतिपय सञ्चारकर्मी महिलालाई समान छैनन् र हुन पनि सक्दैनन् भन्ने गलत पूर्वाग्रह राखेर प्रश्न गर्ने प्रवृत्तिबाट मुक्त हुन सकिरहेका छैनन्।

अहिलेको समाजमा महिला र पुरुषलाई हेर्ने दृष्टिकोण उनीहरू घरमा दिदीबहिनीसँग हुर्कँदाको जस्तो विभेदकारी छैन, परिस्थितिले बाध्यकारी फड्को मारेर भए पनि राज्यलाई सबैतिरबाट समतामूलक बनाउन थालिसकेको छ। महिला पुरुषभन्दा पछाडि नै छन् भन्ने सञ्चारकर्मीको मानसिकता परिवर्तित समयमा महिला स्रोत व्यक्तिलाई मात्र होइन, श्रोतालाई पनि ठुँग्ने खालको लाग्न थालिसकेको हुनुपर्छ। यो कुरा स्रोत व्यक्तिको समसामयिक अनुभवले खारिएको यथार्थवादी जवाफ सुनिसकेपछि जो कोहीले पनि अनुभव गर्न सक्छ। नेपालमा राजनीतिक विषयबाहेक अन्य विषयमा बोल्नसक्ने महिला स्रोत व्यक्तिहरू नै थोरै छन् (भट्ट २०६५ : ३६८) भन्ने अनुभव भइरहेका बेला सहभागी भएका केही महिलालाई सञ्चारकर्मीले नै पनपच्छे गरेर ठुँग्ने प्रश्न गरिरहने हो भने सामुदायिक रेडियो अन्तर्वार्तामा महिला सहभागिता समानुपातिक स्तरसम्म पनि नपुग्ने सम्भावनाले धेरै वर्ष पछ्याइरहने छ।

# श्रवण र सचेततामा छुट्टिंदैनन् महिला पुरुष

रेडियो अन्तर्वार्ता सचेततापूर्वक बोल्नका लागि मात्र होइन, सुन्नका लागि पनि हो । अन्तर्वार्ताको गुणस्तर, मात्रा, सम्बन्ध र तरिकामा सन्तुलन कायम गर्नका लागि पनि सहभागीहरूले एक अर्काका कुरा सुन्नुपर्ने हुन्छ । महिला सामान्यत: अर्काका कुरा सुन्न पनि चाख राख्छन् भन्ने देखिएको छ ।[५] सचेतताको सन्दर्भमा चाहिँ उनीहरू असम्बन्धित विषयमा कम हस्तक्षेपकारी भूमिका खेल्छन् भन्ने छ ।[६] रेडियो अन्तर्वार्ताका सहभागीमा एकले अर्काका कुरा जति बढी ध्यान दिएर सुन्न र बुझ्न सक्ने क्षमता हुन्छ, त्यति नै बढी सो अन्तर्वार्ता प्रभावकारी र स्तरीय तरिकाले अघि बढ्न सक्छ ।

अन्तर्वार्ता लिँदा राम्रो श्रोता बन्ने (मैनाली : २०६० : ९५) पेसागत सल्लाह पनि सञ्चारकर्मीलाई दिइएको हुन्छ । प्रश्न र जवाफको गति मिल्नका लागि पनि सहभागीमा बोल्ने जत्तिकै सुन्ने र बुझ्ने गुण हुनु राम्रो मानिन्छ । रेडियो अन्तर्वार्तामा सहभागी महिला हुन् या पुरुष, उनीहरूमा सुन्ने र बुझेर बोल्ने प्रवृत्ति कस्तो छ त ? यस शीर्षकअन्तर्गत यसै प्रश्नको जवाफ खोजिएको छ ।

एकल र समूह अन्तर्वार्ताका प्रतिनिधि अङ्कहरूलाई श्रवण र सचेतताको कोणबाट सुनेर विश्लेषण गर्दा सुन्ने र सच्याउने अनि सुन्ने तर नसच्याउने गरी दुई खालका मूल प्रवृत्ति पत्ता लागेका छन् । यिनै दुई आधारमा उपलब्ध तथ्यको विश्लेषण गरिएको छ ।

५. डन जिम्मरम्यान र क्यान्डास वेस्टले सन् १९७५ मा गरेको अध्ययनले यस्तो कुरा पत्ता लगाएको हो । यो कुरा विकिपेडिया सन् २००८ मा सोसियोलिङ्ग्विस्टिकअन्तर्गत् दिइएको दस लैंगिक सूत्रहरूमा उल्लेख छ ।

६. पी. फिसम्यानले सन् १९८० र भिक्टोरिया डि. फ्रान्सिस्कोले सन् १९९१ मा गरेको अध्ययनले यो कुरा पत्ता लगाएको हो । विकिपेडिया सन् २००८ मा सोसियोलिङ्ग्विस्टिकअन्तर्गत् दिइएको दस लैंगिक सूत्रहरूमा यो कुरा पनि उल्लेख छ ।

## ● सुन्ने र सच्याउने

अन्तर्वार्तामा सहभागी अधिकांश व्यक्तिमा अर्काका कुरा सुन्ने गुण उल्लेख्य मात्रामा देखिएको छ । आफैं मात्र बोल्न खोज्ने र अर्काको कुरा सुन्न नचाहनेहरू धेरै कम भेटिएका छन् । कुरा गराइको पारा र प्रश्नोत्तरको तालमेललाई विचार गरेर सुन्दा एकल अन्तर्वार्तातर्फ नरहरि आचार्य र सङ्ग्राम लामासँग शान्ता बस्नेतको, भावना भट्टसँग निमेष अधिकारीको, शर्मिला कार्की र दुर्गा सोबसँग भीम आत्रेयको, अष्टलक्ष्मी शाक्यसँग किरण पोखरेलको, उदय नेपाली श्रेष्ठसँग दुर्गा कार्कीको, लालकुमारी रोका मगरसँग पुण्य भण्डारीको कुराकानीमा श्रवण र सचेतताको गुण सन्तुलित र सामान्य नै रहेको पाइन्छ ।

यस्तै, समूह अन्तर्वार्तातर्फ धनकुमारी सुनार, डा. सुमित्रा मानन्धर, शम्भुजन लिम्बू, नूपुर भट्टाचार्य, गोरखबहादुर सिंह र लवप्रसाद त्रिपाठीसँग शान्ता बस्नेतको, अणबहादुर खड्का र ललिता सिजापतिसँग निमेष अधिकारीको, कमला न्यौपाने र उपेन्द्र अधिकारीसँग किरण पोखरेलको, कुसुम ज्ञवाली, भावना पोखरेल, अनन्तकुमारी तामाङ, मनोज तामाङ र सम्झना तामाङसँग दुर्गा कार्कीको, कविन्द बुर्लाकोटी, सञ्जु नेपाल, सरला भट्टराई र अमरबहादुर ओलीसँग पुण्य भण्डारीको कुराकानीको अधिकांश अंशमा मात्रा तलमाथि भए पनि श्रवण र सचेतताको सामान्य परिपालना भएको छ । यति हुँदाहुँदै पनि केही अन्तर्वार्ताका केही विशेष चरणमा श्रवण र सचेततासम्बन्धी रोचक उदाहरण पनि भेटिएका छन् ।

कार्यक्रम *शिक्षा डबली*को कुरा गर्ने हो भने त्यसमा सहभागी चार जनामध्ये सबैमा सुरुदेखि नै एकले अर्काका कुरा सुन्ने र विषयमा गहिरिएर प्रवेश गर्ने र गर्न लगाउने गुण देखिन्छ । त्यसमा नूपुर भट्टाचार्यको भूमिका सबैभन्दा अगाडि देखिन्छ । उनले सञ्चारकर्मी शान्ता बस्नेतले परिचयका क्रममा प्रस्तुत गरेको पृष्ठभूमि सूचनाको तथ्यलाई पनि सचेततापूर्वक सुनेर अपांगता भएका बालबालिकाको सङ्ख्या साढे बाह्र लाख नभएर *मोटामोटी तेह्र लाख छ* भनेर सच्याइदिएकी छन् । त्यतिमात्र होइन, उनले अन्य सहभागीको शब्द शब्दलाई ध्यान दिएर सुनेको र *सहकार्य भन्नुभो गोरखसरले* भन्ने खालको शैलीमा कुरा सच्याउँदै र सम्झाउँदै गरेको पनि पाइन्छ । यस्तै, गोरखबहादुर र लवप्रसाद पनि *नूपुर*

*म्याडमले जुन भन्नुभो* भनी भनीकन छलफलमा सहभागी भएका छन् । शान्ताको प्रश्न पनि प्रस्ट र सङ्क्षिप्त छ ।

कार्यक्रम *सञ्जीवनी*का स्रोत व्यक्ति उदय नेपाली श्रेष्ठको भूमिका पनि कुरा सुन्ने र सच्याउने मामिलामा अगाडि देखिएको छ । संविधानसभामा समावेशीकरणका कुरा गर्दै जाँदा उदय नेपालीले महिला आन्दोलित भएर अदालत पनि जानसक्ने कुरा उठाउँदा *कोर्टमा पनि त उनीर्को ह्वीप हुन्छ, दलको ह्वीप मान्नुपर्छ* भनेर दुर्गा चिप्लिएका बेला हल्का रूपमा हाँस्दै सहजतापूर्वक तत्काल सच्याएर ससम्मान उठाइदिने काम भएको छ । यस उदाहरणमा दुर्गाको कथन सचेतताभन्दा उदय नेपालीको श्रवण सचेतता माथि उठेको पाइन्छ ।

*हाम्रो सरोकार* कार्यक्रममा चाहिँ यसको ठीक उल्टो छ । शान्ता बस्नेतले सङ्ग्राम लामासँग लिएको अन्तर्वार्तामा सङ्ग्रामले *घोषणापत्रमा ?* र *घोषणापत्रहरूमा ?* भनी भनीकन प्रस्ट हुन खोज्नु भनेको सचेतता प्रकट गर्नु पनि हो । जवाफ दिने क्रममा सङ्ग्रामले एक ठाउँमा नेपाल आदिवासी जनजाति महासंघ र नेपाल सरकारबीचमा, *जुन चैने अ त्यसमा २० बुँदे जुन सम्झौता आ २२ बुँदे सम्झौता जुन थियो...* भनेर अल्मलिएर कुरा गरिरहेका बेला शान्ताबाट तत्काल *२० बुँदे सम्झौता* भनेर सच्याइदिने काम भएको छ । त्यसपछि सङ्ग्रामले ढुक्कसँग *२० बुँदे* भन्न थालेको पाइन्छ ।

यस्तै, कार्यक्रम *सञ्जीवनी*मा दुर्गाले मनोजको भाव बुझेर चलाखलाई विश्वासिलो भनी शब्दको स्तरमा सच्याइदिएको र पुण्यले लालकुमारीसँग कुरा गर्दा आयोनसम्बन्धी अघिल्लो हप्ता भएको कुराकानीबाट सम्मेलन हुने दिनको जानकारी जोड्न खोज्दा तारिख र गतेमा गडबड गरेका छन् । त्यसलाई नपत्याएर होला, नजाने गाउँको बाटै नसोध्नु भन्ने शैलीमा *त्यसबारे थाहा भएन* भनेर लालकुमारीले इमान्दार अभिव्यक्ति दिएकी छन् । सही र गलत नै मतलब नगरे जसरी लटरपटर तरिकाले बोल्ने व्यक्तिका कुरामा हो वा होइन भनेर मुछिने बानी सचेत महिलामा कमै पाइने कुरा पुण्यसितको लालकुमारीको उदाहरणबाट अनुमान गर्न सकिन्छ । सचेत पुरुषहरूमा पनि यस खालको गुण हुन्छ ।

यी उदाहरणहरूबाट मूलत: के देखिन्छ भने कुरा सुन्ने र सच्याउने गुणलाई अब कुनै पेसा वा भूमिका र लैंगिक पृष्ठभूमिमा मात्र अन्तर्निहित मान्न सकिँदैन ।

सञ्चारकर्मीको भूमिकामा रहेकी महिलाको भनाइ चिप्लिँदा स्रोत व्यक्तिको भूमिकामा रहेका पुरुषले सच्याइदिएका छन् भने स्रोत व्यक्तिको भूमिकामा रहेका पुरुषको भनाइ अल्मलिँदा सञ्चारकर्मीको भूमिकामा रहेकी महिलाले सच्याइदिएका छन् । यसबाट सुन्ने र सच्याउने गुण पनि लैंगिक र पेसागत नभएर व्यक्ति र अवस्था विशेषमा भरपर्ने कुरा हो भन्ने बुझिन्छ । सुन्ने र सच्याउने कार्य पनि लैंगिकताभन्दा माथिको मानवीय गुणमात्र हो । अघिल्लो उदाहरणबाट चाहिँ संवेदनशील विषयमा कतिपय महिलाहरू तुलनात्मक रूपमा बढी गम्भीरतापूर्वक सुन्ने र सचेत हुने गर्दछन् भन्ने देखिन्छ । सबै महिलामा यो गुण समान हुँदैन भन्ने पनि पुष्टि भएको छ ।

**● सुन्ने तर नसच्याउने**

अर्काको कुरा सुन्ने तर गलत सन्देश गइरहेको भए पनि नसच्याउने बानी पनि कतिपय व्यक्तिमा पाइन्छ । रेडियो सगरमाथाबाट प्रसारित केही अन्तर्वार्तामा पनि यस्तो गुणले प्रवेश पाएको छ । श्रोताका लागि पहरेदार र श्रोताप्रति वफादार (भट्ट २०६५ : ३३७) हुनुपर्ने सञ्चारकर्मीले भने यस्तो गुण प्रदर्शन गर्नु कमजोरी ठहरिन्छ ।

कार्यक्रम *सञ्जीवनी*को समूह अन्तर्वार्ताका सहभागी सञ्चारकर्मी दुर्गा कार्की र स्रोत व्यक्ति भावना पोखरेलमा बढी सुन्ने बानी पाइन्छ भने उनीहरूमा श्रवण सचेतता चाहिँ कम देखिएको छ । कुसुम ज्ञवालीले महिलाको प्रजनन स्वास्थ्यलाई पशुसँग तुलना गरेर लामो कुरा गरिरहेका बेला पनि उनीहरू बोल्दैनन् ।[७] यसको अर्थ चूप लागेर सुनिरहेका होलान् भन्ठान्नुपर्ने हुन्छ श्रोताले । *सञ्जीवनी* जस्तो महिला स्वास्थ्यका बारेका संवेदनशील कार्यक्रममा कुनै स्रोत व्यक्तिले *महिलाहरू पुरुषभन्दा अगाडि हुन्छन्* भनेकै भरमा मानवीय सभ्यतालाई नै पशुको कोटिमा झारेर राखिएका अवैज्ञानिक र अन्धविश्वासमा आधारित कुरालाई जस्ताको तस्तै सार्वजनिक गर्ने मौका दिनु भनेको सञ्चारकर्मीको

७. यो कुरा रेडियोमा महिला बोली भन्ने अनुसन्धानमा र स्वतन्त्र रेडियोको एक दशक : विकास, बहस र सामाजिक सरोकार भन्ने पुस्तकमा रेडियो अन्तर्वार्तामा नेपाली महिलाका संवाद शैली शीर्षकअन्तर्गत् पनि चर्चा गरिएको छ । यसै पुस्तकको संवाद शैली खण्डमा पनि छ ।

असफलता हो भने स्रोत व्यक्तिको अज्ञानता होला भनेर अड्कल काट्नुपर्ने हुन्छ ।

सञ्चारकर्मीको रूपमा सहभागी हुँदाहुँदै पनि यस अन्तर्वार्ताको उक्त अंशमा महिलाले हस्तक्षेपकारी भूमिका देखाएको पाइँदैन । यसबाट महिला असम्बन्धित मात्र होइन, महिला स्वास्थ्य जस्तो कार्यक्रमसँगै अत्यन्त सम्बन्धित र संवेदनशील विषयमा पनि कतिपय अवस्थामा तटस्थ नै रहन चाहन्छन् भन्ने प्रमाणित हुन्छ । असम्बन्धित विषयमा सचेततापूर्वक तटस्थ रहने गुण भने कार्यक्रम *युवा आवाज*की स्रोत व्यक्ति लालकुमारीमा पाइएको कुरा यसअघि नै उल्लेख भइसकेको छ ।

# प्रभुत्व र पराधीनता : ठेगान छैन को पुग्छ कहाँ

मानवीय अन्तर्क्रियाको महत्वपूर्ण माध्यम मानिएको सामुदायिक रेडियोमा प्रसारक र श्रोताबीच त कार्यात्मक, स्वतन्त्र, मित्रवत् र व्यावहारिक सम्बन्ध हुन्छ (मैनाली २०५९ : ५२) भने अन्तर्वार्तामा सहभागी स्रोत व्यक्ति र सञ्चारकर्मीबीचमा अन्यथा सम्बन्ध हुने कुरै आउँदैन । रेडियो अन्तर्वार्तामा सामान्यत: कुन विषयमा कसले कतिसम्म बोल्ने भन्ने कुरामा सञ्चारकर्मीको भूमिका निर्णायक हुन्छ । यस्तो भए पनि अन्तर्क्रियामा संलग्न समाजका अन्य व्यक्तिसित प्रसारकको प्रतिस्पर्धा नभए जस्तै स्रोत व्यक्तिसँग सञ्चारकर्मीको पनि प्रतिस्पर्धा होइन, आपसी समन्वय हुन्छ (मैनाली २०५९ : ४९)। सिद्धान्तत: यस्तो भए पनि भूमिका, विचार र प्रस्तुतिबाट अन्तर्वार्तामा को प्रभुत्वशाली छ र को पराधीन छ भन्ने कुरा व्यवहारमा झल्किन सक्छ ।

कतिपय स्रोत व्यक्तिमा बढी बोल्ने क्षमता हुन्छ भने कसै कसैमा कम बोलेरै काम चलाउने बानी पनि हुन्छ । अझै पनि महिला बढी बोल्ने क्षमता राख्छन् भने पुरुषहरू कम बोलेरै काम चलाउँछन् भन्ने परम्परागत सोच हराइसकेको छैन । छलफलका क्रममा विशेषज्ञ महिला अन्तर्क्रियात्मक शैलीमा प्रस्तुत भएर सबैका कुरा सुन्न चाहन्छन् भने पुरुषहरू आफ्नो कुराले हैकम प्रदर्शन गर्न चाहन्छन् भन्ने पनि अध्ययनसिद्ध छ ।[८] पश्चिमी मुलुकमा पाइएको यस खालको लैंगिक कथन र प्रवृत्ति नेपालको सन्दर्भमा कत्तिको मिल्दोजुल्दो छ त ? एकल र समूह अन्तर्वार्ताका सहभागीहरूमा लैंगिक प्रभुत्व र पराधीनताको परम्परागत प्रवृत्ति कायमै छ कि रेडियो शैली निर्देशिका अनुरूप समतातर्फ उन्मुख भइसकेको स्थिति छ भन्ने कोणबाट यहाँ विश्लेषण गरिएको छ। विश्लेषणका लागि सन्तुलनलाई मूल आधार बनाएर सन्तुलित र असन्तुलित गरी दुई खण्डमा विभाजन गरिएको छ ।

८. यो कुरा सन् १९६६ मा एच. जे. आइन्सेक, सन् १९९०मा हेलेना एम. लिट पिलिग्रिनी र सन् १९९३ मा जेन्निफर कोट्सले गरेको अध्ययनबाट पुष्टि भएको कुरा विकिपेडिया द फ्री इन्साइक्लोपेडियामा सोसियोलिग्विस्टिक्सअन्तर्गत् दस लैंगिक सूत्रहरूमा उल्लेख छ ।

## ● सन्तुलित

रेडियो सगरमाथाबाट निश्चित अवधिमा प्रसारित अन्तर्वार्ताको अध्ययन गर्दा अधिकांश अन्तर्वार्ताका सहभागीहरूमा प्रभुत्व र पराधीनता पक्ष सन्तुलित नै पाइएको छ। एकल अन्तर्वार्तातर्फ *हाम्रो सरोकार* कार्यक्रमका लागि शान्ता बस्नेतले नरहरि आचार्य र सङ्ग्राम लामासँग लिएको अन्तर्वार्तामा दुवै स्रोत व्यक्तिहरूको भूमिका, विचार र प्रस्तुति शैली सन्तुलित पाइएको छ। विचार र प्रस्तुतिका दृष्टिले नरहरिको तुलनामा सङ्ग्रामको भाषा शब्द र उपवाक्यका तहमा शक्तिशाली भए पनि सञ्चारकर्मीको भूमिकामाथि नै प्रभुत्व जमाउने खालको भने छैन। सङ्ग्रामले आदिवासी जनजातिका विषयमा कुरा उठाउँदा *कुनै हालतमा, कुनै हालतमा पनि, गरेकै हो, विश्वासघात भएको* जस्ता शक्तिशाली अभिव्यक्ति प्रयोग गरेका छन्। यसले कुराकानीको विषयलाई भाव ज्वलन्त बनाएको छ।

कार्यक्रम *सञ्जीवनी*को उदाहरण लिने हो भने भीम आत्रेयले दुर्गा सोबसित अन्तर्वार्ता गर्दा कतै पनि प्रतिस्पर्धात्मक र प्रभुत्वशाली भाव देखाएको पाइँदैन। प्रश्नमा कमजोरी पनि छैन। दुर्गाले चाहिँ विस्तारै अन्तर्वार्ताको विचारलाई दलित महिलाको पक्षबाट प्रभुत्वमा राख्न खोजेको आभास हुन्छ। उनको यस्तो प्रयासले अन्तर्वार्तामा भएको भूमिका, विचार र प्रस्तुतिको सन्तुलनलाई बिगार्न भने पाएको छैन। सञ्चारकर्मी भीमको भूमिका र प्रस्तुतिमा स्रोत व्यक्ति दुर्गालाई त मैले पो जित्नुपर्छ भन्ने सङ्केत पनि कतै भेटिँदैन।

समूह अन्तर्वार्ताहरूको विश्लेषण गर्दा *हाम्रो सरोकार* कार्यक्रममा शान्ता बस्नेतले धनकुमारी सुनार, डा. सुमित्रा मानन्धर र शम्भुजन लिम्बूसँग कुराकानी गर्दा कसैले पनि कसैमाथि ठाडै प्रभुत्व जमाउने र पराधीन रहने गरेको पाइँदैन। सबैले सञ्चारकर्मी शान्ताले पालो दिएपछि मात्र बोलेका छन्। कसैले पनि प्रतिस्पर्धा अनुभव गरेर पालो मिच्ने र आफू मात्र बढी बोलिरहने गरेको छैन। एक ठाउँमा चाहिँ शम्भुजनले कानुनको विद्यार्थी भएकाले आफूले कानुन बढी जानेको कुरा उठाउँदै अन्य सहभागीलाई कति नै जानेका छौ र भने जस्तो गरी कुरा राखेको पाइन्छ। डा. सुमित्राले आफ्ना पालामा वास्तवमा कसैले पनि धेरै जानेको छैन, कसैले पनि गर्नुपर्ने जति गरेको पनि छैन भन्ने खालको कुरा गरेर उनको प्रभुत्वशाली भावनालाई स्वाभाविक तरिकाले मत्थर पारिदिएकी छन्। यसबाट अन्तर्वार्तालाई अनधिकृत तरिकाले आफ्नो प्रभुत्वमा पार्न खोज्ने सहभागीको

प्रयास सफल भएको देखिँदैन । पराधीनता स्वीकार्ने पक्षमा पनि कोही भएको पाइएको छैन । लैंगिक समताको दृष्टिले यो सकारात्मक सङ्केत हो । समग्र अन्तर्वार्तामा भूमिका, विचार र प्रस्तुति पक्ष सन्तुलित भेटिन्छ ।

कार्यक्रम *शिक्षा डबली*को कुरा गर्ने हो भने स्रोत व्यक्ति नूपुर भट्टाचार्यले बडो शिष्टतापूर्वक हाँसी हाँसीकन अन्य स्रोत व्यक्तिहरू गोरखबहादुर सिंह र लवप्रसाद त्रिपाठीलाई मात्र होइन, सञ्चारकर्मी शान्ता बस्नेतलाई पनि सम्झाएको र सच्याएको पाइन्छ । त्यसको प्रतिवाद कसैबाट हुनसकेको छैन, बरु हजुर, हजुर र ठीक छ भनेर मिजासिलो पाराले यथार्थ तथ्यलाई स्वीकारेकै पाइन्छ । यसरी हेर्दा समग्र अन्तर्वार्तामा भूमिका, सूचनासम्पन्न विचार र अन्तर्क्रियात्मक प्रस्तुतिका दृष्टिले नूपुरको पूर्ण प्रभुत्व र अरूको आंशिक पराधीनता देखिन्छ । प्रभुत्वशाली भइकन पनि नूपुरको भूमिका समन्वयकारी बन्न पुगेको छ । प्रभुत्व र पराधीनताबीचको यही समन्वय र सकारात्मक पक्षले अन्तर्वार्ताको सारलाई असन्तुलित बनाउन पाएको छैन ।

कार्यक्रम *सञ्जीवनी*मा दुर्गा कार्कीले अनन्तकुमारी तामाङ, सम्झना तामाङ र मनोज तामाङसँग लिएको अन्तर्वार्तामा सबै स्रोत व्यक्तिहरू स्वतन्त्र जस्ता लाग्छन् । एक आपसमा कसैले पनि कसैमाथि भूमिका, विचार र प्रस्तुति कुनै तरिकाले पनि प्रभुत्व जमाउन खोजेको आभास हुँदैन । पराधीनताको आभास पनि कसैमा पाइँदैन । एक ठाउँमा सञ्चारकर्मीले संशोधनको आग्रह राखेको छ । यो आफैंमा सकारात्मक पक्ष हो । यसैले पनि यो अन्तर्वार्ता सन्तुलनको धारबाट नडगमगाइकन पार भएको छ ।

यस्तै, कार्यक्रम *युवा आवाज*मा पुण्य भण्डारीले दिएको स्थानअनुसार स्रोत व्यक्ति कविन्द्र बुर्लाकोटी र सञ्जू नेपाल मात्र होइन, सरला भट्टराई र अमरबहादुर ओलीले पनि बोलेका छन् । बोल्ने क्रममा एकले अर्कालाई प्रभुत्वमा पार्ने बानी कसैले पनि देखाएका छैनन् । भावी नेपालको लागि युवा परिकल्पना व्यक्त गर्नमा कविन्द्र तल्लीन छन् भने कार्यक्रम व्यवस्थापन पक्षको जानकारी दिनमा सञ्जू सीमित छन् । उनीहरू एउटै संस्थाका प्रतिनिधि भए पनि भूमिका अलग छ । सञ्जुले बोल्दै जाँदा एक ठाउँमा पुगेपछि र मात्र  भनेर जवाफ टुंगिएको पाइन्छ । उनीबाट थप जानकारी आउने लक्षण नदेखिएपछि मात्र कविन्द्रले सञ्जुले दिनुपर्ने जवाफ थपिदिएका छन् । यसबाट जानकारीका दृष्टिले कविन्द्रको प्रभुत्व र सञ्जूको पराधीनता प्रस्टै देखिन्छ । कार्यक्रमको अन्त्यमा पनि यस्तो पाइन्छ । आयोनमा उनीहरूको पदीय हैसियत र कामको प्रकृतिले

पनि यस्तो भएको हुनसक्छ । जे होस्, सकारात्मक उद्देश्यप्रेरित भएकाले यसले अन्तर्वार्ताको सन्तुलनलाई बिगारेको भन्न चाहिँ मिल्दैन ।

उता, सरला र अमरबहादुरको अन्तर्वार्तामा एउटाले सहर र अर्कोले गाउँका युवाको कुरा गरेका छन् । यौनका प्रसंगमा बाहेक अन्य विषयमा दुवैका भनाइ उस्तै उस्तै छन् । आफ्नो पालामा सोधिएका प्रश्नको मात्र उत्तर दिन्छन् । एकले अर्काका भनाइमा सम्मति र विमति जनाउने ठाउँ पनि छैन । सुरूको आधा समयमा सरलालाई बढी प्रश्न गरिएको छ भने पछिल्लो आधा समय अमरबहादुरलाई । प्रभुत्व र पराधीनताका दृष्टिले *युवा आवाज* कार्यक्रमको यो अन्तर्वार्ता तटस्थ नै छ ।

यी उदाहरणहरूबाट प्रस्ट भन्न सकिने कुरा के हो भने सामुदायिक रेडियोको अन्तर्वार्तामा प्रभुत्व र पराधीनताको लैंगिक आधार कमजोर भइसकेको छ । समाजका अन्य विभिन्न कारणले पनि व्यक्तिको भूमिका, वैचारिक शक्ति र प्रस्तुति फरक हुनसक्छ । रेडियो अन्तर्वार्ताको नेपाली भाषा प्रयोगलाई ध्यान दिएर सुन्दा पनि बहुसंख्यक अन्तर्वार्ताका अंशहरू सन्तुलित नै पाइएका छन् ।

- **असन्तुलित**

रेडियो अनुहार नदेखिने माध्यम भए पनि सहभागीहरूको व्यवहार, कार्यशैली, इमान्दारीको छवि श्रोताको मानसपटलमा खिचिएको हुन्छ (मैनाली २०५९ : ८१) । यसरी हेर्दा रेडियो सगरमाथाबाट प्रसारित कतिपय अन्तर्वार्ताका केही अंशमा प्रभुत्व र पराधीनता पक्ष असन्तुलित भएको पनि देखिन्छ ।

एकल अन्तर्वार्तातर्फ कार्यक्रम *सहअस्तित्वका* सञ्चारकर्मी निमेष अधिकारीमा बडप्पन शैली स्पष्टतः अनुभव गर्न सकिन्छ । निमेषले भावना भट्टसँग लिएको अन्तर्वार्तामा *भावनाजी, ...कत्तिको छ त ?* भन्ने जस्ता वाक्य प्रयोग गर्दा प्रश्नकर्ताको शैली रेडियोबाट निक्कै ठाडो सुनिन्छ । जवाफ नआउँदासम्म श्रोतालाई लाग्छ, स्रोत व्यक्ति तल भुइँमा कतै होला । उसलाई सञ्चारकर्मीले माथिबाट घुम्ने कुर्चीमा बसेर प्रश्नका लागि प्रश्न वर्षाइरहेको त छैन जस्तो पनि लाग्छ । भावनाको जवाफ आउन थालेपछि भने वैचारिक रूपमा भावनाको स्थान माथि रहेको आभास हुनथाल्छ । उनले *मलाई त्यस्तो लाग्दैन, मलाई लाग्दैन* जस्ता वाक्यांशहरू राखेर व्यावहारिक यथार्थका आधारमा

जवाफ दिन थालेपछि श्रोताले निमेषको बडप्पन खोक्रो भएको चाल पाउँछन् । त्यति मात्र होइन, निमेषले प्रश्न गर्दा महिला यस्तो उस्तो भन्ने परम्परागत पूर्वाग्रहको भारी समेत बढी नै बोकेको देखिन्छ । कार्यक्रम सञ्चालकमा जोश प्रशस्त, बढी उत्साही तर ज्ञान छैन र कहाँ पाइन्छ भन्ने पनि थाहा छैन, होस् कम छ जोश बढी छ साथै सिकौँ भन्ने भावना पनि बहुसंख्यकमा छैन (भट्ट २०६५ : ३८३) । सामुदायिक रेडियोबाट धेरैजसो सञ्चारकर्मीले बनाएको यस खालको छविबाट उनी अझै मुक्त हुन सकेका छैनन् । प्रस्तुत अन्तर्वार्तामा सञ्चारकर्मीको अल्पज्ञानसिर्जित अनुचित पराधीनता स्रोत व्यक्तिलाई स्वीकार्य नहुनु स्वाभाविक हो । कोभन्दा को कम प्रवृत्ति बढी भएकाले लैंगिक संवेदनशील श्रोताले कार्यक्रम सह अस्तित्वको मर्म र भावनामा समेत आघात पुगेको अनुभव पनि गर्न सक्छ ।

अर्कोतिर, कार्यक्रम *सञ्जीवनी*का लागि भीम आत्रेयले शर्मिला कार्कीसँग लिएको अन्तर्वार्तामा चाहिँ शर्मिलाको प्रभुत्व देखिन्छ । भीमको प्रश्न गर्ने शैली नरम छ, स्रोत व्यक्तिलाई अनुचित तरिकाले जित्ने होइन, सही तरिकाले सहजीकरण गर्ने भूमिकामा उनी छन् । स्रोत व्यक्तिले भने प्रश्नलाई आफ्नै तरिकाले ढाल्ने मात्र होइन, म यो कुरा अहिले भन्छु र यो कुरा पछि भन्ने विचार गरेको छु भन्नेसम्मका कुरा गरेर अन्तर्वार्तामा आफ्नो प्रभुत्व जमाउन खोजेको देखिन्छ ।

कार्यक्रम *सञ्जीवनी*कै अर्को अन्तर्वार्तामा भीमलाई दुर्गा सोबले कतै कतै प्रभुत्वमा राख्न खोजेको पाइन्छ । यसमा पनि भीमको प्रश्नमा कमजोरी छैन । स्रोत व्यक्तिलाई जित्नुपर्छ भन्ने दुर्भावना पनि सञ्चारकर्मीमा देखिँदैन । यही कारण भीममा पराधीनता छ भन्न चाहिँ मिल्दैन । यति हुँदाहुँदै पनि स्रोत व्यक्तिले आफूले प्रतिनिधित्व गर्ने वर्ग र जातिको समस्याको गहिराई र आन्दोलनको अद्यावधिक विकास क्रमलाई सञ्चारकर्मीले नबुझिदिएको अनुभव गरेको पाइन्छ । प्रस्तोतामा तयारीको अभाव हो वा विषयवस्तुप्रतिको ज्ञानको कमी (भट्ट २०६५ : ३८३) ? अथवा सिकौँ भन्ने भावनाको कमी हो ? जे भए पनि यी कमजोरीबाट भीमले पनि आफूलाई मुक्त गर्न नसकेको भने स्पष्टै देखिन्छ । यसैकारण अन्तर्वार्ताको केही खास ठाउँमा प्रभुत्वको स्थितिलाई उनले पराधीन भएर व्यहोर्नु परेको छ ।

कार्यक्रम *सञ्जीवनी*कै अर्को अन्तर्वार्तामा दुर्गा कार्कीले उदय नेपाली श्रेष्ठसँग कुरा गरेकी छन् । अन्तर्वार्ताको सुरूमै उदयले दुर्गालाई प्रभुत्वमा राख्न खोजेको पाइन्छ । दुर्गाजी, यस्तो यस्तो भन्ने शैलीमा । एक ठाउँमा ह्वीपको कुरा चल्दाचल्दै अदालत

पुगेर दुर्गा चिप्लिएका बेला भने सौहार्द भावमा उदयले हाँसी हाँसी सच्याइदिएका छन् । त्यसबाहेक अन्तर्वार्ताको मध्यदेखि दुवैमा प्रभुत्व र पराधीनताको लेस देखिँदैन ।

अर्कोतिर, कार्यक्रम *सहअस्तित्व*का लागि किरण पोखरेलले अष्टलक्ष्मी शाक्यसँग लिएको अन्तर्वार्तामा चाहिँ किरणले थाहा नपाउँदो पाराले प्रभुत्वको लगाम आफूमा राख्न खोजेको भान हुन्छ । अष्टलक्ष्मीको बोलीबाट झल्किएको दृढ निश्चयी स्वभाव र अनुभवले खारिएको स्पष्ट विचारले भने सञ्चारकर्मीको प्रभुत्वलाई फिक्का बनाइदिएको छ । त्यतिमात्र होइन, पराधीनतालाई अस्वीकार गरेर निरर्थक पनि बनाइदिएको छ ।

यसैगरी, कार्यक्रम *युवा आवाज*का लागि पुण्य भण्डारीले लालकुमारी रोका मगरसँग गरेको कुराकानीमा वैचारिक दृष्टिले लालकुमारीको प्रभुत्व देखिन्छ । उनले प्रश्नलाई मोडेर समेत जवाफ दिएको पाइन्छ भने सञ्चारकर्मीले उनलाई सहजीकरण मात्र गरिदिएको पाइन्छ । सञ्चारकर्मीको स्तर पनि स्रोत व्यक्तिको वैचारिक धरातलसँग मिल्दोजुल्दो भइदिएको भए प्रस्तुत अन्तर्वार्तामा प्रभुत्व र पराधीनताको कुरा समानान्तरमा सन्तुलित रहन पनि सक्थ्यो । यसबाट स्रोत व्यक्तिको सही विचारले जितेपछि सञ्चारकर्मीको भूमिका समेत पराधीन हुने मात्र होइन, प्रभुत्वको प्रवृत्ति पनि लैंगिक मुडेवलमा मात्र आधारित हुन छाडिसकेको सङ्केत मिल्दछ ।

*सहअस्तित्व*का लागि अणबहादुर खड्का र ललिता सिजापतिसँग लिइएको अन्तर्वार्ताको पुन:स्मरण गर्दा अणबहादुरमा स्पष्ट देखिने उच्चताभास ग्रन्थीले अन्तर्वार्तामा अनपेक्षित प्रभुत्व झल्काउन खोजेको छ । ललितामा भने उच्चताभास र हिनताभास दुवै खालको ग्रन्थी बढेको पाइँदैन । उनमा यथार्थ कुरा सकेसम्म नलुकाइकन जस्ताको तस्तै सार्वजनिक गर्ने बानी छ । ललिताले निमेषका ठाडा र लैंगिक अन्धदृष्टि, अल्पज्ञान र पक्षपातपूर्ण प्रश्नलाई खण्डन गर्दै अनुभवपूर्ण, तथ्यपरक र सारगर्भित जवाफ दिएकी छन् । यसबाट ललितालाई पराधीन तुल्याउन खोज्ने स्रोत व्यक्तिको अनधिकृत चेष्टा र सञ्चारकर्मीको अनुचित प्रश्न स्वीकार्य नभएको प्रस्ट हुन्छ ।

कार्यक्रम *सहभागिता*मा किरण पोखरेलले कमला न्यौपाने र उपेन्द्र अधिकारीसँग कुराकानी गरेका बेला प्रभुत्व र पराधीनताको त्रिपक्षीय चलखेल अनुभव गर्न सकिन्छ । त्यसमा सुरुदेखि नै कमलामा प्रभुत्वशाली प्रवृत्ति देखिन्छ भने उपेन्द्रमा पनि यस्तो प्रवृत्ति कम छैन । किरणको त झन् कुरै भएन । तीन जनाको तरिका भने फरक छ ।

यस अन्तर्वार्तामा पराधीनता कसैलाई पनि स्वीकार भए जस्तो लाग्दैन । समग्रमा सबै प्रभुत्वशाली हुँदाहुँदै पनि एक ठाउँमा किरणले कमलालाई व्यक्तिगत रूपमा खिसी गर्ने गरी घोच्ने खालको पूरक प्रश्न गरी आहत बनाएका छन् । यहीनेर रेडियो अन्तर्वार्तामा लैंगिक प्रभुत्व र पराधीनताको जटिल अवशेष भेटिन्छ । कसैको मानमर्दन गर्न हुँदैन भन्ने रेडियो संहिताको सामान्य वचन समेत परवाह नगरिएका कारण प्रस्तुत अन्तर्वार्ताको धार अस्वाभाविक तरिकाले असन्तुलित बन्न पुगेको छ ।

अब रह्यो, कार्यक्रम *सञ्जीवनी*को एउटा अन्तर्वार्ताको कुरा । दुर्गा कार्कीले कुसुम ज्ञवाली र भावना पोखरेलसँग लिएको अन्तर्वार्तामा कुसुम ज्ञवालीको एकछत्र प्रभुत्व देखिन्छ । उनले पालो आफैँ लिएर महिलाको प्रजनन स्वास्थ्यबारे भ्रामक कुरा गरेका छन् । उनको बोली नरम छ, विचार सकारात्मक छ, साँस्कृतिक परिवर्तनलाई सही मोड दिँदै आत्मसात गर्ने सद्भावना पनि प्रशंसनीय छ । यति हुँदाहुँदै पनि नजानेको विषयमा समेत निकै जानेको जसरी यताउताका फुँदा गाँसेर बोल्ने उनको बानीले अन्तर्वार्तामा सञ्चारकर्मीदेखि सह स्रोत व्यक्तिसम्मलाई ओझेलमा पारेको छ ।

*अफ्रिकाको जङ्गलको कुनै च्यानलमा देख्नुहोला सिंहको* भन्ने जस्ता वाक्यले कुसुम ज्ञवालीको भनाइलाई हावादारी समेत बनाएका छन् । यस्तो भए पनि दुर्गा र भावनाले उनका कुरालाई जिम्मेवार तरिकाले समयमै हस्तक्षेप गरेर सही मोड दिने प्रयास कतै पनि गरेका छैनन् । यसबाट उनीहरूमा भूमिका, विचार र प्रस्तुति सबै दृष्टिले अस्वाभाविक पराधीनता देखिन्छ । स्रोत व्यक्तिले कार्यक्रम सञ्जीवनीकै मूलमर्मलाई अन्यत्र मोडिसक्दा पनि उनीहरूले सचेतता प्रदर्शन गर्न सकेका छैनन् । यसले गर्दा प्रभुत्व र पराधीनताका दृष्टिले अन्तर्वार्ता सन्तुलित र समतामूलक हुन सकेको छैन ।

यी उदाहरणहरूबाट स्पष्टत: के देखिन्छ भने रेडियो अन्तर्वार्तामा प्रभुत्व र पराधीनता प्रकट हुने कारण लैंगिक होइन । यो वैयक्तिक र अन्य विविध खालका परिस्थिति र प्रभाव मिश्रित प्रवृत्ति हो । कुनै व्यक्ति कुनै विषयमा कुनै समय कसैका अगाडि प्रभुत्वशाली हुनसक्छ भने त्यही व्यक्ति अर्को विषय, अर्को समय र अर्को व्यक्तिका अगाडि पराधीन पनि देखिन सक्छ । साथै, एउटा व्यक्तिले एउटै व्यक्तिसित एउटै विषयमा एउटै समयमा कुरा गर्दा पनि उसको विचार, भूमिका र प्रस्तुतिको आधारमा ऊ फरक खालको देखिने सम्भावना रहन्छ ।

# महिलामा सीमित रहेनन् अब शिष्टता, मिलनसारिता र कोमलता

अनाहकमा अरूलाई दु:खी नतुल्याउने मात्र होइन, आफूलाई छुद्र र निकृष्ट नदेखाउने चाहना भएका व्यक्तिको बोल्ने तरिका शिष्ट हुन्छ । शिष्टता, मिलनसारिता र कोमलता जस्ता असल गुणहरू एकल होस् वा समूह दुवै खालका रेडियो अन्तर्वार्तामा अपेक्षित छन् । शिष्टता, मिलनसारिता र कोमलताको भाषा आचार, विशेषता र लयका माध्यमबाट प्रकट हुने गर्दछ ।

लैंगिक अन्धताले नछाडिसकेका समाजको भाषिक अभिव्यक्तिमा भने शिष्टता, मिलनसारिता र कोमलता जस्ता गुणहरू महिलाका भागमा पर्छन् ।[९] परम्परागत महिलाहरू पनि आफ्नो बोलीमा प्राय: यी गुणहरू झल्कियोस् भन्ने चाहना राख्छन् । यसो गर्दा उनीहरूमा सामान्यत: अनकनाउने र पूरक प्रश्न गर्ने बानीको विकास भएको हुन्छ । त्यस्तो बानी भएका व्यक्तिको बोलीलाई जतिसुकै जीवन्त र व्यावहारिक भए पनि कमजोर भाषा[१०] मान्ने लैंगिक दृष्टिकोण कतिपय समाजमा अझै हटिसकेको छैन । नेपाली समाज पनि त्यस्तो मानसिकताबाट मुक्त भइसकेको छैन ।

९. जापानमा महिलालाई पुरुषभन्दा शिष्ट र लैंगिक रूपमा सचेत भएर बोल्न सिकाउने पाठ्यपुस्तकहरू विद्यालय तहदेखि नै पढाइने गरेको छ । त्यति मात्र होइन जापानी भाषामा लैंगिक वर्ग भिन्नता समेत छ । यो कुरा रुमी वासीले सन् १९२० देखि १९४५ सम्मको कालखण्डलाई लिएर गरेको जापानी महिलाको स्तरीय भाषासम्बन्धी एउटा अध्ययनको अनलाइन संस्करणमा उल्लेख छ । अहिलेका नवयुवती पुस्ताले भने लैंगिक रूपमा विभेदकारी देखिने परम्परागत भाषिक अभिलक्षणहरूलाई प्रयोग गर्न छाडेर समतामूलक अभिलक्षणहरूको प्रयोग गर्न थालेका छन् । यो कुरा उएनो जुन्कोले सन् २००१ मा गरेको एउटा अध्ययनमा पत्ता लागेको हो ।(उएनो सन् २००६)

१०. अमेरिकामा सन् १९७५ मा रोविन ल्याकोफले ल्याङ्ग्वेज एण्ड ओमेन्स प्लेस भन्ने अध्ययनमा महिलाले प्रयोग गर्ने भाषा तल्लो स्तरको हुने निष्कर्ष निकालेका थिए । यो कुरा नर्वर्ट डिट्मरको सम्पादनमा सन् १९७६ मा लण्डनबाट प्रकाशित **सोसियोलिङ्ग्विस्टिक्स** भन्ने पुस्तकमा उल्लेख छ ।

अहिले नेपाल राजनीतिक रूपमा युग परिवर्तनको सङ्घारमा आइपुगेको छ । युगलाई हाँक्ने नै भाषा र भावका माध्यमले हो । भाषा र भावलाई सञ्चारमाध्यमले सार्वजनिक गरिरहेका हुन्छन् । युग परिवर्तनको सङ्घारमा रेडियो सगरमाथाबाट प्रसारित सामग्रीमा परम्परागत विभेदको पर्खाललाई होच्याउँदै समतातिर उन्मुख तुल्याउने प्रसारण शैली निर्देशिका पनि बनेको पाइन्छ । रेडियोको सार्वभौम संहिताले पनि अन्तर्वार्तामा सहभागीहरू कसैलाई पनि लैंगिक मात्र होइन, अन्य कुनै पनि आधारमा अशिष्ट, असहिष्णु र कठोर वा आक्रामक शैलीमा प्रस्तुत हुने व्यावसायिक छूट दिँदैन ।

रेडियो अन्तर्वार्तामा सहभागीहरूको भाषिक प्रवृत्तिलाई शिष्टता, मिलनसारिता र कोमलताको आधारमा लैंगिक कोणबाट विश्लेषण गर्दा मूलत: व्यावसायिक, वैयक्तिक र मिश्रित गरी तीन खालको प्रभाव देखिएको छ । अध्ययनका लागि छुट्ट्याइएका सामग्रीलाई यिनै प्रभावका आधारमा तीन उपशीर्षकमा विभाजन गरेर विश्लेषण गरिएको छ ।

- **व्यावसायिक**

सामुदायिक रेडियोको शैली घोषित रूपमै अनौपचारिक हुनुपर्छ (मैनाली २०६० : ६३) । यसैले पनि होला रेडियो सगरमाथाका अन्तर्वार्ताका सहभागीहरूले व्यावसायिक भूमिकामा सीमित रहेर शिष्टता, मिलनसारिता र कोमलता झल्काउने गरेका उदाहरण कमै मात्र भेटिएका छन् । कुल १६ वटा अन्तर्वार्तामध्ये दुईटा र कुल ३३ सहभागीमा जम्मा दुईजनाको बोलीमा व्यावसायिकताको छनक भेट्न सकिन्छ ।

कार्यक्रम *सह अस्तित्वका* सञ्चारकर्मी किरण पोखरेल र *शिक्षा डबलीकी* स्रोत व्यक्ति नूपुर भट्टाचार्यको व्यावसायिक शिष्टता, मिलनसारिता र कोमलताको मात्राले तुलनात्मक रूपमा अन्य सहभागीलाई उछिनेको छ । अष्टलक्ष्मी शाक्यको बोलीमा शिष्टता र मिलनसारिता कम नभए पनि कोमलताको मात्रा दबेको छ । उनको अभिव्यक्तिमा पाइने दृढ निश्चयी भावले लयलाई प्रभावित गरेको छ । प्रस्तुत अन्तर्वार्तामा किरणले महिलालाई प्रश्न गर्दा देखाउनसक्ने छिचरो प्रवृत्ति लुकाएका छन् । यसले पनि उनको शिष्टता, मिलनसारिता र कोमलताको स्तर व्यावसायिक धरातलबाट खस्किन पाएको छैन ।

कार्यक्रम *शिक्षा डबली*मा चाहिँ नूपुरमा रहेको व्यावसायिक शिष्टताले गोरखबहादुर र लवप्रसादलाई पनि व्यावसायिक तरिकाले प्रस्तुत हुन प्रेरित तुल्याएको पाइन्छ । उनले मिलनसार शैलीमा पालो आफैँ लिएर भए पनि तथ्यहरूलाई आवाजमा कठोरता नझल्काइकन अगाडि ल्याइदिएपछि सञ्चारकर्मी शान्ताको प्रश्नलाई सुरुमै काट्न खोज्ने सरकारी ओहोदाधारी परम्परागत प्रवृत्तिका पुरुषहरू हच्किएका छन् । त्यसपछि उनीहरूको बोलीमा शान्ताको पहिलो प्रश्न सुन्दा नै देखिएको असहिष्णुता र कठोरताले निरन्तरता पाएको छैन । नचाहेर पनि हँसिलो भावमा मिलनसार भएर एक अर्कालाई आदरभाव प्रकट गर्दै कुरा गर्न थालेको स्थितिले उनीहरूको बोलीमा व्यावसायिकताको प्रभाव परेको कुरा सजिलै बुझ्न सकिन्छ ।

यी उदाहरणहरूमा सञ्चारकर्मीको व्यावसायिक प्रतिनिधित्व किरणले गरेका छन् भने स्रोत व्यक्तिको व्यावसायिकताको नेतृत्व नूपुरले गरेकी छन् । यसको अर्थ महिला हुन् या पुरुष व्यावसायिक शिष्टता, मिलनसारिता र कोमलतासँग परम्परादेखि गाँसिएको एकलकाँटे लैंगिक पहिचान हराउन थालेको पनि सहजै बुझ्न सकिन्छ ।

● **वैयक्तिक**

सामुदायिक रेडियोको मानवीय अन्तर्क्रियामा अनौपचारिकता र मित्रवत् व्यवहार अपेक्षित हुन्छ । अध्ययनमा परेका अन्तर्वार्ताहरूमध्ये पाँचवटामा शिष्टता, मिलनसारिता र कोमलताको मात्रालाई वैयक्तिक प्रभावले जितेको पाइन्छ । यस्तो जीत कतै सकारात्मक र कतै नकारात्मक प्रभाव दिने खालको छ ।

कार्यक्रम *सह अस्तित्व*मा एकल अन्तर्वार्ताका सहभागी भावना भट्ट र निमेष अधिकारीको बोलीमा शिष्टता, मिलनसारिता र कोमलताको मात्रा दुवैमा उस्तै उस्तै छ । अन्तर्वार्तामा दुवै उत्तिकै खरो र ठाडो तरिकाले सवाल जवाफ गरिरहेका पाइएका छन् ।

कार्यक्रम *सञ्जीवनी*को एकल अन्तर्वार्ताकी स्रोत व्यक्ति शर्मिला कार्कीमा शिष्टता, मिलनसारिता र कोमलताको मात्रा सञ्चारकर्मी भीम आत्रेयको भन्दा कम रहेको स्पष्ट सुनिन्छ । अन्तर्वार्तामा कैद उनको बोलीमा धेरैजसो समय कठोरताले

जितेको पाइन्छ भने कम समय मात्र कोमलताले । शर्मिलाको, भावनाको र निमेषको बोलीमा व्यावसायिकता कम वैयक्तिक आनीबानीको प्रभाव बढी झल्किएको पाइन्छ ।

*हाम्रो सरोकार* कार्यक्रमको समूह अन्तर्वार्ताकी स्रोत व्यक्ति डा. सुमित्रा मानन्धरको बोलीमा पनि विषयबोधको प्रभावले शिष्टता, मिलनसारिता र कोमलताको मात्रालाई व्यावसायिक स्तरभन्दा तल झारेर वैयक्तिक धरातलमा ल्याइपुऱ्याएको छ । अन्य सहभागीहरू धनकुमारी सुनार र शम्भुजन लिम्बुका तुलनामा कतै कतै उनको शिष्टता, मिलनसारिता र कोमलताको मात्रा कमजोर सुनिन्छ । जोड दिएर बोल्ने, छिट्छिटो बोल्ने, शब्द लट्पट्याएर बोल्ने उनको वैयक्तिक प्रवृत्तिलाई विषयको गहन ज्ञान र दृष्टिकोणको स्पष्टताले भने सहजै उछिनेको छ । उनको अभिव्यक्तिमा भावात्मक पक्ष प्रवल छ ।

यस्तै, कार्यक्रम *सञ्जीवनी*को समूह अन्तर्वार्तामा सञ्चारकर्मी दुर्गा कार्की, स्रोत व्यक्तिहरू कुसुम ज्ञवाली र भावना पोखरेलको बोलीमा शिष्टता, मिलनसारिता र कोमलताको मात्रा उल्लेखनीय पाइएको छ । कुसुमको तुलनामा कतै कतै भावनाको बोलीमा कडापन झल्किन्छ भने कुसुमको बोलीमा कतै पनि कडापन पाइँदैन । दुर्गाले त सञ्चारकर्मीको भूमिका नै बिर्सिए जसरी अत्यावश्यक ठाउँमा समेत हस्तक्षेप नगरेर मिलनसारिताको व्यावसायिक होइन, वैयक्तिक गुण देखाएकी छन् । समग्रमा प्रस्तुत अन्तर्वार्ताका तीनै सहभागीमा व्यावसायिकभन्दा वैयक्तिक प्रवृत्तिको प्रभाव बढी रहेको पाइएको छ । सबैको शिष्ट, मिलनसार र नरम पाराको वैयक्तिक काललाई व्यावसायिक रूपमा मिलान गर्न भने सकिएको छैन ।

अर्कोतिर, *युवा आवाज* कार्यक्रममा लिइएको समूह अन्तर्वार्तामा पनि सरला भट्टराई र अमरबहादुर ओलीको बोलीमा पाइने शिष्टता, मिलनसारिता र कोमलताको मात्रालाई सामान्य तरिकाले तुलना गर्न सकिँदैन । चितवनकी सरला र रुकुमका अमरबहादुरको बोलीमा क्षेत्रीय भाषिका भेद पनि छ । यसले लय, आचार र गुणको भाषामा भेद ल्याउन सक्छ । मानक नेपालीको धारबाट सुन्दा अमरबहादुरको बोलीमा रुकुमेली भाषिकाको सशक्त प्रभाव भेटिन्छ भने सरलाको बोलीमा आंशिक कडापन पाइन्छ । यिनीहरूको बोलीमा पनि

व्यावसायिकभन्दा वैयक्तिक पक्षको बढी प्रभाव रहेको कुरा ठम्याउन भने गारो छैन ।

मिलनसारिता र कोमलताको आधार पनि लैंगिक मात्र होइन भन्ने बुझिन्छ । यस्तो प्रवृत्तिको मात्रा भने अन्य विविध कारणले घटबढ हुनसक्छ । नेपालीमा शिष्ट, सहिष्णु र नरम शैली महिलाहरूका लागि मात्र चलनचल्तीमा छैन भन्ने कुरा रेडियो अन्तर्वार्ताका सहभागीहरूको बोलीबाट पनि पुष्टि हुन्छ । यो सबै खालका लैंगिक पृष्ठभूमिका मानिसका लागि उत्तिकै लागु हुनसक्ने व्यावसायिक र वैयक्तिक विशेषता हो ।

**● मिश्रित**

रेडियो अन्तर्वार्ताका सहभागीहरूको बोलीलाई आचार, गुण र लयका कोणबाट सुन्दा अधिकांश अन्तर्वार्तामा व्यावसायिक र वैयक्तिक शैलीको मिश्रित प्रभाव रहेको पाइएको छ । नौवटा अन्तर्वार्ताका सहभागीहरूमा कतै व्यावसायिक र कतै वैयक्तिक बोलीको प्रभावले शिष्टता, मिलनसारिता र कोमलताको मात्रालाई घटबड गरेको भेटिन्छ । सामुदायिक रेडियोमा व्यावसायिक मर्यादा र वैयक्तिक विशेषताको सम्मिश्रणले अन्तर्वार्तामा जीवन्त प्रभाव थप्ने काम पनि गर्न सक्छ । यस दृष्टिले रेडियो सगरमाथाका बहुसंख्यक अन्तर्वार्ताहरू जीवन्त सुनिएका पनि छन् ।

एकल अन्तर्वार्तातर्फ शान्ता बस्नेतले नरहरि आचार्यसँग *हाम्रो सरोकार* कार्यक्रमका लागि गरेको कुराकानीमा शिष्टता, मिलनसारिता र कोमलताको पाटो सन्तुलित र मर्यादित पाइन्छ । विशुद्ध व्यावसायिक जस्तो नसुनिए पनि निहुँ खोज्ने, हेप्ने, होच्याउने र कठोर तरिकाले प्रस्तुत हुने प्रवृत्ति नरहरिमा छैन । एक ठाउँमा शान्ताले कुरा नबुझेको हो कि भन्ठानेर आएको वैयक्तिक प्रभाव अत्यन्त क्षणिक रहेको देखिन्छ । एउटै विषयमा एकै दिन प्रसारित उर्मिला अर्यालसँग शान्ताले नै गरेको कुराकानी जत्तिको अन्तर्क्रियात्मक नभए पनि नरहरिसँगको शान्ताको कुराकानी असहज जस्तो पनि लाग्दैन । ध्यान दिएर सुन्ने हो भने छुट्टिने बेलामा पनि *हवस् त हस्* भन्ने नरहरिको

आवाजमा व्यावसायिकभन्दा बढी वैयक्तिक शिष्टता, मिलनसारिता र कोमलताको छनक स्पष्ट अनुभव गर्न सकिन्छ ।

यस्तै, *हाम्रो सरोकार* कार्यक्रमकै लागि शान्ताले नै सङ्ग्राम लामासँग लिएको अन्तर्वार्तामा सङ्ग्रामको शालिन अभिव्यक्तिले शिष्टता, मिलनसारिता र कोमलतालाई जोगाइराखेको पाइन्छ । शान्तासित कुरा गर्ने क्रममा *निवेदन गरेँ* भन्ने खालको व्यावसायिकतासहित *हैन ?* भन्ने खालको वैयक्तिक अन्तर्क्रियात्मक अभिव्यक्तिको समेत प्रयोगले अन्तर्वार्तालाई सहज तुल्याएको छ ।

कार्यक्रम *सञ्जीवनी*को कुरा गर्ने हो भने दुर्गा कार्कीले उदय नेपाली श्रेष्ठसँग लिएको होस् वा भीम आत्रेयले दुर्गा सोबसँग, सञ्चारकर्मी र स्रोत व्यक्ति दुवै भूमिकामा रहेका चारैजनामा अधिकांश समय उत्तिकै स्तरको व्यावसायिक र वैयक्तिक शिष्टता, मिलनसारिता र कोमलता पाउन सकिन्छ । एकले अर्कालाई जसरी भए पनि जित्नुपर्छ भन्ने अनपेक्षित प्रतिस्पर्धी भावना कसैमा पनि पाइएको छैन । सञ्चारकर्मी दुर्गाले *म अझै अल्मलिएको छु* भनेर उदय नेपालीको भन्दा पनि बढी मिलनसारिता देखाएको पाइन्छ । श्रोतालाई ध्यानमा राखेर विषयलाई प्रस्ट पार्न स्रोत व्यक्तिलाई आग्रह गर्ने व्यावसायिक स्तरको एकदम नरम शैली हो यो । यस्तै, स्रोत व्यक्ति दुर्गाले पनि *निवेदन गर्न चाहन्छु* भन्ने खालको अभिव्यक्ति प्रयोग गरेर व्यावसायिक शिष्टता देखाएकी छन् । भीम र दुर्गाबीचको कुराकानीको तरंग सुरूमा वैयक्तिक प्रभावका कारण केही समय गडबड जस्तो सुनिए पनि पछि एकदम सहज र सौहार्दपूर्ण शैलीमा अघि बढेर टुंगिएको छ । स्रोत व्यक्ति दुर्गामा केही समय लर्खराउन थालेको मिलनसारिताले भीमको सहिष्णुताका कारण सकारात्मक मोड लिएको छ ।

कार्यक्रम *युवा आवाज*को कुरा गर्ने हो भने चाहिँ पुण्य भण्डारीले लालकुमारी रोका मगरसँग गरेको कुराकानीमा व्यावसायिक र वैयक्तिक प्रवृत्तिको मिश्रण भेटिन्छ । उनीहरू दुवैको शिष्टता, मिलनसारिता र कोमलताको मात्रालाई समान रूपमा अनुभव गर्न सकिन्छ ।

यी उदाहरणहरूले स्पष्टतः सङ्केत गर्ने कुरा के हो भने नेपालीमा शिष्टता, मिलनसारिता र कोमलता जस्ता व्यावसायिक र वैयक्तिक आचार, गुण र

लय झल्काउने भाषिक विशेषताहरू अब महिलाले मात्र बोकेर हिँड्नुपर्छ भन्ने छैन । यसबाट असल स्वभाव भएका पुरुषहरू पनि सार्वजनिक रूपमा आफू छुच्चो देखिन, निहुँ खोज्न, अर्कालाई हेप्न, होच्याउन र कठोर तरिकाले प्रस्तुत हुन चाहँदैनन् भन्ने पुष्टि भएको छ । यसले नेपालको लैंगिक समाज भाषाका माध्यमबाट पनि समताको धरालत नजिक पुग्न थालेको देखाउँछ ।

समूह अन्तर्वार्तातर्फ कार्यक्रम *सह अस्तित्व*मा निमेष अधिकारीले अणबहादुर खड्का र ललिता सिजापतिसँग गरेको कुराकानीलाई केलाउने हो भने अणबहादुर र ललिता दुवै खरा वक्ताका रूपमा प्रस्तुत भएका छन् । निमेषको प्रश्न गर्ने शैली पनि उस्तै खरो छ । उनले एक ठाउँमा ललितालाई *बुझाउन सक्नुभा थे न ?* भनेर एकदम ठाडो तरिकाले हकारे जस्तो सुनिने गरी प्रश्न गरेका छन् । उनले अणबहादुरलाई भने यस हदमा हकारेका छैनन् । यसबाट प्रस्तुत अन्तर्वार्तामा सञ्चारकर्मीले नै शिष्टता र कोमलताको मात्रालाई हुनुपर्नेभन्दा पनि निकै तल झारेर विभेदकारी समेत बनाएको प्रस्ट हुन्छ ।

मिलनसारिताको कुरा गर्ने हो ललिताले प्रसंग मिल्ने ठाउँमा अणबहादुरको भूमिकालाई पनि आदरपूर्वक जोडेर कुरा गरेकी छन् । अणबहादुरले भने सुरूमै आफूलाई श्रोताले निकै जान्ने ठानिदिउन् भन्ने तरिकाले कुरा गरेका छन् । सुन्दै जाँदा उनका कुरा सतही लाग्न थाल्छन् । यसबाट खरो, यथार्थ र स्पष्टवादी भइकन पनि मिलनसारिताका लागि ललिताको स्थान अणबहादुर र निमेषभन्दा अगाडि देखिन्छ ।

कार्यक्रम *सहभागिता*का लागि किरण पोखरेलले कमला न्यौपाने र उपेन्द्र अधिकारीसँग गरेको कुराकानीमा चाहिँ शिष्टता, मिलनसारिता र कोमलताको मात्रा कमलाभन्दा उपेन्द्र र किरणमा बढी पाइएको छ । अन्तर्वार्तामा अधिकांश समय हतारिएर शब्द छुटाउँदै वाक्यांशमा मात्र बोल्ने बानीले कमलाको खरो बोली फड्के शैलीको समेत सुनिन्छ । किरणले पनि कमलालाई पूरक प्रश्न गर्दा एक ठाउँमा शिष्टता तोडेका छन् । विषयबोधमा कमलामा पाइने जति नवीनता नभए पनि उपेन्द्रको बोल्ने तरिका भने सामान्यतः शिष्ट, मिलनसार र नरम नै छ ।

कार्यक्रम *सञ्जीवनी*को लागि दुर्गा कार्कीले लिएको समूह अन्तर्वार्ताका सहभागीहरू अनन्तकुमारी तामाङ, सम्झना तामाङ र मनोज तामाङको बोली सामान्यत: दुर्गाको जस्तै शिष्ट, मिलनसार र नरम नै सुनिन्छ । अनन्तकुमारीको बोलीमा मात्र कतै कतै उतारचढाव भए जस्तो पनि सुनिन्छ ।

यस्तै, पुण्य भण्डारीले कार्यक्रम *युवा आवाज*मा कविन्द्र बुर्लाकोटी र सञ्जू नेपालसँग कुराकानी गर्दा सुरूमा नरम सुनिएको कविन्द्रको बोली पछि कतै कतै कडा पनि सुनिन थाल्छ । भाषण शैलीको व्यावसायिक प्रभावले उनमा रहेको वैयक्तिक कोमलतालाई कतै कतै थिचेको पाइन्छ । बोल्दाबोल्दै एक ठाउँमा सञ्जू अल्मलिएका बेला उनको भनाइलाई नकाटीकनै कविन्द्रले थप जानकारी दिएका छन् । यसबाट कविन्द्रमा मिलनसारिता र शिष्टता कायमै देखिन्छ भने सुरूको कोमलताको मात्रालाई चाहिँ पछि गएर भाषण शैलीले कम गरिदिएको छ । सञ्जूको सामान्यत: शिष्ट र मिलनसार बोलीको रफ्तारमा चाहिँ अन्तर्वार्तामा कतै पनि खासै परिवर्तन आएको चाल पाइँदैन ।

यी उदाहरणहरूबाट पनि के पुष्टि हुन्छ भने समूहमा सार्वजनिक हुँदा पनि शिष्टता, मिलनसारिता र कोमलता जस्ता भाषिक विशेषताहरू मानिसका व्यावसायिक र वैयक्तिक आनीबानीका प्रतीक मात्र हुन् । अबको नेपालमा यिनले एकपक्षीय लैंगिक पहिचानको प्रतिनिधित्व गर्न सक्दैनन् ।

# प्रशंसापरक भाषा : ताल न सुरको अनुकरण पनि

रेडियो अन्तर्वार्तामा औपचारिकताका लागि पनि एकले अर्काको सामान्य प्रशंसा गरेका हुनसक्छन् । कुनै स्रोत व्यक्तिले प्रश्न सुन्नासाथ प्रश्नलाई नै सराएको पनि पाइन्छ । सामान्य शिष्टाचारका लागि प्रयोग गरिने भाषा बाहेक कतिपयले अरूले गरेको सानो कामको पनि बढाइचढाइ गर्न सक्छन् । यस्ता कुराबाट जोगिनु र तटस्थ भएर यथार्थ कुरा सार्वजनिक गर्नु रेडियो अन्तर्वार्ताको धर्म हो । पश्चिमा मुलुकमा अरूका काम र कुराको प्रशंसा गर्ने गुण पुरुषमा भन्दा महिलामा बढी हुन्छ भन्ने कुरा यसअघिका अध्ययनले पुष्टि गरेका छन् ।[११] युगले नै काँचुली फेर्न थालेको नेपालमा चाहिँ त्यो कुरा कत्तिको मिल्छ त ? रेडियो सगरमाथाबाट प्रसारित अन्तर्वार्ताका नमूना सामग्रीमा पाइएका प्रशंसापरक अभिलक्षणहरूको परीक्षण गर्दा केही मौलिकता पनि भेटिएको छ ।

अन्तर्वार्तामा स्रोत व्यक्तिलाई सञ्चारकर्मीले सुरुमा स्वागत र अन्त्यमा धन्यवाद प्रकट गर्ने र स्रोत व्यक्तिले त्यसको प्रत्युत्तर दिनेबाहेक स्वेच्छाले कतिपय सहभागीले विविध खालका प्रशंसापरक भाषाको प्रयोग गर्ने गरेको पाइएको छ । कुल १६ वटामध्ये १० वटा अन्तर्वार्तामा यस्तो भाषाको प्रयोग भएको छ भने बाँकी ६ वटामा स्वागत र धन्यवादको सामान्य औपचारिकता मात्रै प्रयोग भएको छ । प्रस्तुत अध्ययनमा प्रश्नोत्तरको प्रशंसा, सम्मानजनक सम्बोधनसहित सहमति र सराहना मात्र होइन, माध्यमप्रति आभार प्रकट गर्ने क्रममा प्रयोग भएका प्रशंसापरक भाषाको पनि लैंगिक प्रवृत्ति केलाइएको छ ।

- **प्रश्नोत्तरको प्रशंसा**

अधिकांश सहभागीले अन्तर्वार्तामा सोधिएका अधिकांश प्रश्नमा सोझै जवाफ दिने गरे पनि यदाकदा कसैले प्रश्नको र कसैले उत्तरको प्रशंसा गर्दै आफ्ना कुरा राखेका छन् । कार्यक्रम *सह अस्तित्व*मा स्रोत व्यक्ति भावना भट्टले संविधानसभा निर्वाचनमा आचार संहिता उल्लङ्घनसम्बन्धी सञ्चारकर्मी निमेष अधिकारीको प्रश्न सुनेपछि *अ तपाईंले एकदम ठिक कुरा उठाउनुभको छ ।* भनेर प्रश्नको

११. कोट्स, जेन्निफरले सन् १९८३ मा गरेको अध्ययनबाट यो कुरा पत्ता लागेको हो ।

प्रशंसा गरेको पाइन्छ । यस्तै, समूह अन्तर्वार्ताको कुरा गर्ने हो भने पनि कार्यक्रम *सहभागिता*मा स्रोत व्यक्ति उपेन्द्र अधिकारीले ज्यादै प्रश्न उठाउनु भो *किरनजीले* भनेर जवाफ दिन थालेका छन् । सो अन्तर्वार्तामा कमला न्यौपानेले भने कतै पनि प्रशंसाको भाषा प्रयोग गरेको पाइँदैन ।

कार्यक्रम *युवा आवाज*मा चाहिँ सञ्चारकर्मी पुण्य भण्डारीले ब्रेक लिने बेलामा लालकुमारी रोका मगरको कुराको पटक पटक प्रशंसा गर्दै अन्तर्वार्तालाई अघि बढाएका छन् । उनले समूह अन्तर्वार्तामा सहभागी कसैको पनि त्यसरी प्रशंसा गरेका छैनन् । *निकै सशक्त कुरा भइरहेको छ* भन्ने पुण्यको प्रशंसापरक शब्दको भण्डार भने एकदम विपन्न रहेको छर्लंग हुन्छ । लालकुमारीको परिपक्व जवाफ र कुरा गर्ने शैलीबाट उनी प्रभावित भएका कुरा लुकाउन सकेका छैनन् । त्यसलाई प्रकट गर्दा भने जतिपटक पनि उनको वाक्य र तरिका एउटै हुन्छ । अन्त्यमा चाहिँ लालकुमारीले पनि प्रशंसाको प्रत्युत्तरमा केही शब्द खर्चिदिएकी छन् ।

यी उदाहरणहरूबाट के प्रस्ट हुन्छ भने रेडियो अन्तर्वार्तामा प्रश्न र उत्तरको लागि प्रशंसाका शब्दहरू खर्च गर्नु स्वेच्छिक मात्र हो । यसको प्रयोगले भने सहभागीको लैंगिक पहिचानको सीमा मात्र होइन, भूमिकाको पहाड समेत पार गरेको देखिन्छ । यसैले पनि प्रशंसापरक भाषा बोल्ने प्रवृत्तिलाई लैंगिक र पेसागत नभएर वैयक्तिक प्रवृत्ति मात्र हो भन्न सकिन्छ ।

**● सम्मानजनक सम्बोधनसहित सहमति र सराहना**

कतिपय अन्तर्वार्तामा सम्मानजनक सम्बोधनका माध्यमबाट पनि प्रशंसापरक भाव अभिव्यक्त भएका छन् । यस क्रममा धेरैजसो सहभागीले एक अर्काको नाम लिएर त्यसका पछाडि *जी* लगाउने गरेको पाइएको छ । पतिले पत्नीलाई नामका पछाडि *जी* लगाएर सम्बोधन गरेको अन्तर्वार्ता पनि भेटिएको छ । कसै कसैले चाहिँ *सर* र *म्याडम* जस्ता विभेदपूर्ण तरिकाले लैंगिक पहिचान दर्साउने अङ्ग्रेजी सम्बोधन प्रयोग गर्दै नेपाली प्रशंसा भाव प्रकट गर्न खोजेका छन् ।

कार्यक्रम *सञ्जीवनी*को समूह अन्तर्वार्तामा सहभागी दम्पती कुसुम ज्ञवाली र भावना पोखरेलमा एकले अर्कालाई सराउने प्रवृत्ति देखिन्छ । *सञ्जीवनी*कै एकल

अन्तर्वार्तामा भीम आत्रेय र दुर्गा सोबका बीचमा प्रत्यक्ष प्रशंसाका अभिलक्षण नभए पनि अधिकांश समय अत्यन्त सौहार्दपूर्ण शैलीमा कुराकानी भएको छ। कार्यक्रम *शिक्षा डबली*को कुरा गर्ने हो भने चाहिँ प्रशंसापरक भाषाको रणनीतिक तरिकाले समेत प्रयोग भएको पाइन्छ। नूपुर भट्टाचार्यले एक ठाउँमा लवप्रसाद त्रिपाठीलाई लक्ष्य गरेर भनेकी छन् :

> *बडो खुसी लाग्यो त्रिपाठी सर सुनेर कि साउथ एसियामा हामी अगाडि छौँ तर ..... बालबालिकाको घरघर गएर काम गर्छौं सर, हाम्रो पीर के छ भन्देखि.... ।*

यसैगरी उनले गोरखबहादुर सिंहलाई लक्ष्य गरी भनेकी छन्  :

> *एकदम सही हो अघि गोरखजीले भन्नुभयो नि, धेरै परिवर्तन आएको छ समाहित शिक्षामा। म एकदम सहमत छु। .... तर त्यसैमा त सन्तुष्टि लिएर बसेपछि त अरू बार लाखको स्थिति के हुन्छ भन्ने हाम्रो कन्सर्नको कुरा हो।*

यी दुई उदाहरणमा त्रिपाठी र सिंहको कुराको प्रशस्ती गाउने काम नगर्दा नगर्दै पनि सुरूमा प्रशंसा र सहमतिको भाषा जडान गरिएको छ। त्यसपछि राखिएका कुरालाई ध्यान दिने हो भने अन्तर्वार्तामा अर्कालाई नदच्काइकन आफ्ना कुरा दरो गरी राख्ने शैलीको सुरूमा पनि प्रशंसा उनिएको हुनसक्छ भन्ने देखाउँछ। जे होस्, *नूपुर म्याडमले जुन भन्नुभयो नि ...* भन्दै त्रिपाठी र सिंहले पनि आफ्ना कुरा अघि बढाएका छन्। यसबाट सम्मानजनक सम्बोधन गर्दै अन्तर्वार्तालाई सौहार्दपूर्ण तरिकाले अघि बढाउन पनि कुनै व्यक्तिको लैंगिक पृष्ठभूमि मात्र कारक हुनसक्दैन भन्ने प्रस्ट हुन्छ।

**● माध्यमप्रति आभार**

रेडियो अन्तर्वार्तामा सहभागी हुँदा सामान्य कुराकानी गर्दाभन्दा फरक अनुभव गर्ने मानिस पनि हुनसक्छन्। कतिपय सहभागीहरू माइक्रोफोनको अगाडि

बोल्दा नेताले भाषण गरे जस्तै गर्नुपर्छ र प्रशंसाको भाषा बोल्नैपर्छ भन्ने मानसिकताले ग्रसित भएका पनि पाइएका छन् ।

कार्यक्रम *सह अस्तित्व*को समूह अन्तर्वार्ताका सहभागी अणबहादुर खड्काले अन्तर्वार्तामा सहभागी हुन पाएकामा अन्त्यमा रेडियो सगरमाथालाई धन्यवाद दिन छुटाएका छैनन् भने *युवा आवाज* कार्यक्रमको समूह अन्तर्वार्ताका सहभागी अमरबहादुर ओलीले सुरूमै स्टुडियोको प्रशंसा गरेका छन् ।

माध्यमप्रति आभार प्रकट गर्ने बेला कतिपयलाई असहज लागेको पनि हुनसक्छ भन्ने कुरा अणबहादुरको अलमलले देखाउँछ । उनले रेडियो सगरमाथालाई दिनुपर्ने धन्यवाद *रेडियो सगरमाथाको तर्फबाट* भन्न पुगेका छन् । यस खालको अलमल ललितामा भने पाइँदैन ।

प्रशंसापरक भाषा प्रयोग गर्न खोज्ने तर ढंग नपुऱ्याउने बानी पुण्य भण्डारीमा पनि छ । उनले सुरूमा लालकुमारीलाई *स्वागत* भन्नुपर्ने बेला नै *धन्यवाद* भनिदिएका छन् । गल्ती भएको मतलव नै नगरी कुरा घुमाएर *स्वागत गर्छु* भनेको पनि सुनिन्छ । जे होस्, माध्यमप्रति आभार प्रकट गर्ने र होस् नपुर्‍याउने कुरामा चाहिँ महिलाभन्दा पुरुष अगाडि रहेका पाइएका छन् । यस्तो हुनुको कारण पनि लैंगिक नभएर उनीहरूको व्यक्तिगत आनीबानी जिम्मेवार देखिन्छ ।

# लैङ्गिक शैलीको निष्कर्ष र सुझाव

समाजभाषाविज्ञानमा प्रतिपादित दस लैंगिक सूत्रहरूका आधारमा रेडियो सगरमाथाका अन्तर्वार्ताको विश्लेषण गर्दा लैंगिक असमानताको परम्परागत खाडल धेरै हदसम्म पुरिनै लागेको देखिन्छ । अल्पतम प्रत्युत्तर, प्रश्नात्मक अभिव्यक्ति, पालो लिने दिने, विषय बदल्ने, आत्मप्रकाशन, मौखिक आक्रमण, श्रवण र सचेतता, प्रभुत्व र पराधीनता, शिष्टता, मिलनसारिता र कोमलताका साथै प्रशंसापरक भाषाको प्रयोगमा लैंगिक विभेदका अवशेषहरू कमै भेटिएका छन् । अन्तर्वार्तामा भेदभावको तुलनामा समभावले नै जितेको पाइएको छ । नगण्य नै भए पनि सामाजिक लिंगभेदका घातक अवशेषहरूले रेडियो सगरमाथाबाट प्रसारित अन्तर्वार्ताका कतिपय अंशलाई विभेदकारी बनाउन भने छाडेका छैनन् । त्यस्ता अवशेषको उन्मूलनमा स्टेसन व्यवस्थापनदेखि सञ्चारकर्मी, स्रोत व्यक्ति र श्रोताले चारैतिरबाट विशेष ध्यान दिनु र पहल गर्नु जरुरी छ ।

रेडियो अन्तर्वार्तामा जवाफ फर्काउने, प्रश्न प्रतिप्रश्न गर्ने, पालो लिने दिने, विषय मोड्ने वा बदल्ने, आत्म प्रकाशन गर्ने वा नगर्ने, घोचपेच गर्ने वा नगर्ने, सक्रिय भएर सुन्ने वा नसुन्ने, प्रभुत्व जमाउने, तटस्थ हुने वा पराधीन रहने, कत्तिको शिष्ट र मिलनसार हुने, प्रशंसा गर्ने वा नगर्ने जस्ता कुरा लैङ्गिक नभएर व्यक्तिगत, पेशागत र समाजका अन्य विविध पक्षबाट निर्देशित भएको पाइन्छ ।

कतिपय महिलाहरू पुरुष सञ्चारकर्मीका प्रश्नबाट सन्तुष्ट छैनन् । उनीहरू विषयलाई व्यावहारिक तरिकाले इमान्दारीपूर्वक उठाउन चाहन्छन् र त्यसरी उठाइएको प्रश्नलाई रुचाउँछन् । पुरुषमा यो गुणको कमी देखिएको छ ।

कतिपय स्रोत व्यक्ति महिलाहरूलाई महिला भएकै कारण कोसेर प्रश्न गर्ने सञ्चारकर्मी पनि छन् । यो आचारसंहिता र शैली निर्देशिका विपरीतको व्यवहार हो ।

एउटै अन्तर्वार्तामा महिलालाई आर्थिक, राजनीतिक कुराबाट टाढै राख्ने र शारीरिक, शैक्षिक कुरामा मात्र सीमित देख्ने सञ्चारकर्मीको प्रश्नले सञ्चारमाध्यममा अझै पनि सुधार्न नसकिएका लैंगिक विभेदकारी त्रुटिका अवशेषको प्रतिनिधित्व गरेको छ ।

अन्तर्वार्तामा विषयलाई व्यापकता प्रदान गर्दै यथार्थको गहिराईमा पुर्‍याएर भनाइ राख्ने व्यक्ति नगण्य भए पनि महिलाहरू अगाडि छन् । सामान्यत: पुरुषहरूले प्रश्नलाई पालो भनेर बुझ्ने र महिलाहरूले विषयको गम्भीरतालाई पनि ख्याल गर्ने कुरा पनि पत्तो लागेको छ ।

बहुसंख्यक महिलाहरू व्याकरणले स्त्रीलिंगी मानेका इकारान्त क्रियापद प्रयोग गर्ने गरी आत्म प्रकाशन गर्न चाहँदैनन् वा गर्दैनन् । आत्म प्रकाशनमा महिलाहरू तुलनात्मक रूपले पछि रहेका छन् ।

अन्तर्वार्तामा मौखिक आक्रमणको रेडियो सँस्करण भेटिएको छ । एकातिर विद्यावारिधिसम्म पढेलेखेका, अनुभव र ज्ञानले खारिएका जिम्मेवार महिलालाई पनि पुरुषले चुनौती दिन खोजेका छन् भने अर्कातिर युगान्तकारी परिवर्तनको मोडमा पुगिसकेका महिलाहरू ईटको जवाफ पत्थरले दिने शैलीमा उत्रिएका छन् । फरक लैंगिक दृष्टिविन्दुका कारण उनीहरूबीचमा नरम शैलीमा गरम कुरा गर्ने प्रवृत्तिको विकास भएको हुनसक्छ ।

अन्तर्वार्तामा सहभागीको भूमिका र लिङ्गको बार तोडिएको पनि छ । सञ्चारकर्मीको भूमिकामा रहेकी महिलाको भनाइ चिप्लिँदा स्रोत व्यक्तिको भूमिकामा रहेका पुरुषले सच्याइदिएका छन् भने स्रोत व्यक्तिको भूमिकामा रहेका पुरुषको भनाइ अल्मलिँदा सञ्चारकर्मीको भूमिकामा रहेकी महिलाले सच्याइदिएको देखिन्छ । यो समतामूलक उदाहरण हो ।

अन्तर्वार्तामा प्रभुत्व र पराधीनताको लैंगिक आधार कमजोर भइसके पनि विचार, भूमिका र प्रस्तुतिको आधारमा एउटै व्यक्ति कहिले प्रभुत्वशाली देखिएको छ भने कहिले पराधीन । सानो भए पनि रेडियो अन्तर्वार्तामा रहेसहेको लैंगिक प्रभुत्व र पराधीनताको जटिल अवशेष मेट्न भने बाँकी नै छ ।

कतिपय सहभागीहरू माइक्रोफोनको अगाडि नेताले भाषण गरे जस्तै प्रशंसाको भाषा बोल्नुपर्छ भन्ने मानसिकताले ग्रसित भएका पनि छन् । माध्यमप्रति आभार प्रकट गर्ने र होस् नपुर्‍याउने कुरामा चाहिँ महिलाभन्दा पुरुष अगाडि देखिन्छन् ।

नेपालीमा शिष्ट, सहिष्णु र नरम शैली अब महिलाहरूका लागि मात्र होइन । पुरुषहरू पनि सार्वजनिक रूपमा आफू छुच्चो देखिन, निहुँ खोज्न, अर्कालाई हेप्न,

होच्याउन र कठोर तरिकाले प्रस्तुत हुन चाहँदैनन् । अबको नेपालमा शिष्टता, मिलनसारिता र कोमलता जस्ता गुणले एकपक्षीय लैंगिक पहिचान दिन नसक्ने देखिएको छ ।

नेपालको लैंगिक समाज भाषाका माध्यमबाट पनि समताको नजिक पुग्न थालेको देखिन्छ । रेडियो अन्तर्वार्तामा घुसेका भाषिक, संवाद र लैङ्गिक विभेदका रहलपहल कमी कमजोरीलाई सचेतता र कठोरतापूर्वक हटाउने हो भने समतामूलक समाज नेपालीको घरआँगनमै आइसकेको अनुभव गर्न अर्को पुस्ता कुर्नु पर्दैन । सामुदायिक रेडियोका माध्यमबाट यो काम झनै प्रभावकारी तरिकाले गर्न सकिन्छ ।



# सन्दर्भ सामग्री


**नेपाली**

अधिकारी, हरिकला । २०६४ । रेडियोमा महिला बोली : समाजभाषावैज्ञानिक अध्ययन । स्नातकोत्तर शोधपत्र, नेपाली, त्रि.वि. ।

उप्रेती, पवनप्रकाश । २०६५ । नेपालमा एफएम रेडियो प्रसारण : फ्रिक्वेन्सी अवस्था र व्यवस्था । *स्वतन्त्र रेडियोको एक दशक : विकास, बहस र सामाजिक सरोकार* । देवराज हुमागाईं, प्रत्यूष वन्त र कोमल भट्ट, सं., पृ. ६७-९१ । काठमाडौं : मार्टिन चौतारी ।

दाहाल, काशीराज । २०५८ । *आमसञ्चार र कानुन ।* काठमाडौं : नेपाल प्रेस इन्स्टिच्युट ।

पन्त ब्रदर्स । ? । *श्री ५ को सरकारका नीतिहरू (संकलन)* । काठमाडौं : एशिया पब्लिकेसन्स ।

पोखरेल, बालकृष्ण पोखरेल । २०४० । *राष्ट्रभाषा* (चौथो संस्करण) । काठमाडौं : साझा प्रकाशन ।

पौड्याल, बद्री । २०६० । *रेडियो कार्यक्रम* । काठमाडौं : सामुदायिक रेडियो सहयोग केन्द्र, नेपाल वातावरण पत्रकार समूह ।

प्रेस काउन्सिल नेपाल । २०६४ । *पत्रकार आचार संहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४)* ।

भट्ट, कोमल । २०६२ । एफएम रेडियोमा हुर्कंदो अन्तर्क्रिया । *रेडियो पत्रकारिता : एफएममा समाचार र संवाद* । प्रत्यूष वन्त, शेखर पराजुली, देवराज हुमागाईं, कोमल भट्ट र कृष्ण अधिकारी, सं., पृ. ३३३-३९७ । काठमाडौं : मार्टिन चौतारी ।

भट्टराई, रोहिणी प्रसाद । २०६३ । *बृहद् नेपाली व्याकरण* । काठमाडौं : नेराप्रप्र ।

मेयसनीयर, पौलदे, संकलन तथा सम्पादन । सन् १९८९ । *यो समाचार हो : रेडियो समाचार निर्देशिका* (नेपाली अनुवाद) । काठमाडौं : मोडर्न पब्लिशर्स एण्ड डिष्ट्रिब्युटर्स ।

मैनाली, रघु, ओम खड्का, बद्री पौड्याल र हरिकला अधिकारी । २०५८ । *सामुदायिक रेडियो प्रसारण निर्देशिका* । काठमाडौं : सामुदायिक रेडियो सहयोग केन्द्र, नेपाल वातावरण पत्रकार समूह ।

मैनाली, रघु । २०५९ । *रेडियो वचन* । काठमाडौँ : नेपाल प्रेस इन्स्टिच्यूट ।

मैनाली, रघु । २०६० । *रेडियो पद्धति* । काठमाडौं : नेपाल प्रेस इन्ष्टिच्युट ।

यादव, योगेन्द्रप्रसाद र भीमनारायण रेग्मी । २०५८ । *भाषाविज्ञान* । काठमाडौँ : न्यु हिरा बुक्स इन्टरप्राइजेज ।

लुइँटेल, घमराज । हालचालको हालचाल । *रेडियो पत्रकारिता : एफएममा समाचार र संवाद* । प्रत्यूष वन्त, शेखर पराजुली, देवराज हुमागाईं, कोमल भट्ट र कृष्ण अधिकारी, सं., पृ. २२५-२६६ । काठमाडौँ : मार्टिन चौतारी ।

शर्मा, मोहनराज । २०३६ । *शब्द रचना र वर्णविन्यास* । काठमाडौं, पाठ्यक्रम विकास केन्द्र, त्रि. वि. ।

हुमागाईं, देवराज । २०६५ । एफएम रेडियो र यससम्बन्धी बहसको दिशा । *स्वतन्त्र रेडियोको एक दशक : विकास, बहस र सामाजिक सरोकार ।* देवराज हुमागाईं, प्रत्यूष वन्त र कोमल भट्ट, सं., पृ. १-१३ । काठमाडौं : मार्टिन चौतारी ।

हुमागाईं, देवराज । २०६५ । नीतिगत र कानूनी अन्योबीच नेपालका सामुदायिक रेडियो । *स्वतन्त्र रेडियोको एक दशक : विकास, बहस र सामाजिक सरोकार ।* देवराज हुमागाईं, प्रत्यूष वन्त र कोमल भट्ट, सं., पृ. ३२-६६ । काठमाडौं : मार्टिन चौतारी ।

**अङ्ग्रेजी**

Baalen, Irene van. 2001. *Male and female language: growing together? Available at http://*www.let.leidenuniv.nl/hsl-shl/van%20Baalen.htm. Accessed on 5 october 2007.

Cabrera-Balleza, Mavic. *Community media by and for women – a challenge to fulfil the promise.* Available at http://www.reclaimthemedia.org/grassroots_media/community_media_by_and_for_wom=3D5250. Accessed on 10 October 2007

Coates, Jennifer. 2004. *Women, Men and Language,* London. Longman.

Hudson, R.A. 1999. Sociolinguistics (Reprint). Cambridge : Cambridge University Press.

Merill, John C, John Lee and Edward Jay “riedlander. 1990. *Modern Mass Media.* New York : HarperCollins Publishers.

Miller, Casey and Kate Swift. 1997. *Words and Women: New Language in New Times.* New York : Anchor Books.

Norbert, Dittmar. 1976. *Sociolinguistics* (Translated Edition). London : Edward Arnold (Publishers) Ltd.

Nunberg, Geoffrey. 2007. The Language of Eve : '“resh Air' Commentary, http://people.ischool.berkeley.edu/~nunberg/beckies.html (05 october 2007)

radiOrakel herstory. Available at http://www.radiorakel.no/main/English. Accessed on 10 Oct, 2007.

Spolsky, Bernard. 1998. *Sociolinguistics.* New York : Oxford University Press.

Suleiman, Camelia and Daniel C. O'Connel. 2007. *Gender Differences in the Media interviews of Bill and Hillary Clionton. Available at* http://www.springerlink.com/content/t31th6303033q686/ Accessed on 15 November 2008.

Trudgill, Peter. 1995. *Sociolinguistics: An Introduction to Language and Society.* London : Penguin Books.

Ueno, Junko. 2006. *Shojo and Adult Women: A Linguistic Analysis of Gender Identity in Manga (Japanese Comics)*. Available at http://goliath.ecnext.com/coms2/ summary_0199-5639651_ITM website. Accessed on 5 October 2007.

Uganda Media Women Association. ?. *101.7 MAMA "M - Community Radio.* Available at http://www.interconnection.org/umwa/community_radio.html. Accessed on 15 November 2008.

Wardhaugh, Ronald. 1986. *An Introduction to Sociolinguistics.* United Kingdom. Basic Blackbell Limited.

Washi, Rumi. 2004. *The Construction of Standard Japanese women's language from 1920's to 1945*. Available at http://webhost.ua.ac.be/tisp/viewabstract.php?id=152. Accessed on 5 October 2007.

Westley, Bruce H. 1980. *News Editing* (Third Edition). New Delhi : Oxford and IBH Publishing Co.

Wikipedia, the free encyclopedia, 2008. *Interactional Sociolinguistics.* Available at en.wikipedia.org/wiki/sociolinguistics. Accessed on 6 August 2008.

Women's International League for Peace and "reedom. 2004. *"IJI: NEW MOBILE WOMEN'S COMMUNITY RADIO PROJECT.* Available at http://peacewomen.org/news/"iji/May04/radio.html. Accessed on 15 November 2008.

